# रत्नप्रसाद अनामणि श्रेष्ठको जीवनी, व्यक्तित्व र कृतित्व

त्रिभुवन विश्वविद्यालय मानविकी तथा सामाजिक शास्त्र

सङ्काय पशुपति बहुमुखी क्याम्पस

नेपाली विभाग, स्नातकोत्तर तह

द्वितीय वर्षको दसौँ पत्रको

प्रयोजनका लागि

प्रस्तुत

## शोधपत्र

**शोधार्थी**

दीपेन्द्र पौडेल

नेपाली विभाग

पशुपति बहुमुखी क्याम्पस

चाबहिल, काठमाडौँ

२०७४

# शोधनिर्देशकको सिफारिस

त्रिभुवन विश्वविद्यालय, मानविकी तथा सामाजिक शास्त्र सङ्काय पशुपति बहुमुखी क्याम्पस नेपाली विभाग, एम.ए. दोस्रो वर्षका छात्र दीपेन्द्र पौडेलले **रत्नप्रसाद अनामणि श्रेष्ठको जीवनी, व्यक्तित्व र कृतित्व** शीर्षकको प्रस्तुत शोधपत्र मेरो निर्देशनमा तयार पार्नुभएको हो । उहाँले निकै परिश्रमपूर्वक तयार पार्नुभएको यस शोधकार्यबाट म सन्तुष्ट  छु । यसको समुचित मूल्याङ्कनका लागि पशुपति बहुमुखी क्याम्पस, नेपाली विभागसमक्ष सिफारिस गर्दछु ।

मिति : २०७४/१२/०९

............................

डा. शैलेन्द्रप्रकाश नेपाल

शोधनिर्देशक

# पशुपति बहुमुखी क्याम्पस
# नेपाली विभाग
# चाबहिल, काठमाडौँ

## स्वीकृतिपत्र

त्रिभुवन विश्वविद्यालय, मानविकी तथा सामाजिक शास्त्र सङ्काय अन्तर्गत पशुपति बहुमुखी क्याम्पस, नेपाली स्नातकोत्तर तह द्वितीय वर्षको छात्र छात्र दीपेन्द्र पौडेलद्वारा तयार पारिएको प्रस्तुत **रत्नप्रसाद अनामणि श्रेष्ठको जीवनी, व्यक्तित्व र कृतित्व** शीर्षकको शोधपत्र स्नातकोत्तर तह द्वितीय वर्षको दसौँ पत्रको प्रयोजनका लागि उपयुक्त भएकाले स्वीकृत गरिएको छ ।

**शोधपत्र मूल्याङ्कन समिति**

| ............................... | ............................. | ................................. |
| --- | --- | --- |
| डा. शैलेन्दुप्रकाश नेपाल | सहप्रा. ध्रुवप्रसाद भट्टराई | डा.विष्णुकुमार खत्री |
| शोध निर्देशक | बाह्य परीक्षक | विभागीय प्रमुख |

मिति : २०७४/१२/१६

सन् : ३०/०३/२०१८

# कृतज्ञता ज्ञापन

**रत्नप्रसाद अनामणि श्रेष्ठको जीवनी, व्यक्तित्व र कृतित्व** शीर्षकमा प्रस्तुत शोधपत्र मैले आदरणीय गुरु डा. शैलेन्दुप्रकाश नेपालको निर्देशनमा तयार पारेको हुँ । शोधपत्र तयार पार्ने क्रममा आफ्नो व्यस्तताका बिच पनि मलाई आफ्नो अमूल्य समय दिई मार्गनिर्देशन गर्नुहुने मेरा निर्देशक आदरणीय गुरूप्रति हार्दिक कृतज्ञता ज्ञापन गर्दछु ।

त्यसैगरी शोधशीर्षक तथा शोध प्रस्ताव स्वीकृत गरी यस शोधकार्यको लेखनका क्रममा आवश्यक सल्लाह दिनुहुने पशुपति बहुमुखी क्याम्पस, चाबहिल, नेपाली विषयको स्नातकोत्तर कार्यक्रमका विभागीय प्रमुख आदरणीय गुरु डा. विष्णुकुमार खत्री तथा अन्य आदरणीय गुरुहरू ध्रुवप्रसाद भट्टराई, हरिहर चापागाईं, छन्दविनोद दाहाल, भूपहरि पौडेलका साथै नेपाली विभागका अन्य गुरुहरूमा आभार व्यक्त गर्दछु ।

यस शोधकार्यमा विशेष सहयोग पुऱ्याउनु हुने आदरणीय बुबाआमा राधाकृष्ण पौडेल तथा देवी पौडेलमा हार्दिक आभार व्यक्त गर्न चाहान्छु । साथै शोधकार्यको प्रारम्भदेखि शोधपत्र तयार नहोउन्जेलसम्म मार्गनिर्देशन तथा हौसला प्रदान गर्ने श्रद्धेय दाजु महेन्द्र पौडेल, आदरणीय काका विनोद पौडेल, भाइ सागर तथा जीवनसङ्गिनी प्रमिला लामिछानेप्रति आभार व्यक्त गर्दछु ।

यसैगरी शोधकार्यको तयारीका क्रममा आवश्यक सामग्री उपलब्ध गराई सहयोग गर्नुहुने आदरणीय शोधनायक रत्नप्रसाद अनामणि श्रेष्ठलाई पनि हार्दिक आभार प्रकट गर्न चाहान्छु । शोधपत्र तयारीका क्रममा आवश्यक सामग्री उपलब्ध गराउने पशुपति बहुमुखी क्याम्पस पुस्तकालय, नेपाल प्रज्ञा प्रतिष्ठान पुस्तकालयका साथै अन्य सङ्घ संस्थाप्रति पनि हार्दिक कृतज्ञता ज्ञापन गर्दछु ।

टङ्कण कार्यमा सहयोग गर्नुहुने बहिनी स्वइच्छा पौडेल तथा अन्य कार्यमा आवश्यक सहयोग गर्ने मित्रहरू हरि पोखरेल, अजित अर्याल तथा प्रदीप खड्गीप्रति पनि आभार व्यक्त गर्न चाहान्छु । अन्तमा यस शोधपत्रको समुचित मूल्याङ्कन गर्नका लागि पशुपति बहुमुखी क्याम्पस, नेपाली विभाग समक्ष प्रस्तुत गर्दछु ।

...............................

**शोधार्थी**

दीपेन्द्र पौडेल

स्नातकोत्तर तह द्वितीय वर्ष

पशुपति बहुमुखी क्याम्पस

चाबहिल, काठमाडौँ

त्रि.वि.द.नं.: ६-२-२७७-१३-२००८

परीक्षा क्रमाङ्कन : २७८०००३

शैक्षिक वर्ष : २०६९/७०

क्याम्पस रोल नं.: २०

मिति : २०७४/१२/०५

सन् : १९/०३/२०१८

# विषयसूची

**शीर्षक** **पृष्ठ**

## परिच्छेद एक

## शोध परिचय

१.१ विषय परिचय १
१.२ समस्या कथन २
१.३ उद्देश्य कथन २
१.४ पूर्वकार्यको समीक्षा ३
१.५ शोधको औचित्य तथा महत्त्व ६
१.६ शोध सीमा ६
१.७ शोध विधि ६
१.७.१ सामग्री संकलन विधि ६
१.७.२ सामग्री विश्लेषण विधि/अध्ययन ६
१.८ शोधपत्रको रूपरेखा ७

## परिच्छेद दुई

## रत्नप्रसाद अनामणि श्रेष्ठको जीवनी

२.१ जन्म तथा जन्मस्थान ८
२.२ पुर्ख्यौली तथा पारिवारिक पृष्ठभूमि ८
२.३ बाल्यकाल ९
२.४ शिक्षा ११
२.५ वैवाहिक जीवन र सन्तान १३
२.६ आर्थिक अवस्था १३
२.७ दिनचर्या र अभिरुचि १५
२.८ स्वभाव १७
२.९ विचार १८
२.१० बसोबास १८

२.११ भ्रमण १९
२.१२ प्रेरणा र प्रभाव १९
२.१२.१ साहित्यिक प्रेरणा र प्रभाव १९
२.१२.२ शैक्षिक प्रेरणा र प्रभाव १९
२.१३. लेखन र प्रकाशनको थालनी २०
२.१३.१ साहित्यिक (लेखन र प्रकाशनको थालनी) २०
२.१३.२ साहित्येतर (लेखन र प्रकाशनको थालनी) २०
२.१३.३ हालसम्म प्रकाशित कृतिहरू २१
२.१४ संलग्न सङ्घ संस्थाहरू २२
२.१५ सम्मान तथा पुरस्कार २३
२.१६. निष्कर्ष २५

**परिच्छेद तीन**

## रत्नप्रसाद अनामणि श्रेष्ठको व्यक्तित्व

३.१ पृष्ठभूमि २७
३.२ साहित्यिक व्यक्तित्व २७
३.२.१ कवि व्यक्तित्व २८
३.२.२ मुक्तककार व्यक्तित्व २८
३.२.३ हाइकुकार व्यक्तित्व २९
३.२.४ गजलकार व्यक्तित्व ३०
३.२.५ जीवनीकार व्यक्तित्व ३०
३.२.६ निबन्धकार व्यक्तित्व ३१
३.३ साहित्येतर व्यक्तित्व ३१
३.३.१ शारीरिक व्यक्तित्व ३२
३.३.२ अध्ययनशील व्यक्तित्व ३२
३.३.३ समाजसेवी व्यक्तित्व ३३
३.३.४ सङ्घर्षशील व्यक्तित्व ३५
३.३.५ धार्मिक व्यक्तित्व ३६

३.३.६ उद्यमी व्यक्तित्व ३७

३.३.७ शिक्षक व्यक्तित्व ३८

३.३.८ स्वभावगत व्यक्तित्व ३९

३.३.९ चिन्तनशील व्यक्तित्व ३९

३.३.१० चित्रकार व्यक्तित्व ४०

३.३.११ खेलाडी व्यक्तित्व ४०

३.३.१२ वाद्यवादक व्यक्तित्व ४१

३.३.१३ पत्रकार व्यक्तित्व ४१

३.३.१४ सम्पादक व्यक्तित्व ४२

३.३.१५ राजनीतिक व्यक्तित्व ४३

३.३.१६ लेखक व्यक्तित्व ४३

३.३.१७ निर्देशक व्यक्तित्व ४४

३.४ निष्कर्ष ४४

## परिच्छेद चार

## रत्नप्रसाद अनामणि श्रेष्ठका साहित्यिक कृतिहरूको अध्ययन

४.१ पृष्ठभूमि ४६

४.२ विषय परिचय ४७

४.३ कविताको सैद्धान्तिक परिचय ४७

४.३ कविताका प्रमुख तत्त्वहरू ४९

४.३.१ शीर्षकविधान ४९

४.३.२ विषयवस्तु एवम् भावविधान ५०

४.३.३ संरचना ५०

४.३.४ लयविधान ५०

४.३.५ भाषाशैली ५०

४.३.६ कथन पद्धति ५१

४.३.७ विम्ब, प्रतीक र अलङ्कारविधान ५१

४.४ लाज हराएका मान्छेहरू (२०७३) कविता सङ्ग्रहको तत्त्वगत अध्ययन ५२

४.४.१ शीर्षकविधान ५२
४.४.२ विषयवस्तु एवम् भावविधान ५६
४.४.३ संरचना ६१
४.४.४ लयविधान ६२
४.४.५ भाषाशैली ६३
४.४.६ कथन पद्धति ६५
४.४.७ विम्ब, प्रतीक र अलङ्कारविधान ६६
४.४.८ निष्कर्ष ६९
४.५ रत्नप्रसाद अनामणि श्रेष्ठका मुक्तक सङ्ग्रहहरूको अध्ययन ६९
४.५.१ विषय परिचय ६९
४.५.२ मुक्तकको सैद्धान्तिक परिचय ७०
४.५.३ विषयवस्तु एवम् भाव विधान ७१
४.५.४ संरचना ७५
४.५.५ लयविधान ७७
४.५.६ भाषाशैली ७८
४.५.७ कथनपद्धति ८०
४.५.८ विम्ब, प्रतीक र अलङ्कार विधान ८३
४.५.९ निष्कर्ष ८७
४.६ रत्नप्रसाद अनामणि श्रेष्ठका गजल सङ्ग्रहहरूको अध्ययन ८८
४.६.१ विषयप्रवेश ८८
४.६.२ गजलको सैद्धान्तिक परिचय ८८
४.६.३ विषयवस्तु एवम् भाव ८९
४.६.४ कल्पना ८९
४.६.५ सङ्गीत एवम् लयविधान ९०
४.६.६ संरचना ९०
४.६.७ भाषाशैली ९१
४.६.८ विम्ब, प्रतीक एवम् अलङ्कार ९१

४.७ 'दाउहरू फरक फरक' गजल सङ्ग्रहको अध्ययन ९२
४.७.१ विषय परिचय ९२
४.७.२ विषयवस्तु एवम् भाव ९२
४.७.३ कल्पना ९४
४.७.४ सङ्गीत एवम् लयविधान ९४
४.७.५ संरचना ९५
४.७.६ भाषाशैली ९६
४.७.७ विम्ब, प्रतीक एवम् अलङ्कार ९८
४.७.९ निष्कर्ष ९९
४.८ 'ख्याल ख्यालमै सल्क्यो जिन्दगी' गजल सङ्ग्रहको अध्ययन १००
४.८.१ विषय परिचय १००
४.८.२ विषयवस्तु एवम् भाव १००
४.८.३ कल्पना १०२
४.८.४ सङ्गीत एवम् लयविधान १०३
४.८.५ संरचना १०३
४.८.६ भाषाशैली १०५
४.८.७ विम्ब, प्रतीक एवम् अलङ्कार १०६
४.८.८ निष्कर्ष १०७
४.९ रत्नप्रसाद अनामणि श्रेष्ठका हाइकु सङ्ग्रहको अध्ययन १०८
४.९.१ विषय प्रवेश १०८
४.९.२ हाइकुको सैद्धान्तिक परिचय १०९
४.९.३ विषयवस्तु एवम् भाव ११०
४.९.४ संरचना ११४
४.९.५ भाषाशैली ११४
४.९.६ विम्ब, प्रतीक एवम् अलङ्कार ११६
४.९.७ निष्कर्ष ११८

## परिच्छेद पाँच

# उपसंहार तथा निष्कर्ष

५.१ पृष्ठभूमि १९९

५.२ परिच्छेदगत सारांश १९९

५.३ समष्टिगत निष्कर्ष १२०

५.४ सम्भावित शोधशीर्षकहरू १२५

**सन्दर्भसामग्री सूची**

**परिशिष्ट**

# सङ्क्षिप्त शब्दसूची

| **सङ्क्षिप्त रूप** | **पूर्ण रूप** |
|---|---|
| अप्र. | अप्रकाशित |
| आइ.ए. | इन्टरमिडिएट इन आर्ट्स |
| ई.सं. | इश्वी सम्वत् |
| एम.ए. | मास्टर्स अफ आर्ट्स |
| काठ. | काठमाडौं |
| चौ.सं. | चौथो संस्करण |
| छै.सं. | छैटौँ संस्करण |
| डा. | डाक्टर |
| त्रि.वि. | त्रिभुवन विश्वविद्यालय |
| ते.सं. | तेस्रो संस्करण |
| दो.सं. | दोस्रो संस्करण |
| नं. | नम्बर |
| ने.रा.प्र.प्र. | नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान |
| प्रा. | प्राध्यापक |
| प्रा.लि. | प्राइभेट लिमिटेड |
| पृ. | पृष्ठ |
| बी.एड. | ब्याचलर अफ एजुकेशन |
| वि.सं. | विक्रम सम्वत् |
| सं. | संस्करण |

## परिच्छेद एक

# शोध परिचय

### १.१ विषय परिचय

प्रस्तुत शोधपत्रको शीर्षक **रत्नप्रसाद अनामणि श्रेष्ठको जीवनी, व्यक्तित्व र कृतित्व** रहेको छ । रत्नप्रसाद अनामणि श्रेष्ठको जन्म २०२६ साल असोज ६ गते माता जनकमाया एवम् पिता लालबहादुर श्रेष्ठको माइलो छोराको रूपमा भएको हो । उनको जन्मस्थान काभ्रे जिल्लाको साविकको उग्रचण्डी गा.वि.स वडा नं. २ हालको बनेपा न.पा. वडा नं. ४ हो । उनको पैतृक थलो काभ्रे भए तापनि हाल उनी काठमाडौँ जिल्लाको टोखा नगरपालिका वडा नं. १० गोंगबुमा आफ्नो व्यापार व्यवसाय सञ्चालन गर्दै आएका छन् (शोधनायकबाट प्राप्त जानकारी) ।

रत्नप्रसाद अनामणि श्रेष्ठले २०४५ सालबाट लेखन आरम्भ गरेको देखिन्छ । भक्तपुरबाट प्रकाशित 'पञ्चायत' मासिक पत्रिकाको वर्ष ६, अङ्क ८ मा **नेपाल आमाको छातीमा शान्ति फिजाऊ** (२०४५) शीर्षकको कविता प्रकाशित गरेर औपचारिक रूपमा साहित्यक यात्राको थालनी गरेका अनामणिले तत् पश्चात क्रमशः रूपमा आफ्नो साहित्यिक यात्रा अगाडि बढाउँदै लगेको देखिन्छ । विभिन्न पत्र-पत्रिकाहरूमा आफ्ना फुटकर सृजनाहरू प्रकाशित गर्दै आएका अनामणिले हालसम्म आईपुग्दा **फूलको माया लागेपछि (**मुक्तक सङ्ग्रह, २०४८), **नासद्यो** (ऐतिहासिक लेख,२०४९), **यम्हद्यो** (ऐतिहासिक लेख, २०४९), **दुखेको घाउ** (हाइकु सङ्ग्रह-२०६१), **दाउहरू फरक-फरक** (गजल सङ्ग्रह, २०६२), **शब्द पथमा** (हाइकु सङ्ग्रह, २०६९), **पत्रकारिता परिचय** (२०७२), **भाषण कला** (२०७२), **मेरो गोरेटोमा तिम्रो छायाँ** (मुक्तक सङ्ग्रह, २०७३), **ख्याल ख्यालमै सल्क्यो जिन्दगी** (गजल सङ्ग्रह, २०७३), **लाज हराएका मान्छेहरू** (कविता सङ्ग्रह, २०७३), **गौतम बुद्धको जीवनी** (संक्षिप्त जीवनी, २०७३), **भो नखिच तस्बिर** (मुक्तक सङ्ग्रह, २०७४), **लँय् लुगु किपा** (हाइकु सङ्ग्रह, २०७४) लगायतका कृतिहरूको प्रकाशन गरेका छन् ।

रत्नप्रसाद अनामणि श्रेष्ठ सामाजिक, शैक्षिक, व्यापारिक साथै साहित्यिक क्षेत्रमा क्रियाशील रहँदै आएका छन् । उनले आफ्ना कृतिहरूमा प्रकृति प्रतिको प्रेम, देश प्रेम, विद्रोहात्मकता मानवतावादी चेत, शान्तिको चाहना, व्यङ्ग्यात्मकता, हार्दिक प्रेमको

अभिव्यक्ति (शृङ्गारिकता), भ्रष्टाचार एवम् बेथितिको सशक्त पर्दाफास गर्ने जस्ता भावहरू लिपिबद्ध गरेको देखिन्छ । उनी बाह्य जगत् एवम् आन्तरिक अनुभूतिहरूलाई सफलतापूर्वक समेट्ने स्रष्टाका रूपमा चिनिन्छन् । उनको लेखनमा सरल, स्पष्ट भाषाको प्रयोग पाइन्छ । लेखाईमा सरलता भए तापनि भावका दृष्टिले उनका रचनाहरू ओजिला रहेका छन् । लय विधानमा समेत उत्तिकै निपुण दखिन्छन् । लयका दृष्टिले उनका रचनाहरू उत्कृष्ट रहेका देखिन्छन् ।

रत्नप्रसाद अनामणि श्रेष्ठका कृतिहरू एवम् उनका बारेमा संक्षिप्तरूपमा केही पत्र-पत्रिकाहरूमा चर्चा गरिए तापनि उनको समग्र जीवनी, व्यक्तित्व र कृतित्वको विषयमा शोधकार्यहरू नभएकाले यस शोधपत्रमा समग्र जीवनी, व्यक्तित्वका विविध पाटाहरू तथा साहित्यिक कृतिहरूको शोधपरक अध्ययनबाट उनको मूल्याङ्कन गरिएको छ ।

## १.२ समस्या कथन

रत्नप्रसाद अनामणि श्रेष्ठका सम्बन्धमा विभिन्न पत्र-पत्रिकाहरूले सामान्य चर्चा गरे तापनि उनको समग्र जीवनी, व्यक्तित्व र कृतित्वको बारेमा सूक्ष्म विश्लेषण नगर्नु नै यसको मूल समस्या हो । प्रस्तुत शोधपत्र मूलतः निम्नलिखित समस्याहरूको अध्ययनतर्फ केन्द्रित रहेको छ :

क) रत्नप्रसाद अनामणि श्रेष्ठको जीवनी के-कस्तो रहेको छ ?

ख) रत्नप्रसाद अनामणि श्रेष्ठको व्यक्तित्वका पाटाहरू के-कस्ता रहेका छन् ?

ग) रत्नप्रसाद अनामणि श्रेष्ठको कृतित्व के-कस्तो रहेको छ ?

## १.३ उद्देश्य कथन

उल्लिखित गरिएका समस्या कथनमा केन्द्रित रही प्रस्तुत शोधपत्रका निम्ति निम्न उद्देश्यहरू निर्धारण गरिएका छन् ।

क) रत्नप्रसाद अनामणि श्रेष्ठको जीवनीको अध्ययन गर्नु ।

ख) रत्नप्रसाद अनामणि श्रेष्ठको व्यक्तित्वका विविध पाटाहरूको अध्ययन गर्नु ।

ग) रत्नप्रसाद अनामणि श्रेष्ठको कृतित्वको अध्ययन गर्नु ।

## १.४ पूर्वकार्यको समीक्षा

नेपाली साहित्यमा रत्नप्रसाद अनामणि श्रेष्ठको जीवनी, व्यक्तित्व र कृतित्वको बारेमा हालसम्म गहन अध्ययन, विश्लेषण हुन सकेको छैन । उनका बारेमा केही पत्रपत्रिका एवम् पुस्तकहरूमा आंशिक रूपमा चर्चा गरिएको पाइन्छ । जसलाई यहाँ कालक्रमिक रूपमा प्रस्तुत गरिएको छ ।

प्रभात सापकोटा (२०५५) ले आधुनिक काभ्रेली काव्य साहित्यको समुन्नतिमा संलग्न हुँदै आएका पाका र नयाँ छिमलका कविहरूको पंक्तिमा रत्नप्रसाद अनामणि श्रेष्ठलाई उभ्याएका  छन् । अनामणिको बारेमा उनले बृहत् चर्चा भने गरेको पाइँदैन ।

त्यसैगरी मोहन दुवाल (२०५९) ले ढाँट्न नजान्ने, चुपचाप नबस्ने, निकै परिश्रम गर्न रुचाउने स्रष्टाका रूपमा रत्नप्रसाद अनामणि श्रेष्ठलाई चित्रित गरेका छन् । उनले अनामणि एवम् उनका कृतिहरूको कहीँ कतै सामान्य चर्चा परिचर्चा गरे तापनि व्यापक चर्चा भने गरेको पाइँदैन ।

सिर्जना दुवाल (२०६२) ले रत्नप्रसाद अनामणि श्रेष्ठको **दाउहरू फरक-फरक** गजल सङ्ग्रहको विवेचना गर्दै अनामणिले प्रेम र शृङ्गारलाई मात्र विषय र प्रसङ्ग नबनाई देशको समसामायिकता बारे मानवीय सम्बन्ध बारे, शोषण र अन्यायका बिरुद्ध पनि आवाज उठाएका छन् । उनले पनि अनामणिको जीवनी एवम् व्यक्तित्वका पाटाहरूका साथै अन्य कृतिहरूको बारेमा गहन चर्चा एवम् विश्लेषण भने गरेको पाइँदैन ।

साहित्यिक पत्रकार चेतनाथ धमला (२०६९) ले रत्नप्रसाद अनामणि श्रेष्ठको हाइकु संङ्ग्रह भित्र व्यङग्यात्मक रंग भरेको पाइन्छ भन्दै अनामणिको **शब्दपथमा** हाइकु सङ्ग्रह भित्र अनुभूतिको तीव्र कुत्कुताहट र प्रकृतिको सुवास मार्मिक, अर्थपूर्ण, सरल, सहज, र मिठासपूर्ण रूपमा चित्रित गर्न सफल हाइकुकार भनी चिनाएका छन् । उनले अनामणिका अन्य कृति एवम् जीवनीका साथै व्यक्तित्वका विभिन्न पाटाहरूको खास चर्चा भने गर्न सकेको पाइँदैन ।

त्यसैगरी रसुवाली कवि (२०७०) ले रत्नप्रसाद अनामणि श्रेष्ठको **शब्दपथमा** हाइकु सङ्ग्रह (२०६९) को विश्लेषण गर्दै अनामणिका हाइकु पढ्दा वर्तमान राजनीति चित्र मनमस्तिष्क भरी घुमिरहन्छन् भन्दै देशका सीमा मिचिएका, सामूहिक बलात्कार पीडित

भएका, भोका, रोग र शोकले डुबिरहेका आम मान्छेका पीडा सरल, निर्भिकतापूर्ण तरिकाले उजागर गर्न सफल हाइकुकारका रूपमा चित्रित गरेका छन्  । उनले पनि अनामणिको समग्र जीवनी, व्यक्तित्व एवम् कृतित्वको बारेमा विश्लेषण गर्न भने सकेका छैनन् ।

जीवन हमाल (२०७१) ले रत्नप्रसाद अनामणि श्रेष्ठको **शब्दपथमा** हाइकु सङ्ग्रह (२०६९) बारे चर्चा गरी उक्त सङ्ग्रहलाई नेपालकै सानो हाइकु सङ्ग्रह भन्दै रत्नप्रसाद अनामणिले आफ्ना हाइकु मार्फत नेपाली परम्परागत संस्कार र नेपाली प्रकृति तथा त्यसको निश्चल र निर्मल रसास्वादनमा रमाइरहेको समाजको चित्रण मात्र नगरी समाजमा रहेका विकृति तथा विसङ्गति माथि निर्मम् प्रहार गरेका छन् भनी विश्लेष्ण गरेका छन् । अनामणिका अन्य सङ्ग्रह एवम् निर्मम व्यक्तित्वका पाटाहरूको चर्चा भने उनले गरेका छैनन् ।

त्यस्तै प्रकाश 'पुष्पक राई' (पुमा) (२०७३) ले रत्नप्रसाद अनामणि श्रेष्ठलाई गजलको आधारभूत नियम भित्र रहेर स्वतन्त्र गजल लेखिरहने गजलकारका रूपमा चित्रण गर्दै मनमा लागेका कुराहरूलाई निडर भएर सिधा-सिधा कहिले गजलका शेरहरूमा त कहिले मुक्तकका हरफहरूमा र कहिले कविता लगायत हाइकु र अन्य विधाहरूमा नघुमाई सिधै पस्कने आदत भएका स्रष्टा हुन भनी टिप्पणी गरेका छन् । यसरी उनले अनामणिको सामान्य रूपले साहित्यिक प्रवृत्तिको उल्लेख गरे तापनि व्यापक चर्चा भने गरेको पाईँदैन । साथै जीवनी एवम् व्यक्तित्वका पाटाहरूको चर्चा पनि गरेका छैनन् ।

त्यसै गरी डा. माधव सापकोटा (२०७३) ले रत्नप्रसाद अनामणि श्रेष्ठको **लाज हराएका मान्छेहरू** कविता सङ्ग्रहको चर्चा गर्दै अनामणिका समस्त कविताले मौलिक अस्तित्व बोकेको र कविताको मूल्य सामान्य भन्दा बौद्धिक पाठकले थाहा पाउने कुरा जनाउँदै यो सङ्ग्रह व्यङ्ग्य, विद्रोह, मानवीय संवेदना, प्रकृतिको मार्मिक चित्रण आदि विविध पक्षको अभिव्यक्ति भेटिन्छ भनेका छन् । उनले पनि अनामणिका अन्य सङ्ग्रह एवम् जीवनी तथा व्यक्तित्वका अन्य पाटाहरूको बारेमा भने चर्चा गरेको भेटिँदैन ।

गौरी पब्लिक रिलेशन एन पब्लिकेशनका अध्यक्ष दामोदर ढकाल 'दीपक' (२०७३) ले रत्नप्रसाद अनामणि श्रेष्ठको कवित्व जति प्रवल छ त्यति नै उहाँको वाचन शैली मन्त्रमुग्ध एवम् प्रशंसनीय रहेको छ भन्दै विरालोले मुसालाई खेलाए जस्तै उनले कविता भरी सुन्दर विम्बहरू खेलाउनु भएको छ भनेका छन् । उनले पनि अनामणिको कवित्व एवम् वाचन

शैली बाहेक अन्य पक्षहरूको बारेमा गहन अध्ययन विश्लेषण गरेको भने पाइँदैन । उनले अनामणिको कवित्वको सामान्य चर्चा मात्र गरेका छन् ।

त्यस्तै किरण श्रेष्ठ (२०७४) ले रत्नप्रसाद अनामणि श्रेष्ठको **लाज हराएका मान्छेहरू** (२०७३) कविता सङ्ग्रहको पुस्तक टिप्पणी मार्फत रत्नप्रसाद अनामणि श्रेष्ठले सबैजसो कविताहरूमा देशबारे र मान्छेको जीवनक्रमबारे आफ्नो विचार राखेका छन् भन्दै देश दुख्दाका स्थितिहरू, नेताहरूका रूपरङ्गहरू देखेर व्यङ्ग्य शब्द शैलीमा चलन चल्तीको सरल भाषामा आक्रोश पोखेका छन् भनेका छन् । उनले **लाज हराएका मान्छेहरू** कविता सङ्ग्रहको सामान्य टिप्पणी गरे तापनि अनामणिका कृतिहरूको गहन अध्ययन एवम् विश्लेषण भने गरेको पाईंदैन ।

नारायणाचार्य कौशिक रिमाल (२०७४) ले **मेरो गोरेटोमा तिम्रो छायाँ** मुक्तक सङ्ग्रह (२०७३) को विश्लेषणात्मक लेखमा रत्नप्रसाद अनामणि श्रेष्ठलाई एक क्षेत्रको मात्र निर्वाह गर्ने सीमित व्यक्ति नभएर गजल, हाइकु, गीत, मुक्तक, संस्कृति, इतिहास जस्ता बहु विधामा कलम चलाउने लेखक एवम् किसान, उद्योग व्यवसाय, व्यापार, सामाजिक क्रियाकलाप र राजनीति, शिक्षा सबै क्षेत्रमा चित्त बुझ्ने तर्क दिन सक्ने, बच्चा, बूढा, तन्नेरी, कामदार समेत सबैसँग मिल्न सक्ने सामाजिक व्यक्तित्व हुनुहुन्छ भन्दै उहाँको यस सङ्ग्रहका देखावटी, इमान्दार, भावना, सपना, अनापत्यार, आशा, कल्पना, भय, फोस्रो श्रम, कुलत, घात, बेइमान, कर्म, पछुतो, चोरी, साहस, अठोट, राष्ट्रियता, अवसरवादी, निर्धक्कता, सोच जस्ता धेरै विषय खोस्रने काम मुक्तकबाट देखिएको छ भनेका छन् । यसरी उनले अनामणिको सामान्य व्यक्तित्वको चर्चा एवम् **मेरो गोरेटोमा तिम्रो छायाँ** मुक्तक सङ्ग्रह (२०७३) को बारेमा सामान्य रूपमा व्याख्या, विश्लेषण गरे तापनि कृतित्वको गहन खोज, अध्ययन, विश्लेषण भने गरेको पाईंदैन ।

यसरी विभिन्न विद्वान्हरूले रत्नप्रसाद अनामणि श्रेष्ठ तथा उनका कृतिहरूको बारेमा विभिन्न किसिमले व्याख्या एवम् विश्लेष्ण गरेका छन् । उनीहरूका व्याख्या तथा विश्लेषणात्मक लेखहरू महत्त्वपूर्ण छन्, तथापि यस शोध पत्रमा प्रस्तुत गरिएको जस्तो उनको जीवनी, व्यक्तित्व र कृतित्वको समग्र रूपमा अध्ययन भने हुन सकेको देखिँदैन । यस परिप्रेक्ष्यमा अनामणिको जीवनी, व्यक्तित्व र कृतित्वको शोधपरक अध्ययन गरिएको हो ।

## १.५ शोधको औचित्य तथा महत्त्व

रत्नप्रसाद अनामणि श्रेष्ठको जीवनी, व्यक्तित्व र कृतित्वको अध्ययन हालसम्म नभएकोले शोधपत्रमा प्रस्तुत गरिएको शीर्षकको छुट्टै महत्त्व र पहिचान रहेको छ । यस शोधपत्रबाट अनामणिको जीवनी के कस्तो रहेको छ ? उनको व्यक्तित्वका पाटाहरू के-कस्ता रहेका छन् ? उनका कृतिहरू कस्ता छन् ? भनी प्रमाणित हुनुका साथै वस्तुनिष्ठ तथ्यको उजागर हुने भएकाले अध्येता, अनुसन्धाता, विद्यार्थी एवम् समग्र अनुरागी पाठकहरू लाभान्वित हुनेछन् । अतः प्रस्तुत शोधपत्रबाट रत्नप्रसाद अनामणि श्रेष्ठको जीवनी, व्यक्तित्व एवम् कृतित्वको बारेमा गहन तथा वस्तुनिष्ठ तथ्यको उजागर हुने भएकोले प्रस्तुत शोधपत्रको औचित्य तथा उपयोगिता महत्त्वपूर्ण छ भन्ने कुरा पुष्टि हुन्छ ।

## १.६ शोध सीमा

रत्नप्रसाद अनामणि श्रेष्ठको जीवनी, व्यक्तित्व र उनका २०७४ साल माघ महिनासम्म प्रकाशित कृतिहरूको विश्लेषण गर्नु प्रस्तुत शोधपत्रको सीमा रहेको छ ।

## १.७ शोध विधि

प्रस्तुत शोधपत्र निम्नलिखित विधि तथा प्रक्रियाद्वारा तयार गरिएको छ :

### १.७.१ सामग्री संकलन विधि

प्रस्तुत शोधपत्र रत्नप्रसाद अनामणि श्रेष्ठको जीवनी, व्यक्तित्व र कृतित्वको अध्ययनमा केन्द्रित रहेको हुँदा शोधपत्रमा पुस्तकालयीय विधिको आधारमा सामग्रीको सङ्कलन गर्दै सम्बन्धित व्यक्ति, नातेदार, प्राध्यापक, समालोचकहरूसँग सम्पर्क गरी मूलतः सम्बन्धित पुस्तक, पत्रपत्रिकाको अध्ययन तथा विषय विज्ञहरूको सल्लाहलाई सामग्री सङ्कलनको स्रोत मानिएको छ । साथै आवश्यकता अनुसार क्षेत्रीय विधिबाट समेत सामाग्रीको सङ्कलन गरिएको छ ।

### १.७.२ सामग्री विश्लेषण विधि/अध्ययन

पुस्तकालयीय तथा क्षेत्रीय विधिबाट सङ्कलन गरिएका शोधसामग्रीहरूलाई समुचित व्यवस्थापन गर्दै उपयोग गर्नका लागि आवश्यकता अनुसार तुलनात्मक, वर्णनात्मक विधिको प्रयोग गरिएको छ ।

## १.८ शोधपत्रको रूपरेखा

प्रस्तुत शोधपत्रको रूपरेखा यस प्रकार रहेको छ :

परिच्छेद एक : शोध परिचय

परिच्छेद दुई : रत्नप्रसाद अनामणि श्रेष्ठको जीवनी

परिच्छेद तीन : रत्नप्रसाद अनामणि श्रेष्ठको व्यक्तित्व

परिच्छेद चार : रत्नप्रसाद अनामणि श्रेष्ठको कृतित्व

परिच्छेद पाँच : उपसंहार तथा निष्कर्ष

# परिच्छेद दुई

# रत्नप्रसाद अनामणि श्रेष्ठको जीवनी

## २.१ जन्म तथा जन्मस्थान

रत्नप्रसाद अनामणिको जन्म उनको सम्पूर्ण कागजपत्र एवम् नागरिकताको अनुसार २०२६ साल असोज ६ गते रहेको छ । तर उनको खास जन्म चाहिं चिना अनुसार २०२६ साल अषाढ शुक्लपक्ष दशमी, ३८ घडा र २० पलाको समयमा भएको थियो । पहिले उनले आफ्नो असली जन्ममिति थाहा नभएकोले गर्दा बाध्यतावश सो मिति राखेका थिए । पछि युवाकालीन अवस्थामा मात्रै उनले खोजतलास गरेर आफ्नो चिना बनाएका थिए । उनको चिनाको नाम तेजबहादुर श्रेष्ठ हो । काभ्रे जिल्ला साविक उग्रचण्डी गा.वि.स. नाला वार्ड नं. २ टुपिचा टोल, हालको बनेपा न.पा. वार्ड नं. ४ मा माता जनकमाया श्रेष्ठ तथा पिता लालबहादुर श्रेष्ठका तेस्रो सन्तान तथा दोस्रो पुत्रका रूपमा उनको जन्म भएको थियो । उनका एक दिदी, एक दाई, एक भाइ एवम् दुई बहिनी तथा आफैं समेत गरी जम्मा ६ जना दाजुभाइ तथा दिदी बहिनी रहेका छन् (शोधनायकबाट प्राप्त जानकारी) ।

## २.२ पुर्ख्यौली तथा पारिवारिक पृष्ठभूमि

रत्नप्रसाद अनामणि श्रेष्ठका पुर्खाहरू आज भन्दा करिब १० पुस्ता अगाडि बनेपाको लाइकु दरबारबाट नालाको कोइपा टोलमा बसाईं सरी गएका थिए । त्यहाँबाट पनि ५ पुस्ता अगाडि नालाकै टुपिचा टोलमा वसाईंसरी बसोवास गरेका थिए । दशौं पुस्ता अगाडि बनेपा लाइकु दरबारमा रहेका उनका पुर्खाका ५ भाइमध्ये २ भाइ नाला एवम् ३ भाइ दोलखा भीमसेन गई बसोबास गर्न थालेका थिए । नाला आएका २ जना पुर्खा मध्येका सन्तानहरू अहिले जम्मा-जम्मी ११ घरधुरीमा फैलिएका छन् । तर दोलखामा गएका पुर्खाका सन्तानहरू भने अहिले १५० घरधुरीमा फैलिएर बसेका छन् । नालामा रहेका सबै दाजुभाइहरूको पारिवारिक नाम अनामणि रहेको छ । त्यसैगरी दोलखा गएकाहरू ३ जना पुर्खामध्ये १ जनाको कान ठूलो भएकाले पछि उनीहरूको सन्तानलाई कानफाट्टेको सन्तान भन्न थालियो भने अलि पछि झगडालु स्वभाव पनि भएकोले झगडे नेवार पनि भन्न थालिएको किवंदन्ती पनि सुन्न पाइन्छ (शोधनायकबाट प्राप्त जानकारी) । आफ्नो पारिवारिक नाम अनामणि रहेकोमा सो नाम किन रह्यो भन्ने किंवदन्ती अनुसार केही तथ्यगत अनुमान अनामणि

यसरी व्यक्त गर्दछन्- 'जेठो बुबा कान्छो नानी माइलो अनामुनी' भन्ने नेपाली उखान बमोजिम उनका आफ्ना कुनै पुर्खा माइला थिए र त्यसैका आधारमा माइलो अनामुनी भन्दा भन्दै अनामणि नाम रहेको हुनसक्ने कुरा उनी बताउँछन् । त्यसैगरी अरिमल्लका सन्तान भएको हुनाले 'अरिमल्ल मुनी' हुँदै सो अपभ्रंश भएर अनामणि भएको पनि हुनसक्ने अनुमान उनी व्यक्त गर्दछन् । त्यस्तै अर्कोमा उनका बाजे बराजुको पालामा उनीहरूको जग्गाजमिन १ आनाभन्दा मुनी रहेकोले १ आना मुनी भन्दा भन्दै अनामणि रहेको हुनसक्ने कुरा उनी बताउँछन् (शोधनायकबाट प्राप्त जानकारी) ।

हजुरबुबा मोतीलाल श्रेष्ठका दुई श्रीमतीमध्ये कान्छी श्रीमती पुतलीमायाका कान्छो छोरा लालबहादुरका माइला छोरा हुन् रत्नप्रसाद अनामणि श्रेष्ठ । कृषि पृष्ठभूमि भएको परिवारमा जन्मेका अनामणिका हजुरबुबा एवम् बुबा अत्यन्तै मेहनती कृषक थिए । पशुपालनमा पनि उस्तै अग्रणी थिए । गाउँले नेवारी कृषक परिवारमा जन्मेका अनामणिले खेतीपाती, वस्तुभाउ, आफ्नै घरमा रहेको सानो किराना पसलको काममा परिवारलाई सहयोग गर्दै सङ्घर्षका साथ पढाइ अगाडि बढाएका थिए । पढाइको वातावरणमा उनका बाबुले कुनै कसरत बाँकी नराखी हरतरहले शिक्षामा अगाडि बढ्न सहयोग गरेका थिए । अनामणि सानो छँदा करिब १८-१९ रोपनी मात्र जग्गा भए तापनि निकै परिश्रमी उनका बुबाले कृषि कार्य, कुखुरा एवम् गाईवस्तु पालन लगायतका काम गरी ४० रोपनी भन्दा बढी जग्गा जमिन जोड्न सफल भएका थिए । मध्यम वर्गीय नेपाली परिवारमा जन्मेका अनामणिको बाल्यकाल सङ्घर्षका वावजुत पनि सुखद रहेको थियो (शोधनायकबाट प्राप्त जानकारी) ।

## २.३ बाल्यकाल

रत्नप्रसाद अनामणि श्रेष्ठको बाल्यकाल मध्यमवर्गीय नेवारी कृषक परिवारमा ग्रामीण संघर्षमय वातावरणका बीचमा पनि सुख एवम् सन्तोषका साथ बितेको थियो । बाल्यकालमा उनले आफ्नी आमालाई असाध्यै माया गर्थे । यहाँसम्म कि उनी आफ्नी आमालाई ज्वरो आउँदा उहाँलाई गाह्रो हुन्छ भनेर दुध समेत खान मान्ने थिएनन् । त्यसैगरी आमाबुबा सबै खेतमा जाँदा घर कुरुवाको रूपमा उनलाई एक्लै घरमा राख्थे । अनि घरमा आग्लो लगाएर बस, ढोका खोलेर नजाऊ, वरु तिम्रै पसल थापेर वस भन्दै बुबा आमा खेतमा जान्थे । उनले आफ्नो बुबाआमाको आज्ञा पालन यतिसम्म गर्थे कि चाहे घरमा जोसुकै आओस् ढोका खोल्दैनथे । अनि घरको दोस्रो तलाको झ्याल छेउमा बोरा ओछ्याएर त्यहाँ सबै

परिवारका जुत्ता एवम् चप्पलहरू, हुक्का, चिलिम, मकल, तमाखु राख्ने भाँडो आदि लगेर भाँडाकुटी पसल खोलेर त्यहीँ छेउमै निदाएर बस्ने गर्दथे । बेलुका मेलाबाट बुबाआमा फर्केपछि मात्र ढोका खोल्ने उनको अनौठो बानी थियो । घरमा आएपछि बुबाले मेरो छोराको पसलमा कोही किन्न आएनन् है, म किन्छु भन्दै ५ पैसा दिन्थे जुन पैसाले उनले ८ वटा पुष्टकारी किनेर खान्थे (शोधनायकबाट प्राप्त जानकारी) । यसरी आमाको माया स्नेह पाइरहनु, पिताको ममता रहिरहनु अनि दाजुदिदी एवम् भाइ बहिनीहरूको साथमा हुर्कंदा सामान्य परिवारमा पाउने सुविधाहरूबाट उनी वञ्चित भएका थिएनन् ।

बाल्यकालमा उनी मामाघर लगायत इष्टमित्रकोमा भने त्यति जान रुचाउँदैनथे । कहिलेकाहीँ स्कुलबाट घर फर्कंदा उनकी आमा मामाघर गएको थाहा पाएर भाइ असाध्यै रुन्थे अनि स्कुल ड्रेसमै मामाघरतिर हिँड्थे । भाइ हराउँछ कि भनेर उनी भाइकै पछिपछि मामाघर पुग्थे तर घरको छेउमै पुगेपछि उनी भित्र नछिरी आफ्नै घर नाला फर्कन्थे । मामाघरका कोही आफन्तले उनी पनि आएको थाहा पाएर बाहिर लिन आउँथे । तर उनी भने कसैले समात्न नसक्ने गरेर कुदेर भाग्थे । अति नै गरे भने उल्टै ढुङ्गाले हानेर जोड-जोडले दौडिन्थे (शोधनायकबाट प्राप्त जानकारी) ।

तत्कालीन अवस्थामा गाउँघरमा खेलबाड रमझम भनेकै धुलो, माटो, पाखा, चउर अनि डाँडाकाँडामा दौडनु, गाईवस्तु चराउनु अनि घुम्नु आदि पर्दथे । त्यसैगरी रत्नप्रसाद अनामणि श्रेष्ठ पनि प्लाष्टिक बटुलेर बल बनाइ खेल्ने, गुच्चा खेल्ने, चुरोटको बट्टाको खेलाउने कुरा बनाई खेल्ने, जङ्गलतिर ऐंसेलु, काफल, अमला, चुत्रो, लप्सी लगायतका कुराहरू खान जाने गर्दथे । वीरेन्द्र, रामगोपाल, राधाकृष्ण, हरिगोपाल, मच्छेकृष्ण, हरि ऊँ, सुजन, रतिराम, सुदर्शन आदि अनामणिका बाल्यकालका मिल्ने साथीहरू थिए । साथीहरूसँग फुटबल, भलिवल, डन्डिबियो, पिङ्ग, लुकामारी लगायतका खेल खेल्दै स्कुलको चउर, चियाने बगर, डाँडापाखा, जङ्गल आदितिर उनी जाने गर्दथे । एकचोटि भगवतीथानको जङ्गल घुम्न जाँदा अनामणिले भलायोको हाँगा भाँचेका थिए । उक्त हाँगा साथी राधाकृष्ण श्रेष्ठले पनि छोएका थिए । त्यसपछि भोलिपल्ट मान्छे नै चिन्न नसक्ने गरी राधाकृष्णलाई भलाह उठेको थियो अनि सोही रुखलाई मित लगाएर जडीबुटी औषधी गरी निको पारिएको थियो भन्दै अनामणि आफ्नो बाल्यकालको स्मरणीय क्षण सुनाउँछन् (शोधनायकबाट प्राप्त जानकारी) ।

रत्नप्रसाद अनामणि श्रेष्ठलाई सानैदेखि जात्रामा धिमे एवम् भुच्छ्या बजाउने, रथ बोक्ने आदि कार्य गर्न मन लाग्थ्यो । त्यसैगरी उनी दशैं, तिहार एवम् स्थानीय जात्रा लगायतमा

लङ्गुर बुर्जा खेल्न पनि खुब मन पराउँथे । सानो बेलामा चिउरा कुट्न ठिक्क परेको चुह्लोबाट ईंटा भत्काई सो ईंटा खेलेको कारणले आमाले किन काम विगारेको भन्दै मजाले कुटेको सम्झना गर्दै कहिलेकाहीँ उट्पट्याङ्ग काम पनि गरियो भन्दै बाल्यकालको स्मरण गर्छन् उनी । घरको काम पनि भाग लगाई गर्ने चलन थियो उनको घरमा । त्यसै अनुरूप उनको जिम्मामा परेको काम चाहिँ खोलामा भैंसी लाने, भकारो सोहोर्ने, दाना खुबाउने आदि रहेको थियो । त्यसैगरी वाउसे एवम् अन्य कृषिका काम पनि उनले गर्दथे । यसका साथै आलु गोड्ने, औषधी छर्कने, आलुको भारी सार्ने, बोक्ने लगायतका काममा पनि उनी अघि सर्दथे । कृषि, कुखुरा फारम वस्तुभाउ, किराना पसल आदि परिवारको मुख्य व्यवसाय रहेको थियो । मध्यमवर्गीय ग्रामीण कृषि परिवारमा जन्म लिएको भए तापनि उनको परिवारले प्रशस्त समयका साथ सन्तानको हेरचाह, खानपान, लालनपालनमा कुनै पनि कमी नगरी हुर्काएका थिए (शोधनायकबाट प्राप्त जानकारी) ।

रत्नप्रसाद अनामणिको घरमा शैक्षिक वातावरण राम्रो थियो । आफ्नो बुबाले घरैमा कखरा सिकाएर अक्षरारम्भ गराएका थिए । ६ वर्षको उमेर पुगेपछि उनले चण्डेश्वरी मा.वि.बाट कक्षारम्भ गरी एस.एल.सी. सम्म नै उक्त स्कुलमै अध्ययन गरेका थिए । २००४ सालमा बनेपाको पुल बजारमा शिक्षासेवीहरू देशका चर्चित शहीद शुक्रराज शास्त्री लगायत स्थानीय समाजसेवी राजदास वादे श्रेष्ठको अथक प्रयासबाट राणाहरूको आँखा छलेर गुप्त रूपमा स्कुल सञ्चालनमा ल्याएका थिए । पछि सो स्कुल चण्डेश्वरी मन्दिरको छेउको पाटी हुँदै नालामा लगेर सरकारी स्कुलका रूपमा स्थापना गरिएको थियो । सोही स्कुलमा अनामणिले अध्ययन गरेका थिए । उनलाई आशाकाजी सेवक, दामोदर अधिकारी, न्हूच्छेकृष्ण श्रेष्ठ आदि गुरुहरूले पढाएको अझै सम्झना छ । आँफुले कक्षा ३ सम्म पढाईमा ज्यादै कमजोर भएकाले गोविन्द सर, प्रेम प्रसाद शिग्देल एवम् कृष्ण गोपाल सरको हातबाट खुब पिटाईं खाएको कुरा उनी बताउँछन् । त्यसपछिका कक्षाहरूमा भने उनको पढाइ क्रमिक सुधार हुँदै गएको थियो (शोधनायकबाट प्राप्त जानकारी) ।

## २.४ शिक्षा

रत्नप्रसाद अनामणि श्रेष्ठलाई उनका बुबा लालबहादुर श्रेष्ठले घरमा नै कखरा सिकाएर अक्षरारम्भ गराएका हुन् । ६ वर्षको उमेर पुगेपछि नालाको आफ्नै गाउँमा रहेको श्री चण्डेश्वरी मा.वि. बाट कक्षारम्भ गरी सोही स्कुलबाट एस.एल.सी. उत्तीर्ण गरेका थिए । सुरुका चरणमा उनी पढाइमा निकै नै कमजोर रहेका थिए । कक्षा ४ मा प्रवेश गरेपछि

उनको पढाइ सुध्रिँदै गएको थियो । सानै देखि बहिर्मुखी स्वभावका अनामणि कक्षा ५ मा पढ्दा जुनियर रेडक्रस सर्कलको सदस्यमा निर्वाचित भएका एवम् सोही कक्षामै छँदा प्रारम्भिक कमिटीको सचिव समेत भएका थिए । प्रारम्भिक कमिटीको सचिव हुँदा उनले सबै विद्यार्थीहरूसँग पैसा उठाइ काठमाडौँ स्थित उत्तर कोरियाको राजदूतावासमा गई कोरियाली क्रान्तिकारी चलचित्र वीर पखेटा (पाइलट) लाई ल्याएर सिडियो कार्यालयमा सिफारिस गर्न लगाई नाला भगवतीस्थानमा प्रदर्शन समेत गरेका थिए । यसका साथै विभिन्न समयमा उनले विद्यालयमा भलिवल एवम् रक्तदान कार्यक्रमको आयोजना समेत गरेका थिए । विद्यालयमा उनलाई दामोदर अधिकारी एवम् आशाकाजी श्रेष्ठ सरले विशेष ख्याल गर्ने गर्दथे । उहाँहरूकै प्रेरणा एवम् प्रभाव पाएर अनामणिले अध्ययनलाई जोड दिन थालेका थिए (शोधनायकबाट प्राप्त जानकारी) ।

कक्षा ३ मा हुने बेलासम्म निकै नै कमजोर उनको पढाइ कक्षा ४ एवम् ५ मा सामान्य विद्यार्थीको सरह हुन थालेको थियो । पढाइमा क्रमिक सुधार हासिल गरेका अनामणि कक्षा ६ बाट १० सम्म भने कहिले दोस्रो त कहिले तेस्रो स्थान हासिल गर्दै गएका थिए । यसैक्रममा कक्षा १० को एस.एल.सी. परीक्षा ५६.४३% अङ्क ल्याइ २०४३ सालमा दोस्रो श्रेणीमा उत्तीर्ण गर्न सफल भए । ऐच्छिक गणित लिई एस्. एल.सी उत्तीर्ण गरेका हुनाले इन्जिनियर बन्ने सपनाका साथ उनले आइ.एस.सी. मा भर्ना भई अध्ययन गरेका थिए । तर पाउरोटी उद्योग सञ्चालन गर्दै आइ.ए.सी. अध्ययन गरेका अनामणिको त्यो बेलाको पढाइ भने खासै राम्रो हुन सकेन । जसोतसो २०४६ सालमा आइ.एस्.सी. पास गरिसकेपछि आफूले अध्ययन गरेको चण्डेश्वरी मा.वि.मा अस्थायी शिक्षकको रूपमा कार्य गर्दै बी.एड.मा भर्ना भइ पढाइलाई पनि सँग-सँगै अगाडि बढाए । २०५१ सालमा ५०.७% ल्याइ मेजर नेपाली र स्वास्थ्य तथा शारीरिक शिक्षा विषयमा क्याम्पस सेकेण्ड भई बी.एड. उत्तीर्ण गरे । त्यसपछि उनले २०५३ सालमा नेपाली विषय लिई ४७.२% ल्याई एम.ए. उत्तीर्ण गरे । हाल उनी नेपाल संस्कृत विश्वविद्यालय अन्तर्गत रही **भक्तपुरको लोक साहित्य परम्परा** शीर्षकमा विद्यावारिधी (पि.एच.डी) का लागि अनुसन्धानरत रहेका छन् (शोधनायकबाट प्राप्त जानकारी) ।

करिब २१ वर्षसम्म औपचारिक शिक्षा लिएका रत्नप्रसाद अनामणि बहुमुखी प्रतिभाका धनी छन् । उनले चित्रकला, खेलकुद, हाजिरी जवाफ एवम् वादविवाद तथा कविता प्रतियोगिता लगायतका साहित्यिक कार्यक्रमहरूमा विद्यालय स्तरदेखि नै भाग लिने गर्दथे ।

यसै क्रममा उनले धेरै पटक भलिबल तथा वादविवाद प्रतियोगितामा जित हासिल गर्न पनि सफल भएका थिए (शोधनायकबाट प्राप्त जानकारी) ।

## २.५ वैवाहिक जीवन र सन्तान

रत्नप्रसाद अनामणि श्रेष्ठको २०५२ साल मंसिर १५ गते काभ्रे जिल्ला नासिका गा.वि.स. साँगा भैंसेपाटी निवासी श्री कृष्णबहादुर श्रेष्ठकी सुपुत्री शान्ति श्रेष्ठसँग २६ वर्षको उमेरमा मागी विवाह भएको थियो । विवाह गर्दा ताका अनामणिले नेपालीमा एम.ए. गर्दै चण्डेश्वरी मा.वि.मा अध्यापन गर्ने गर्दथे । श्रीमती शान्ति श्रेष्ठले पनि सोही समयमा पि.के. क्याम्पसमा नेपालीमै स्नातकोत्तर गर्दै रहेकी थिइन् । तर विवाहको १ वर्षमै छोरा जन्मिएपछि उनले आफ्नो पढाइलाई भने निरन्तरता दिन सकिनन् । विवाह भनेको सहकार्य, सहयोगी, सद्भाव एवम् सह-अस्तित्वको मिलन हो भन्न रुचाउने अनामणि कुरा बुझ्ने, पारिवारिक एवम् परिश्रमी श्रीमती पाएकोमा आफूलाई भाग्यमानी ठान्दछन् (शोधनायकबाट प्राप्त जानकारी) ।

रत्नप्रसाद अनामणिका २ जना छोरा रुजेन र सुजेन रहेका छन् । विवाह भएको एक वर्ष पछि अर्थात् २०५३ साल कार्तिक १९ गते जेठो छोरा रुजेनको जन्म भएको थियो । छोरा रुजेनले गोंगबुस्थित नेशनल मोडल साइन्स स्कुलबाट एस.एल.सी. उत्तीर्ण गरी निस्ट कलेजबाट प्लस टु सकेर हाल फिलिपिन्स स्थित सान्कार्लोस शहरको V.M.F कलेजबाट एम.बी.बी.एस.को सेकेण्ड सेमेस्टरमा अध्ययन गर्दैछन् । त्यसैगरी अर्का छोरा सुजेन श्रेष्ठको २०५६ साल असार १० गते जन्म भएको थियो । सुजेन पनि नेशनल मोडेल साइन्स स्कुलबाट एस.इ.इ. उत्तीर्ण गरी हाल गोल्डेनगेट कलेजबाट भौतिक शास्त्र लिई कक्षा १२ मा अध्ययन गर्दैछन् । अनामणिकी श्रीमती एक कुशल गृहणी भएर काम गर्नुका साथै गोंगबुमा रहेको आफ्नै उग्रचण्डी कपडा पसलमा कार्य गर्दै आएकी छन् । पारिवारिक वातावरण एकदमै सुमधुर रहेको बताउने अनामणिको दैनिकी उद्योग तथा पसलको हेरचाह गर्ने, सामाजिक कार्य गर्ने एवम् साहित्यिक क्रियाकलापमा संलग्न हुँदै बित्दै आएको छ (शोध नायकबाट प्राप्त जानकारी) ।

## २.६ आर्थिक अवस्था

मध्यमवर्गीय नेवारी कृषक परिवारमा जन्मेका रत्नप्रसाद अनामणि श्रेष्ठको आर्थिक अवस्था राम्रै रहेको थियो । उनी बाल्यकाल हुँदा देखि नै उनको परिवारले कृषि, गाईवस्तु

पालन, कुखुरा पालन एवम् किराना पसल लगायतका कार्य गर्दै आएकाले खान, लाउन, पढाइ तथा अन्य कार्यका लागि उनले आर्थिक समस्या व्यहोर्नु परेको थिएन । साह्रै मेहनती परिवारमा जन्मेको कारणले उनलाई पनि सानैदेखि मेहनत गर्ने बानी बसेको थियो । घरायसी काममा परिवारलाई सहयोग गर्दै उनले आफ्नो स्कुले जीवन सकेका थिए । त्यसपछि भौतिक शास्त्रमा आइ.एस.सी. गर्दै गर्दा भगवती पाउरोटी उद्योग सञ्चालन गरेका थिए । सो पाउरोटी उद्योगले खासै राम्रो प्रगति गर्न भने सकेन । यसका साथै उद्योगी भएर आइ.ए.सी. अध्ययन गर्दा उनको पढाइ पनि त्यति राम्रो हुन सकेन । यसपछि उनले बी.एड. अध्ययन गर्दै चण्डेश्वरी मा.वि. नालामा अध्यापन गर्ने काम थालेका थिए । सो स्कुलमा अध्यापन गर्दै उनले नेपालीमा एम.ए. समेत गर्न सफल भएका थिए । लामो समयसम्म अस्थायी शिक्षक भइ कार्य गरिसकेपछि २०६० सालमा स्थायी शिक्षकका रूपमा नियुक्ति पाउन सफल भएका थिए । तर स्थायी नियुक्ति पाएको १ महिना पछि नै उनले जागिरबाट राजिनामा गरी व्यापारको सिलसिलामा काठमाडौँ प्रस्थान गरे । काठमाडौँमा उनले २०५६ सालदेखि नै ऋणधन गरेर उग्रचण्डी कपडा पसल पनि सञ्चालन गर्दै राखेका थिए । सो पसल सञ्चालन गर्दै जाँदा उनले दिन प्रतिदिन प्रगति हासिल गर्दै गए । त्यसपछि उनले क्रमैसँग गोंगवुमा जग्गा किनेर घर बनाए अनि बालाजुमा पनि केही समय पछि घर बनाए । यसै क्रममा २०६० सालमा आर.एस. स्टोर्स एण्ड कम्युनिकेसन, २०६४ सालमा बानियाँटारमा पानी उद्योग (अनामणि ग्रुप इण्डस्ट्रिज) खोले । त्यसपछि २०६८ मा ग्रिनल्याण्डमा बोतल फ्याक्ट्रि एमपेट इण्डस्ट्रिजको स्थापना गरे । २०७० मा फेरि काभ्रेको नालामा मणिरत्न मल्टिप्लास्ट इण्डस्ट्रिजको स्थापना गरे । त्यस्तै अरु अनामणि एग्रोटेक एण्ड अल्टरनेटिभ इनर्जी (२०७१), निष्पक्ष मिडिया प्रा.लि (२०७३) आदिको पनि स्थापना गरे । हाल उनले गुञ्जन सञ्चार प्रा.लि. (२०७४) काभ्रेको नालामा खोल्नका लागि तयारी गरिरहेका छन् (शोधनायकबाट प्राप्त जानकारी) ।

रत्नप्रसाद अनामणिको काभ्रेको नालामा मात्रै पुर्ख्यौली सम्पत्ति ४० रोपनी भन्दा बढी जमिन रहेको छ । पुर्ख्यौली सम्पत्ति पर्याप्त भए तापनि आफ्नै सङ्घर्ष एवम् मेहनती बानीका कारण आज उनी एक कुशल व्यापारी एवम् उद्यमी बनेका छन् । अल्छी शब्द नै शब्दकोशमा छैन जस्तो छ उनको जीवनक्रम हेर्दा (दुवाल, २०५६ :४) । यसरी उद्योग एवम् व्यापारको विभिन्न क्षेत्रमा हात हालेका अनामणिको आर्थिक स्थिति निकै नै मजबुत रहेको देखिन्छ । हाल उनी आफ्नो घरमा रहेको शुद्ध खानेपानी तयार गर्ने अनामणि ग्रुप एण्ड इण्डस्ट्रिज प्रा.लि. एवम् आर.एस. स्टोर्स एण्ड कम्युनिकेसन सञ्चालन गर्दै विभिन्न ठाउँमा

रहेका उद्योग एवम् व्यापारको बेला बखतमा निरीक्षण गर्दै व्यापारिक क्षेत्रमा सक्रिय छन् । साथसाथै आफ्नो साहित्यिक गतिविधिलाई पनि निरन्तरता दिइरहेका छन् (शोधनायकबाट प्राप्त जानकारी) ।

## २.७ दिनचर्या र अभिरुचि

रत्नप्रसाद अनामणि श्रेष्ठको दिनचर्या विहान साढे ६ बजे उठेपछि सुरु हुन्छ । उठेर नुहाइधुवाइ पश्चात् आफ्नै तरिकाले उनी शारीरिक क्रियाकलाप गर्ने गर्दछन् । त्यसपछि ७ बजे आफ्नै घर गोंगवुस्थित रहेको आर.एस.स्टोर्स एण्ड कम्युनिकेसन पसल खोल्दछन् । आफैले घरको पेटी एवम् पसल सफा सुग्घर गरेपछि पसल एवम् सोही घरमा रहेको पानी फ्याक्ट्रिमा पूजाआजा गर्दछन् । त्यसपछि चियाको चुस्की सँगै खोज अनलाइन पत्रिका खोलेर समाचार पोष्ट गर्ने, फेसबुक एवम् युटुबमा अपडेट गर्ने आदि कार्य गर्दछन् । त्यसपछि पसलमा बस्दै पसलका साथै संगै रहेको पानी फ्याक्ट्रि पनि सञ्चालन गर्दै सोही समयमै साथीहरूसँग पनि भेटघाट गर्ने गर्दछन् । करिब ९ बजेतिर बजारमा पहिलो १ गाडी पानी पठाउँदछन् । ९ बजेदेखि ११ बजेसम्म भने पसलमा बस्दै अनलाइन एवम् दैनिक पत्रिका तथा अन्य साहित्यिक, सांस्कृतिक, ऐतिहासिक लगायतका पुस्तकहरू पढ्ने एवम् फोन सम्पर्क गर्ने ठाउँमा फोन गर्ने, बनेपामा रहेको मणिरत्न मल्टिप्लास्ट इन्डस्ट्रिजको हालखबर बुझ्ने लगायतका काम गर्दछन् । ११ बजेदेखि १२ बजेसम्म खाना खाने एवम् आराम गर्ने गर्दछन् । खाना खाइसकेपछि आफ्नै घरको दोस्रो तलामा रहेको खोज रेडियोको स्टुडियो निरीक्षण गर्दछन् । यसपछि बजारमा पानी पुऱ्याएर गाडी आइसकेको हुन्छ । अनि फेरि दोस्रो टिप पानी पठाउँछन् । यो काम सक्दा लगभग १ बजिसकेको हुन्छ । त्यसपछिको समय साथीभाइ भेटघाटका लागि दिएका हुन्छन् । सो समयमा घरमै साथीहरूसँग भेटघाट गर्ने गर्दछन् । अनामणि धेरै सङ्घ-संस्थामा आबद्ध भएकोले २-३ वटा संस्थाको मिटिङ्ग प्रायजसो आफ्नै घरमा नै सोही समयमा हुने गर्दछ । मिटिङ्ग नभएको बेलामा भने उनी साहित्यिक लेखन गर्ने कार्य गर्दछन् । लगभग ४ बजेसम्म यस्तै काममा सक्रिय रहेपछि फेरि उनी अर्को टिप पानी पठाउने, हिसाब-किताब गर्ने, फ्याक्ट्रिका लागि चाहिने विभिन्न सामानहरू लिन पठाउने इत्यादि कार्य गर्दछन् । ५ बजे तिर उनी नास्ता लिन्छन् । नास्तामा उनी चिया, बिस्कुट, सेल, चाउमिन, आदिमध्ये कुनै १ लिन रुचाउँछन् । नास्ता लिइसकेपछि बेलुकाको करिब ९ बजेसम्म पसल खोलिराख्दछन् । यस बीचमा पसलको काम गर्दै दैनिक भेटघाट, पत्रपत्रिका तथा पुस्तकको अध्ययन पनि गर्ने गर्दछन् । ९ बजेतिर पसल बन्द गरेर

माथिल्लो तलामा रहेको आफ्नो कोठामा गई हातमुख धोइवरी फ्रेस हुन्छन् । अनि १० बजेतिर खाना खान्छन् । १० देखि १२ बजेसम्म पानी फ्याक्ट्रिका मेसिन सञ्चालन, अध्ययन र लेखन तथा टिभी हेर्ने आदि कार्य गर्दछन् । टिभीमा भने उनी समाचार, चन्द्रकान्ता, गुलाम, नेपाल मण्डलका कार्यक्रमहरू हेर्न मन पराउँछन् । राति १२ बजे पछि भने उनी सुत्ने गर्दछन् । राती ३ बजेतिर उठेर पानी उद्योग निरीक्षण गरेर फेरि सुत्छन् (शोधनायकबाट प्राप्त जानकारी) ।

यसरी दैनिक रूपमा निकै नै सङ्घर्षका साथ काममा व्यस्त हुने रत्नप्रसाद अनामणि श्रेष्ठ आफ्नो कामबाट बचेको समय र विदाको दिनमा साथीभाइसँग भेटघाट गर्ने, घरका गमलाहरू गोड्ने, घरमै पालेको माहुरी हेर्ने, चित्र कोर्ने, साहित्यिक कार्यक्रममा जाने, साङ्गीतिक बाजा मादल, गितार, धिमे, ड्रम लगायत बजाउने आदि कार्य गर्दछन् । कलाका पारखी अनामणि साथीभाइ भनेपछि हुरुक्कै हुन्छन् । त्यसैले साथीभाइसँग प्राय धेरै जमघट गर्न रुचाउँछन् । घरको कुनैपनि काम एवम् भान्छाको काम गर्न कत्ति पनि नरुचाउने अनामणिले दिउँसो ३ बजेतिर १ चोटि भने आफ्नी श्रीमतीले बाहिरको केहीपनि खानेकुरा नखाने भएकाले चिया बनाएर नजिकै रहेको आफ्नो उग्रचण्डी कपडा पसलमा पठाउने गर्दछन् । घरसल्लाह पछि मात्र महत्त्वपूर्ण निर्णयहरू लिने उनको राम्रो बानी रहेको छ । देशको राजनीतिक, सामाजिक ऐतिहासिक, सांस्कृतिक, अन्तराष्ट्रिय, साहित्य, सङ्गीत लगायतका कुरामा चासो राख्ने उनको बानी रहेको छ । उनी आफ्नो समयले भ्याएसम्म साहित्यिक कार्यक्रमहरूमा जाने गर्दछन् । उनले काभ्रे टाइम्स, संसाक पाक्षिक, सिटी पोष्ट, जनमत,  टिकी झ्या, खोज अनलाइन लगायतका पत्रिकाहरू तथा अन्य राष्ट्रिय दैनिकहरूमा कहिलेकाहीँ आफ्नो लेख रचना प्रकाशित गर्ने गरेका छन् (शोधनायकबाट प्राप्त जानकारी) ।

बढी चिया पिउन मन पराउने रत्नप्रसाद अनामणिको प्रायः जसो बेलुका रक्सी पिउने बाहेकका नराम्रा बानी खासै छैनन् । उनलाई तास खेल्ने मान्छेदेखि साह्रै नै घृणा लाग्ने कुरा बताउँछन् । खानामा साधारण दाल, भात, तरकारी एवम् कोइरालाको अचार मनपराउने अनामणिलाई समय अनुसारको नेवारी खाना पनि अति नै मन पर्दछ । हल्का नीलो सर्ट, पाइन्ट एवम् कालो छालाको जुत्ता उनको मनपर्ने पहिरन हो । उनी प्रायः जसो सर्ट र पाइन्टमै बस्ने गर्दछन् । उनलाई भलिबल खेल्न असाध्यै मनपर्छ । साहित्यिक किताब पढ्ने तथा लेख्ने, चित्र कोर्ने एवम् नाटकमा उनको विशेष रुचि रहेको छ । साथीभाइसँग ख्याल ठट्टा गर्दै साहित्यिक तथा समसामयिक कुरा गरी दिन बिताउन उनलाई खुबै मन पर्दछ ।

आधुनिक, लोक तथा कालजयी गीत उनलाई विशेष मनपर्छ । उनलाई हलेसी महादेव एवम् स्वर्गद्वारी भएको स्थानमा घुम्न साह्रै नै मनपर्छ । साहित्यका विधामा भने उनलाई कविता, हाइकु एवम् गजल विशेष मन पर्ने कुरा जनाउँदछन् (शोधनायकबाट प्राप्त जानकारी) ।

## २.८ स्वभाव

रत्नप्रसाद अनामणि श्रेष्ठ बाल्यकाल देखि नै बहिर्मुखी, सरल र मिजासिलो स्वभावका थिए । उनी बहुविधामा कलम चलाउने लेखक एवम् किसान, उद्योग व्यवसाय, व्यापार, सामाजिक क्रियाकलाप र राजनीति, शिक्षा सबै क्षेत्रमा चित्त बुझ्दो तर्कदिन सक्ने, बच्चा, बुढा, तन्नेरी, कामदार समेत सबैसँग मिल्न सक्ने सामाजिक व्यक्तित्व हुन् (रिमाल, २०७४ : ४) । आफू सबैसँग मिल्ने भएर होला, उनलाई सबैसँग मिल्ने व्यक्ति नै बढी मनपर्छ । उनलाई शान्त एवम् एकान्त ठाउँमा बसेर सृजना गर्न मन लाग्ने गर्दछ । आफुले लेखिरहेको बेलामा कोही आइपुग्यो भने लेख्न नपाएकोमा हल्का नरमाइलो अनुभव हुन्छ तर मन सम्हालेर आफूले लेखेको कुरा उसैलाई सुनाउने एवम् प्रतिक्रिया लिने गर्दछु भन्दछन् अनामणि । सधैँ हँसिलो एवम् ख्यालठट्टा गर्दै साथीभाइ माझ प्रस्तुत हुने बानी भएका अनामणिलाई कसैले गाली, व्यङ्ग्य एवम् कटाक्ष गरी कुरा गरेमा हाँसेर टार्ने गर्दछन् । हेप्ने एवम् जिस्काउनेहरूका विरुद्ध आफू पनि सोही अनुरूप प्रस्तुत हुने उनको बानी छ । तर अन्याय भने सहन नसक्ने कुरा उनी बताउँछन् । उनी आफ्नो रिसलाई सहजै काबुमा लिन सक्दछन् । साहित्य एवम् शिक्षामा अत्यन्तै लगाव राख्ने अनामणिलाई असहाय एवम् गरिबहरूको सेवा गर्न पाउँदा खुबै आनन्दित महसुस हुने गर्दछ । उनले असहाय एवम् गरिबहरू प्रति सहयोग गर्ने हेतुले श्री चण्डेश्वरी उच्च मा.वि.नालामा कक्षा १ देखि १० सम्मका विद्यार्थीका लागि पहिलो, दोस्रो तथा तेस्रो हुने विद्यार्थीलाई पुरस्कार स्वरूप प्रदान गर्न २०५६/५७ सालतिर आफ्ना आमाबाबुको नाममा लालजनक छात्रवृत्ति कोषको स्थापना गर्ने काम समेत गरेका थिए । बोलीवचन साह्रै मीठो भएका अनामणिले कुनैपनि मान्छेलाई एकैछिनमा प्रभावित गर्न सक्दछन् । चियाको चुस्कीसँगै विभिन्न विषयका किताब पढ्न उनलाई खुबै मनपर्छ । आफूले हजुरबुबा एवम् हजुरआमालाई देख्न नपाएका कारण बुढापाकालाई उनी असाध्यै रुचाउँछन् एवम् श्रद्धा गर्ने गर्दछन् (शोधनायकबाट प्राप्त जानकारी) ।

## २.९ विचार

रत्नप्रसाद अनामणि श्रेष्ठ कम्युनिष्ट सिद्धान्तबाट बढी प्रभावित रहेका छन् । यद्यपि हाम्रो पूर्वीय दर्शनलाई विज्ञानको नजिक रहेको छ भन्ने मान्यता राख्दै पूर्वीय दर्शनलाई फराकिलो एवम् सामयिक दृष्टिले हेर्ने गर्दछन् । साथै पूर्वीय दर्शनलाई वैज्ञानिक व्याख्या गर्न जरुरी छ भन्ने मान्यता राख्दछन् । उनी संसारमा ईश्वर कुनै न कुनै रूपमा छ भन्ने विचार राख्दछन् । उनको लेखनमा विशेष गरी प्रगतिशील एवम् शृङ्गारिक अभिव्यक्ति पाइन्छ । यसका अतिरिक्त मानवीयचेत, प्रकृतिचेत, विद्रोहात्मकता, काल्पनिकता, वैचारिकता, आध्यात्मिकता, सांस्कृतिकता, यथार्थता, चिन्तनशीलता, भातृत्व प्रेम आदि प्रवृत्ति पनि उनले आफ्ना रचनाहरूमा प्रयोग गर्ने गरेका छन् । उनी आफ्नो धर्म, संस्कृति एवम् परम्पराको जगेर्ना गर्नुमा विशेष चाख रहेको कुरा बताउँछन् । यसका साथै इतिहासको गर्भमा लुकेर रहेको कुरालाई खोज एवम् अन्वेषण गर्दै तथ्यपरक व्याख्या विश्लेषण गरी बाहिर ल्याउन रुचाउँछन् (शोधनायकबाट प्राप्त जानकारी) ।

## २.१० बसोबास

रत्नप्रसाद अनामणि श्रेष्ठको जन्म २०२६ सालमा काभ्रेको ग्रचण्डी गा.वि.स. वार्ड नं. २ भीमसेन रोड नालामा भएको थियो । आफ्नो जीवनको तिसौँ वर्षभन्दा बढी समय आफ्नै जन्मभूमि वरपर रही सङ्घर्ष गरी नै रहे । कृषि, उद्योग एवम् शिक्षक पेसामा संलग्न रही आफ्नो क्षेत्रको शैक्षिक, सामाजिक, सांस्कृतिक, साहित्यिक, ऐतिहासिक आदि पक्षको विकासमा संलग्न रहे पश्चात् उनी २०५६ सालमा परिवार सहित काठमाडौँको गोंगबु गा.वि.स. वार्ड नं. ६ (हालको टोखा न.पा. वार्ड नं. ९) मा गई उग्रचण्डी कपडा पसल खोली बसोबास गर्न थाले । त्यसको करिब ४ वर्षजति उनी काठमाडौँको आफ्नो पसलमा फुर्सदको समयमा बसेर श्रीमतीलाई सहयोग गर्दै नालामा आफ्नो शिक्षक पेसाका खातिर काठमाडौँबाटै जाउआउ गर्न थाले । तर २०६० सालमा शिक्षकमा स्थायी नियुक्ति पाएको १ महिना पछि सो पेसाबाट राजीनामा  गरी काठमाडौँमै व्यापार एवम् उद्योग व्यवसायमा संलग्न रही  बसोबास गर्न थाले । हाल उनी टोखा न.पा. वार्ड नं. ९ गोंगबुस्थित आफ्नै घरमा स्थायी रूपले बसोबास गर्दै विभिन्न किसिमका उद्योग एवम् व्यापार सञ्चालन गर्दै आएका छन् (शोध नायकबाट प्राप्त जानकारी) ।

## २.११ भ्रमण

रत्नप्रसाद अनामणि श्रेष्ठलाई सानै उमेरदेखि विभिन्न ठाउँमा घुम्न मन लाग्ने गर्दथ्यो । हालसम्म उनी नेपालका धेरै धार्मिक तथा पर्यटकीय स्थलमा घुमिसकेका छन् । स्वर्गद्वारी, लुम्बिनी, पोखरा, धरान, मनकामना, चितवन आदि ठाउँमा उनी पुगेका छन् । उनलाई हलेसी महादेव एवम् स्वर्गद्वारी खुबै मनपर्ने ठाउँ हुन् । मौका मिलेसम्म देशका धेरै ठाउँमा जान मन लागेको उनी बताउँछन् । त्यस्तै देशबाहिर भने उनी चीनको स्वशासित क्षेत्र तिब्बतको राजधानी ल्हासा, सिगार्चे लगायतका स्थानका साथै भारतको गोरखपुर, दार्जिलिङ्ग, सीतामडी आदि स्थानमा घुमेका छन् । भाग्यले साथ दिए समुद्र पारिका देशमा पनि डुल्ने इच्छा रहेको कुरा उनी बताउँछन् (शोधनायकबाट प्राप्त जानकारी) ।

## २.१२ प्रेरणा र प्रभाव

### २.१२.१ साहित्यिक प्रेरणा र प्रभाव

रत्नप्रसाद अनामणि श्रेष्ठले स्कुले जीवनदेखि नै कविता लेख्ने, साहित्यिक कार्यक्रमहरूमा भाग लिने गर्दै आएका थिए । सो समयमा गुरु दामोदर अधिकारीले उनको प्रतिभाको मूल्याङ्कन गरेर प्रेरणा प्रदान गर्दै साहित्यकार मोहन दुवालसँग भेटवार्ता गराईदिएका थिए । मोहन दुवालको साहित्यिक व्यक्तित्वबाट अनामणि निकै नै प्रभावित भएका थिए । त्यस्तै स्व.कृष्णप्रसाद पराजुली, स्व. जनकप्रसाद हुमागाईं, स्व. आशाकाजी सेवक, स्व.केदारनाथ प्रधान आदि साहित्यकारहरूबाट पनि उनले प्रेरणा र प्रभाव प्राप्त गरेका थिए । त्यसैगरी महाकवि देवकोटा, गुरूप्रसाद मैनाली, बबी शाह, बालकृष्ण सम, विश्वेश्वरप्रसाद कोइराला, सिद्धिचरण श्रेष्ठ, पारिजात, मोदनाथ प्रश्रित, केदारमान व्यथित, ध्वूँस्वाँ सायमी, कर्ण शाक्य, पुण्य प्रसाईं, पूर्णप्रकाश नेपाल 'यात्री', डा. शैलेन्दुप्रकाश नेपाल, डा. तारालाल श्रेष्ठ, कृष्ण धरावासी, जगदीश घिमिरे आदिका कृतिहरूबाट पनि उनी विशेष रूपले प्रभावित भएका थिए । यसका साथै साहित्यमा लागिरहनका लागि परिवार, साथीभाइ एवम् इष्टमित्रबाट सधैँ प्रेरणा पाइरहेको कुरा उनी बताउँछन् (शोधनायकबाट प्राप्त जानकारी) ।

### २.१२.२ शैक्षिक प्रेरणा र प्रभाव

रत्नप्रसाद अनामणि श्रेष्ठलाई शैक्षिक प्रेरणा आफ्नै बुबाआमा एवम् दाइ राजेप्रसाद श्रेष्ठद्वारा प्राप्त भएको थियो । त्यस्तै विद्यालयमा उनलाई गुरुहरू दामोदर अधिकारी एवम्

आशाकाजी श्रेष्ठले विशेष ख्याल गर्ने गर्दथे । विद्यालयमा उहाँहरूकै प्रेरणा एवम् प्रभाव पाएर अनामणिले अध्ययनलाई जोड दिन थालेका थिए । त्यसैगरी आफ्नै गाउँका अग्रज दाजुहरू उत्तमकुमार श्रेष्ठ एवम् विजयकुमार श्रेष्ठ एक पछि अर्को गरी एस.एल.सी. परीक्षामा बोर्ड फर्स्ट भएपछि अनामणिमा विशेष प्रभाव पर्न गई शिक्षा ग्रहण गर्नुपर्छ भन्ने भावनाको विकास भएको थियो । यसका साथै परिवार, आफन्त, साथीभाइ, इष्टमित्र आदिबाट पनि शैक्षिक प्रेरणा प्राप्त भएको थियो (शोधनायकबाट प्राप्त जानकारी) ।

## २.१३. लेखन र प्रकाशनको थालनी

### २.१३.१ साहित्यिक (लेखन र प्रकाशनको थालनी)

रत्नप्रसाद अनमाणि श्रेष्ठले बाल्यकाल देखि नै कविता लेख्ने एवम् साहित्यिक कार्यक्रमहरूमा भाग लिने गर्दथे । उनले पहिलोपटक आफ्नै टोलबाट प्रकाशित हुने 'भिन्तुना' भित्ते पत्रिकामा नेवारी भाषामा "नेवाः भाय् हेपेयायी पिन्त तगोगु मिखां स्वयनु" शीर्षकको कविता प्रकाशित गरेर प्रकाशनको थालनी गरे तापनि सो कविता हाल प्राप्त छैन । पछि उनले २०४५ सालमा भक्तपुरबाट प्रकाशित हुने 'पञ्चायत' मासिक पत्रिकाको वर्ष ६, अङ्क ८ मा 'नेपाल आमाको छातीमा शान्ति फिजाऊ' शीर्षकको नेपाली कविता प्रकाशित गरेर औपचारिक रूपमा नेपाली साहित्यमा पहिलो कदम अगाडि बढाएका थिए । त्यसपछि उनका 'मान्छेहरू' (२०४७), 'यात्रा अझै बाँकी छ' (२०५१) शीर्षकका फुटकर रचनाहरू प्रकाशित भए । उनको पहिलो रचनात्मक कृति **फूलको माया लागेपछि** मुक्तक सङ्ग्रह भने २०४८ सालमा प्रकाशित भएको थियो ।

### २.१३.२ साहित्येतर (लेखन र प्रकाशनको थालनी)

रत्नप्रसाद अनामणि श्रेष्ठले समय-समयमा विभिन्न पत्रपत्रिका एवम् पुस्तकाकार कृतिका रूपमा साहित्येतर विषयका लेख रचना प्रकाशित गर्दै आएका छन् । उनले आफ्नो नाम रत्नप्रसाद अनामणि श्रेष्ठ बाहेक रौसार-दार्जिलिङ्ग, मोलार राई सिंगापुर, अप्सरा श्रेष्ठ, अनामणि श्रेष्ठ, आर.पी. ब्रदर्श, मतदाता नकुल जस्ता छद्म नामले समेत फुटकर लेख रचनाहरू छपाएका छन् (पाण्डे, २०६३ : ६) । उनले नेवारी भाषामा ऐतिहासिक लेख 'नासद्यो' एवम् 'यम्हद्यो' शीर्षकका दुई कृति २०४९ सालमा प्रकाशित गरेर औपचारिक रूपमा साहित्येतर लेखनको थालनी गरेको भए तापनि नेपाली भाषामा भने २०५१/५२ को

जुनियर रेडक्रस स्मारिकामा 'नेपाल जुनियर रेडक्रस सर्कल' शीर्षकको लेख प्रकाशित गरेर सुरुवात गरेको देखिन्छ ।

## २.१३.३ हालसम्म प्रकाशित कृतिहरू

रत्नप्रसाद अनामणि श्रेष्ठले वि.सं. २०४८ सालमा 'फूलको माया लागेपछि' मुक्तक सङ्ग्रह प्रकाशित गरेर कृतिकारका रूपमा नेपाली साहित्य आकाशमा उदायका हुन् । त्यसपछि निरन्तर रूपमा एकपछि अर्को साहित्यिक तथा साहित्येतर कृतिहरू प्रकाशित गर्दै आएका छन् । उनका हालसम्म प्रकाशित कृतिहरू निम्न बमोजिम रहेका छन् ।

| क.सं. | शीर्षक | विधा | प्रकाशन |
|---|---|---|---|
| १. | फूलको माया लागेपछि | मुक्तक सङ्ग्रह | २०४८ |
| २. | नासद्यो | ऐतिहासिक लेख | २०४९ |
| ३. | यम्हद्यो | ऐतिहासिक लेख | २०४९ |
| ४. | दुखेको घाउ | हाइकु सङ्ग्रह | २०६१ |
| ५. | दाउहरू फरक फरक | गजल सङ्ग्रह | २०६२ |
| ६. | शब्द पथमा | हाइकु सङ्ग्रह | २०६९ |
| ७. | पत्रकारिताको परिचय | लेख सङ्ग्रह | २०७२ |
| ८. | भाषण कला | लेख सङ्ग्रह | २०७२ |
| ९. | मेरो गोरेटोमा तिम्रो छायाँ | मुक्तक सङ्ग्रह | २०७३ |
| १०. | ख्याल ख्यालमै सल्क्यो जिन्दगी | गजल सङ्ग्रह | २०७३ |
| ११. | लाज हराएका मान्छेहरू | कविता सङ्ग्रह | २०७३ |
| १२. | गौतम बुद्धको जीवनी | सङ्क्षिप्त जीवनी सङ्ग्रह | २०७३ |
| १३. | भो नखिच तस्बिर | मुक्तक सङ्ग्रह | २०७४ |
| १४ | लँय् लुगु किपा | हाइकु सङ्ग्रह (नेपाल भाषा) | २०७४ |

## २.१४ संलग्न सङ्घ संस्थाहरू

रत्नप्रसाद अनामणि श्रेष्ठ ग्रामीण नेवारी कृषक परिवारमा जन्मेर निकै सङ्घर्ष गर्दै कहिले खेतवारीमा काम गर्ने, कहिले पाउरोटी उद्योग सञ्चालन गर्ने, कहिले शिक्षकका रूपमा कार्य गर्ने जस्ता काम गरी आफ्नो अध्ययनलाई पनि सँगसँगै अगाडि बढाएका मेहनती स्रष्टा हुन् । लामो समयसम्म शिक्षक पेसामा आबद्ध भएपछि व्यापारको सिलसिलामा २०६० सालमा जागिरबाटै राजिनामा गरी काठमाडौँमै बसोबास गर्न थालेका थिए । काठमाडौँ झरेर उग्रचण्डी कपडा पसल खोलेका उनले त्यसपछि क्रमिक रूपमा प्रगति हासिल गर्दै व्यापार एवम् उद्योगका धेरै क्षेत्रमा लगानी गरेका छन् । आफ्नो जागिरे जीवन एवम् उद्योग, व्यापार बाहेक पनि उनी अन्य विभिन्न सङ्घ संस्थामा पनि आबद्ध हुँदै आएका छन् । जसलाई यसरी देखाउन सकिन्छ ।

१. विज्ञान डाइजेस्ट क्लबका सदस्य (२०४५)

२. काभ्रेली साहित्य संगमका संस्थापक सदस्य (२०४७)

३. द रेयुकाइ नेपाल काभ्रे शाखाका संस्थापक कार्य समिति सदस्य (२०४८/४९)

४. नेपाल रेडक्रस सोसाइटी काभ्रे शाखा जुनियर रेडक्रस उपसमितिका सदस्य (२०५०/५१) एवम् जुनियर रेडक्रस समितिका संयोजक (२०५१/५२)

५. मंका: खल: काभ्रेशाखाका सचिव (२०५१)

६. उग्रचण्डी वचत तथा ऋण सहकारी संस्थाका संस्थापक अध्यक्ष (२०५१-२०६१)

७. सुनकोशी साहित्य प्रतिष्ठानका आजीवन सदस्य (२०५२)

८. काभ्रे एकीकृत परियोजना सल्लाहकार समितिका कोषाध्यक्ष (२०५३-२०५६)

९. काभ्रे पुस्तक तथा स्टेशनरी विक्रेता सङ्घका सचिव (२०५६)

१०. चण्डेश्वरी माध्यमिक विद्यालय नाला काभ्रेको भवन निर्माण कमिटिका सदस्य ( २०५६/५७)

११. साहित्यिक पत्रकार सङ्घका सदस्य (२०५६/५७)

१२. नाला समाज काठमाडौँका सह-सचिव (२०५८)

१३. नेपाल राष्ट्रिय डन्डिबियो क्लबका अध्यक्ष (२०६४)

१४. गोंगबु व्यापार समितिका अध्यक्ष (२०६० देखि हालसम्म)

१५. खानेपानी प्रशोधन तथा बिक्री वितरण सङ्घका संस्थापक महासचिव (२०६८-२०७०)

१६. जनमत वाङ्मय प्रतिष्ठान नेपालका आजीवन सदस्य (२०६९)

१७. 'संसाक' साहित्यिक पाक्षिक पत्रिकाको वर्ष १, अङ्क २, २०७० असोजदेखि हालसम्म सल्लाहकार

१८. नेपाल शान्ति स्काउटका सहायक कमिस्नर (२०७१/७२)

१९. सामुदायिक प्रहरी सेवा समिति गोंगवुका बुद्धिजीवी समितिको सदस्य

२०. पेट एसोसियसन नेपालका संस्थापक सदस्य (२०७१ देखि हालसम्म)

२१. खेलकुद साहित्यकार समाजका संस्थापक सचिव (२०७३ देखि हालसम्म)

२२. नेपाल पत्रकार सङ्घका सदस्य (२०७४)

२३. अनलाइन रेडियो सङ्घका संस्थापक उपाध्यक्ष (२०७४)

## २.१५ सम्मान तथा पुरस्कार

रत्नप्रसाद अनामणि श्रेष्ठले साहित्यिक तथा सामाजिक क्षेत्रमा महत्त्वपूर्ण योगदान पुऱ्याउँदै आएका छन् । यसका साथै उनले विभिन्न साहित्यिक तथा खेलकुद कार्यक्रमहरूमा भाग लिई विभिन्न सम्मान तथा पुरस्कार पनि प्राप्त गरेका छन् । उनले पाएका सम्मान तथा पुरस्कारहरूलाई निम्न बमोजिम प्रस्तुत गरिएको छ ।

१. चैतन्य बहुमुखी क्याम्पस, बनेपाको द्वितीय वार्षिकोत्सवको उपलक्ष्यमा २०५० सालमा आयोजना गरिएको खेलकुद कार्यक्रममा भलिवल एवम् फुटबल प्रतियोगिता दुवैमा प्रथम स्थान हासिल गरी पुरस्कार प्राप्त गरेका

२. नेपाल रेडक्रस सोसाइटी, काभ्रेली १२ औं जिल्ला जुनियर गोष्ठीमा रेडक्रसमा रही मानवसेवामा उल्लेख्य योगदान गर्नुभएकोमा २०५१/११/६ गते कदर पत्रद्वारा सम्मानित

३. लायन्स क्लब काभ्रेद्वारा आयोजित सम्मान कार्यक्रममा समाजसेवामा उल्लेख्य योगदान गरेवापत सन् १९९७ फेब्रुवरी १ (२०५३) मा कदर पत्रद्वारा सम्मान

४. कान्ति महिला परिवारद्वारा आयोजित महिला सशक्तीकरण, वृद्धाश्रम र शिशु स्याहार भवन निर्माणार्थ सञ्चालित श्रीमद्भागवत सप्ताह ज्ञान महायज्ञमा मूल आयोजक समितिमा रही अत्यन्तै सक्रिय रूपमा कार्य गरी पुऱ्याएको योगदानको उच्च सम्मान गर्दै २०६६/५/१४ मा कदर पत्रद्वारा सम्मान

५. हाम्रो पौरखी वचत तथा ऋण सहकारी संस्थाबाट अधिकतम कर्जा उपभोग गरी उत्पादनमूलक व्यवसाय सञ्चालन गरेकोमा उत्कृष्ट कर्जाधनीको रूपमा २०६८ पौष ३० गते दोसल्ला ओढाएर कदर पत्रद्वारा सम्मान

६. जे.पी. प्रतिष्ठानद्वारा प्रतिष्ठानको भौतिक पूर्वाधार विकास तथा मैत्री सेवाश्रम अन्तर्गत उदारपूर्वक समाज सेवामा देखाएको सेवा भावको उच्च मूल्याङ्कन गर्दै २०६८/१२/२० मा सम्मान पत्र प्रदान गर्दै सम्मान

७. जनमत वाङ्मय प्रतिष्ठान नेपालद्वारा आयोजित कार्यक्रममा जनमतको स्थापना कालदेखि विशिष्ट सदस्य भई उर्जाशील शक्ति थपिदिन पुऱ्याएको योगदानको कदर गर्दै २०७०/१२/२९ गते सम्मान पत्रद्वारा सम्मान

८. नेवा : देय् दवु, नाला कचाः द्वारा सामाजिक जागरण, साहित्य जागरण गरी नाला क्षेत्रको साहित्यिक, सांस्कृतिक, सामाजिक, व्यापारिक, औद्योगिक लगायत विविध क्षेत्रमा पुऱ्याएको अतुलनीय योगदानको कदर गर्दै २०७१/३/२८ गते शनिवार दोसल्ला ओढाएर कदरपत्रका साथ सम्मान

९. श्री सरस्वती आधारभूत विद्यालयको पुस्तकालयमा १०० थान पुस्तक दान गरेकोमा २०७३ सालमा सम्मानपत्रद्वारा सम्मान

१०. संसाक पाक्षिकले आयोजना गरेको प्रथम साहित्यिक मैत्रीपूर्ण वास्केटवल खेल (२०७३) मा प्रथम स्थान हासिल गरी पुरस्कृत भएका

११. गौरी पब्लिक रिलेसन एन पब्लिकेसनद्वारा २०७३/५/१६ मा **ख्यालख्यालमा सल्क्यो जिन्दगी** (२०७३) तथा **मेरो गोरेटोमा तिम्रो छायाँ** (२०७३) जस्ता कृतिहरू रचना गरी साहित्यमा अतुलनीय योगदान पु¥याएकोमा सम्मान पत्रद्वारा सम्मान

१२. संसाक पाक्षिक तथा साहित्यकार खेलकुद समाज नेपालले आयोजना गरेको साहित्यिक मैत्रीपूर्ण फुटबल तथा भलिबल खेलमा प्रथम स्थान हासिल गरी पुरस्कृत भएका ।

१३. जनमत वाङ्मय प्रतिष्ठानद्वारा साहित्यमा सुन्दर कार्य र सेवा पु¥याए वापत 'जनमत जनक सेवा सम्मान २०७३' द्वारा सम्मानित भएका ।

## २.१६ निष्कर्ष

रत्नप्रसाद अनामणि श्रेष्ठको जन्म २०२६ साल असाढ शुक्लपक्ष दशमी ३८ घडा र २० पालाको समयमा भएको थियो । लामो समयसम्म आफ्नो यथार्थ जन्ममितिको बारेमा अनभिज्ञ रहेका अनामणिले आफ्ना विभिन्न कार्यका लागि जन्ममिति आवश्यक परेकोले २०२६ असोज ६ गते राख्न गएका हुन् । त्यसैले उनका हरेक कागजपत्रमा यही जन्ममिति नै रहेको देखिन्छ । त्यसैले सक्कली जन्ममिति अर्कै रहे तापनि कागजपत्रमा उल्लेख भए बमोजिमको आधिकारिक जन्ममिति २०२६/६/६ गतेलाई नै मान्न सकिन्छ । आफू जान्ने सुन्ने भएपछि निकै खोज गरे पश्चात् आफ्नो खास जन्ममिति पत्ता लगाएर उनले चिना बनाउन लगाएका हुन् ।

मध्यमवर्गीय ग्रामीण नेवारी कृषक परिवारमा जन्मेका अनामणिका दाजु राजप्रसाद, दिदी शान्तिमाया, भाइ कृष्णप्रसाद एवम् बहिनीहरू रमेला र चमेली गरी ६ जना दाजुभाइ तथा दिदीबहिनीहरू रहेका छन् । उनले सानै उमेरदेखि पारिवारिक व्यवसाय कृषि एवम् व्यापारमा सघाउँदै आफ्नो अध्ययनलाई अगाडि बढाएका थिए । पाउरोटी उद्योग सञ्चालन गर्दै आइ.एस.सी. एवम् शिक्षण पेसा अपनाउँदै बी.एड. अनि नेपालीमा एम.ए गरेका अनामणि निकै परिश्रमी सर्जक हुन् । काम सबै जानेका एवम् नयाँनयाँ काम सिक्नमै तल्लीन रहने अनामणि २०६० सालमा शिक्षण पेसाबाट राजीनामा गरी व्यापार गर्ने हेतुले काठमाडौंमा बसोबास गर्न थालेका थिए । व्यापारमा सफलता हात पार्दै उनले धेरै क्षेत्रमा आफ्नो हात बढाउँदै गए । हाल उनी एक कुशल उद्योगी, व्यापारी, साहित्यकर्मी एवम् सामाजिक व्यक्ति बन्न सफल भएका छन् ।

बाल्यकालदेखि नै साहित्यिक क्रियाकलापमा रुचि राख्ने अनामणिले पहिलो पटक आफ्नै टोलबाट प्रकाशित हुने 'भिन्तुना' भित्ते पत्रिकामा नेवारी भाषामा 'नेवाः भाय् हेपेयायी पिन्त तगोगु भिखां स्वयनु' शीर्षकको कविता प्रकाशित गरेर औपचारिक साहित्य यात्रा सुरु गरेका भए तापनि हाल सो कविता प्राप्त छैन । पछि उनले भक्तपुरबाट प्रकाशित हुने पञ्चायत मासिक पत्रिकाको वर्ष ६, अङ्क ८ मा 'नेपाल आमाको छातीमा शान्ति फिजाऊ' शीर्षकको कविता प्रकाशित गरेर नेपाली साहित्यमा औपचारिक यात्रा सुरु गरेका थिए । उनको पहिलो रचनात्मक कृति 'फूलको माया लागेपछि' (२०४८) मुक्तक सङ्ग्रह हो । विद्यालयमा हुँदा गुरु दामोदर अधिकारीले उनको प्रतिभाको उच्च मूल्याङ्कन एवम् प्रेरणा प्रदान गर्दै साहित्यकार मोहन दुवालसँग भेटवार्ता गराइदिए । सो वेला उनी मोहन दुवालको व्यक्तित्वबाट निकै प्रभावित भएका थिए । त्यस्तै स्व. कृष्णप्रसाद पराजुली, स्व. जनकप्रसाद हुमागाईं, स्व. आशाकाजी सेवक, स्व. केदारनाथ प्रधान आदि साहित्यकारहरूबाट पनि उनले प्रेरणा एवम् प्रभाव प्राप्त गरेका थिए । २०५२ सालमा शान्ति श्रेष्ठसँग २६ वर्षको उमेरमा मागी विवाह गरेका अनामणिका दुई छोरा रुजेन र सुजेन रहेका छन् । हाल उनी परिवारका साथमा गोंगबुस्थित आफ्नै निवासमा बसोबास गर्दै उद्योग एवम् व्यापार व्यवसायमा संलग्न रहँदै आएका छन् ।

## परिच्छेद तीन

# रत्नप्रसाद अनामणि श्रेष्ठको व्यक्तित्व

## ३.१ पृष्ठभूमि

रत्नप्रसाद अनामणि श्रेष्ठले जीवनमा जतिसुकै कठोर सङ्घर्ष गर्नुपरेता पनि आफ्नो उद्देश्य एवम् विचारबाट कहिल्यै पछि हटेनन् । उनले आफ्नो पेसा एवम् साहित्यको क्षेत्रबाट समाजलाई योगदान गरिनै रहेका छन् । विद्यार्थीकालीन अवस्थादेखि वर्तमानसम्म पनि उनले समाजका विविध क्षेत्रसँग आबद्ध भई निरन्तर रूपमा कार्य गरिरहेका छन् । यसबाट उनको व्यक्तित्व निश्चय नै बहुआयामिक रहेको छ भन्न सकिन्छ । उनको व्यक्तित्वको समग्र अध्ययन गर्दा उनी विभिन्न क्षेत्रमा आफ्ना विशेषताहरूका साथ देखा पर्दछन् । जसलाई विभिन्न शीर्षक एवम् उपशीर्षकहरूमा राखेर यसरी प्रस्तुत गर्न सकिन्छ ।

## ३.२ साहित्यिक व्यक्तित्व

रत्नप्रसाद अनामणि श्रेष्ठको साहित्यिक अनुराग बाल्यकाल देखिनै सुरुवात भएको देखिन्छ । करिब ६-७ कक्षामा पढ्दाको अवस्थामा अनिवार्य नेपाली विषयमा 'पत्रपत्रिका' भन्ने शीर्षकको पाठ पढ्दा देखि नै आफूमा पढ्नुपर्छ भन्ने भावनाको विकास भएको कुरा उनी बताउँछन् । यसैबेलादेखि नै उनी अध्ययनशील एवम् साहित्यप्रेमी भएको देखिन्छ । उनका बुबा पनि साहित्यप्रेमी हुनुहुन्थ्यो । जसका कारणले पनि घरमा साहित्यिक पाठ्यपुस्तकहरू भित्रिरहन्थे । यसैले गर्दा पनि उनको साहित्यिक व्यक्तित्वको विकासमा टेवा पुगेको पाइन्छ । विद्यालयस्तरमा हुने साहित्यिक कार्यक्रमहरूमा अनामणिले भाग लिइरहन्थे । उनको साहित्य तर्फको झुकाव देखेर गुरु दामोदर अधिकारीले साहित्यकार मोहन दुवालसँग भेटवार्ता गराइदिए । मोहन दुवालसँगको भेटपछि उनको साहित्यिक व्यक्तित्वबाट अनामणि निकै नै प्रभावित भएका थिए । पछि उनकै सङ्गतबाट काभ्रेली साहित्यिक संगमको स्थापना गरी यसैको संस्थापक सदस्य भई कार्य समेत गरे (शोधनायकबाट प्राप्त जानकारी) । 'नेपाल आमाको छातीमा शान्ति फिजाऊ' (२०४५) शीर्षकको कविता **पञ्चायत** मासिक पत्रिकाको वर्ष ६, अङ्क ८ मा प्रकाशित गरेर औपचारिक रूपमा साहित्यिक सागरमा हाम फालेका अनामणिका सुरुवाती चरणका कवितामा राष्ट्रप्रेमले ओतप्रोत भाव पाइन्छ । त्यसै समय देखि नै उनको साहित्यिक यात्रा निरन्तर चलिरहेको छ । उनी विशेषत: मोहन दुवाल, स्व.

कृष्णप्रसाद पराजुली, स्व.जनकप्रसाद हुमागाइँ, स्व.आशाकाजी सेवक, स्व.केदारनाथ प्रधान आदिबाट साहित्यमा प्रभावित भएका थिए (शोधनायकबाट प्राप्त जानकारी) । उनले साहित्यका विविधविधा कविता, गजल, मुक्तक, हाइकु आदिमा कलम चलाएको पाइन्छ । उनका साहित्यिक कृतिहरूमा राष्ट्रप्रेम, विकृति-विसङ्गतिप्रति व्यङ्ग्य विद्रोह, प्रकृति-प्रेम, शृङ्गारिकता, शान्तिको चाहना, मानवीय संवेदना, जीवनको रहस्योद्घाटन र विरोधाभासको चित्रण जस्ता भावहरू पाइन्छन् । उनको साहित्यिक व्यक्तित्व मूल रूपमा कविताकार, मुक्तककार, हाइकुकार, गजलकार, जीवनीकार आदि रहेका छन् ।

## ३.२.१ कवि व्यक्तित्व

रत्नप्रसाद अनामणि श्रेष्ठ विशेष गरी रेडियोको बालकार्यक्रम तथा स्कुलमा हुने कवितावाचन प्रतियोगिताको कारणले विशेष प्रभावित भई कविता लेखनमा सक्रिय भएका हुन् । उनले आफ्नो टोलबाट प्रकाशित हुने 'भिन्तुना' भित्ते पत्रिकामा नेवारी भाषामा "नेवाः भाय् हेपेयायी पिन्त लगोगु मिखां स्वयनु" शीर्षकको कविता प्रकाशित गरी कविता लेखनी प्रारम्भ गरेका हुन् । तर हाल यो कविता प्राप्त छैन (शोधनायकबाट प्राप्त जानकारी) । यसैकारण उनको पहिलो प्रकाशित प्राप्त कविता "नेपाल आमाको छातीमा शान्ति फिजाऊ" (२०४५) लाई मान्न सकिन्छ । यसपछि उनका 'मान्छेहरू' (२०४७), 'लाहुरेको चिठी' (२०४९), 'यात्रा अझै बाँकी छ' (२०५१) जस्ता फुटकर रचनाहरू प्रकाशित भएको पाइन्छ । खासगरी गद्यमा कविता लेख्न रुचाउने अनामणिका कविताले गहन भाव बोकेको पाइन्छ । फुटकर रूपमा विभिन्न पत्रिकामा कविताहरू प्रकाशित गर्दै आएता पनि उनको एकमात्र प्रकाशित कविता सङ्ग्रह **लाज हराएका मान्छेहरू** (२०७३) हो । जसमा २० वटा कविताहरू समावेश गरिएका छन् । सामान्य स्तरका पाठक भन्दा बौद्धिक पाठकले श्रेष्ठ ज्यूका कविताको मूल्य थाहा पाउने छन् (सापकोटा, २०७३ : १६-२०) । उनको साहित्यिक व्यक्तित्व अन्तर्गतको कवि व्यक्तित्वलाई मुख्य व्यक्तित्वका रूपमा लिन सकिन्छ ।

## ३.२.२ मुक्तककार व्यक्तित्व

रत्नप्रसाद अनामणि श्रेष्ठ मूलतः कृष्णप्रसाद पराजुली तथा मोहन दुवालका मुक्तकहरूबाट विशेष प्रभावित भई मुक्तक लेखनीमा हात लम्काएका स्रष्टा हुन् (शोधनायकबाट प्राप्त जानकारी) । साहित्यमा उनको मुक्तककार व्यक्तित्व पनि विशेष उल्लेखनीय रहेको पाइन्छ । २०४६ सालमा काभ्रेबाट प्रकाशित 'जनमत' मासिक पत्रिकाको

वर्ष ६, अङ्क १/२ मा 'हवाइजहाज मात्र होइन प्रिय' शीर्षकको मुक्तक प्रकाशित गरी मुक्तक लेखन सुरु गरेका अनामणिका मुक्तकहरूमा माया-प्रीति मिलन, विछोड, जीवनको पीडादायिक भोगाई, देश छोड्दाको पीडा, अभाव, देशप्रेम, इमान्दारीपन, कृषिप्रतिको मोह आदि जस्ता विषयवस्तुको प्रयोग पाइन्छ । यद्यपि उनका अधिकांश मुक्तकहरू शृङ्गारिक भावले ओतप्रोत रहेका छन् । विभिन्न पत्रपत्रिकाहरूमा फुटकर रूपमा मुक्तकहरू प्रकाशित गर्दै आएका उनले हालसम्म हालसम्म तीन वटा मुक्तक सङ्ग्रह **फूलको माया लागेपछि** २०४८), **मेरो गोरेटोमा तिम्रो छायाँ** (२०७३) र **भो नखिच तस्बिर** (२०७४) प्रकाशित गरेका छन् । जसमध्ये **फूलको माया लागेपछि** (२०४८) मा ३२ वटा, **मेरो गोरेटोमा तिम्रो छायाँ** (२०७३) मा ४० वटा र **भो नखिच तस्बिर** (२०७४) मा ३७ वटा मुक्तकहरू समावेश गरिएको छ ।

### ३.२.३ हाइकुकार व्यक्तित्व

हाइकुकार व्यक्तित्व पनि रत्नप्रसाद अनामणि श्रेष्ठको एक महत्त्वपूर्ण साहित्यिक व्यक्तित्व हो । 'तिलीकता स्वाँ' नेवारी हाइकु सङ्ग्रहबाट विशेष प्रभावित भई नेपाली साहित्यको हाइकु विधामा कलम चलाउन थालेको हुँ भन्छन् अनामणि । २०५० सालमा प्रकाशित 'स्पन्दन' साहित्यिक मासिक पत्रिकाको वर्ष १ अङ्क १ मा केही हाइकुहरू शीर्षकमा ४ वटा हाइकुहरू प्रकाशित गरी हाइकु लेखन यात्राको थालनी गरेका उनले हालसम्म **दुखेको घाउ** (२०६१), **शब्द पथमा** (२०६९) र **लँय् लुगु किपा** (२०७४) गरी तीन वटा हाइकु सङ्ग्रह प्रकाशित गरेका छन् । यी सङ्ग्रहहरू मध्ये **दुखेको घाउ** (२०६१) चित्राङ्कित हाइकु सङ्ग्रह हो । जसमा भाव अनुसारका चित्रहरू समावेश गरिएका छन् । यादव श्रेष्ठद्वारा बनाइएका चित्रहरू राखिएको यस सङ्ग्रहमा ३२ वटा हाइकुहरू रहेका छन् । साथै उनको दोस्रो हाइकु सङ्ग्रह **शब्द पथमा** (२०६९) मा १२० वटा हाइकुहरू रहेका छन् । यो हाइकु सङ्ग्रह तत्कालीन समयमा प्रकाशनमा आएका हाइकु सङ्ग्रहहरूमध्ये सबैभन्दा सानो आकारको मानिएको थियो । जसको लम्बाइ २ इन्च र चौडाइ साढे १ इन्च रहेको छ । साथै उनको तेस्रो हाइकु सङ्ग्रह **लँय् लुगु किपा** (२०७४) नेपाल भाषामा प्रकाशित गरेका छन् । हाइकुकार अनामणिले आफ्ना हाइकुमार्फत नेपाली परम्परागत संस्कार र नेपाली प्रकृति तथा त्यसको निश्चल र निर्मल रसास्वादनमा रमाइरहेको समाजको चित्रण मात्र गरेका छैनन्, बरु समाजमा रहेका विकृति तथा विसङ्गति माथि निर्मम प्रहार गरेका छन् (हमाल, २०७१ : २१) । साथै उनका हाइकुहरूमा भ्रष्टाचार, विकृति, विसङ्गति, अन्याय,

अत्याचारको विरोध, बलात्कृत महिलाको पीडा, माया-प्रीति एवम् शृङ्गारिक भाव, प्रकृति प्रेम, आडम्बरी समाजको चित्रण लगायतका विषयवस्तु पाइन्छन् ।

### ३.२.४ गजलकार व्यक्तित्व

रत्नप्रसाद अनामणि श्रेष्ठ गजलकार व्यक्तित्वका रूपमा पनि चिनिन्छन् । यो उनको साहित्यिक व्यक्तित्वको अर्को महत्त्वपूर्ण पाटो हो । २०४९ कार्त्तिकमा प्रकाशित 'जनमत' मासिक पत्रिकाको वर्ष ९, अङ्क १० मा 'आँसुहरू पिइरहेँ, बाहिर सधैँ हाँसे पनि' शीर्षकको गजल प्रकाशित गरेर उनी नेपाली साहित्यको गजल संसारमा होमिएका हुन् । अनामणिका हालसम्म आइपुग्दा **दाउहरू फरक-फरक** (२०६२) र **ख्याल ख्यालमै सल्क्यो जिन्दगी** (२०७३) गरी २ वटा गजल सङ्ग्रह प्रकाशित भइसकेका छन् । खासगरी २०५२ सालमा धुलिखेलमा सम्पन्न भएको कवि गोष्ठीमा पोखरेली कवि तथा गजलकार विजय वजिमयको गजल वाचनबाट विशेष प्रभावित भई गजल यात्रामा थप उर्जा प्राप्त गरेका अनामणि रवि प्राञ्जलका गजल सङ्ग्रहहरूबाट पनि उत्तिकै प्रभावित भएको कुरा जनाउँदछन् । उनको पहिलो गजल सङ्ग्रह **दाउहरू फरक-फरक** (२०६२) मा अनामणिले प्रेम र शृङ्गारलाई मात्र विषय र प्रसङ्ग नबनाइ देशको समसामयिकताबारे, मानवीय सम्बन्धबारे, शोषण र अन्यायका विरुद्ध पनि आवाज उठाएका छन् (दुवाल, २०६२ : ३३) त्यसैगरी उनको दोस्रो गजल सङ्ग्रह **ख्याल ख्यालमै सल्क्यो जिन्दगी** (२०७३) मा विशेषगरी प्रेमभावमय शृङ्गारिक गजलको बाहुल्य रहेतापनि देशप्रेम, विद्रोह, वैदेशिक पीडा, जिन्दगीका उकाली-ओराली लगायतका विषयवस्तुलाई पनि कहीँकतै उनले समावेश गरेको पाइन्छ । उनका **दाउहरू फरक-फरक** (२०६२) गजल सङ्ग्रहमा २७ वटा एवम् **ख्यालख्यालमै सल्क्यो जिन्दगी** (२०७३) मा ३८ वटा गजलहरू रहेका छन् ।

### ३.२.५ जीवनीकार व्यक्तित्व

रत्नप्रसाद अनामणि श्रेष्ठ जीवनीकार व्यक्तित्वका रूपमा पनि चिनिन्छन् । यो उनको साहित्यिक व्यक्तित्वको अर्को महत्त्वपूर्ण पाटो हो । २०५४ को 'जनमत' साहित्यिक मासिक पत्रिकाको वर्ष १२, अङ्क १२, साहित्यिक अङ्क ४९ मा स्वर्गीय नाटककार कृष्णप्रसाद किसी श्रेष्ठको संक्षिप्त जीवनी प्रकाशित गरेर अनामणि जीवनी लेखनीमा प्रवेश गरेको पाइन्छ । त्यसपछि उनले नाला समाजका संस्थापक अध्यक्ष डा. ज्ञानलाल श्रेष्ठको मृत्यु पश्चात् 'नाला समाज स्मारिका' (२०६०) मा "डा. ज्ञानलाल श्रेष्ठ : एक परिचय" शीर्षकमा संक्षिप्त

जीवनी लेखेको पाइन्छ । यसमा उनले डा. श्रेष्ठको योगदानका बारेमा मूल्याङ्कन गरेका छन् । यसैगरी **गौतम बुद्धको जीवनी** शीर्षकमा अनामणिले भगवान् गौतम बुद्धको संक्षिप्त जीवनीमूलक कृति २०७३ सालमा प्रकाशन गरेका छन् । ३२ पृष्ठमा रहेको सानो आकारको उक्त कृति मार्फत उनले भगवान् गौतम बुद्धको जीवन बारे सङ्क्षिप्त प्रकाश पारेका छन् ।

### ३.२.६ निबन्धकार व्यक्तित्व

रत्नप्रसाद अनामणि श्रेष्ठ निबन्धकार पनि हुन् । उनको साहित्यिक व्यक्तित्वको पाटो केलाउँदा निबन्धकार व्यक्तित्वलाई पनि महत्त्वका साथ व्याख्या एवम् विवेचना गर्नुपर्ने हुन्छ । २०५१ सालमा प्रकाशित 'वंन्दिका विविध' पाक्षिक पत्रिकाको वर्ष १, अङ्क ८ मा 'मोटरको थोत्रो टायरले इज्जत बढ्यो' शीर्षकको व्यङ्ग्यात्मक निबन्ध प्रकाशित गरेर नेपाली साहित्यमा निबन्ध यात्राको थालनी गरेका अनामणिको हालसम्म आइपुग्दा थुप्रै फुटकर निबन्धहरू प्रकाशित भएको देखिन्छ । उनको 'सृष्टिकर्ता ब्रह्मालाई चेतावनी', 'तिमी आउँदै गर', 'मेरो एकदिन', 'युवा' लगायतका फुटकर निबन्धहरू प्रकाशित भएको पाइन्छ । खासगरी व्यङ्ग्यात्मक शैलीमा निबन्ध लेख्न रुचाउने अनामणिका निबन्धमा सामाजिक यथार्थको उठान पनि पाइन्छ ।

## ३.३ साहित्येतर व्यक्तित्व

साहित्यिका विभिन्न विधामा कलम चलाएका रत्नप्रसाद अनामणि श्रेष्ठ साहित्यमा विभिन्न व्यक्तित्वका रूपमा चिनिन सफल भएका छन् । रत्नप्रसाद सायद ढाँट्न जान्दैनन् होला, रत्नप्रसादले सायद चुपचाप बस्न जानेका छैनन् होला-निकै परिश्रम गर्छन् । अल्छी शब्द नै शब्दकोशमा छैन जस्तो छ उनको जीवनक्रम हेर्दा, काम सबै जानेका, नयाँ नयाँ काम सिक्न पाए खुब तल्लीन भई गर्न खोज्ने, सिक्न खोज्ने प्रवृत्तिले गर्दा जे काम पनि सिकिहाल्ने खालका रत्नप्रसादले वाहन चलाउनेदेखि लिएर कुटो कोदालीसम्म चलाउन सिकेका छन् । चक, डस्टर बोक्नुदेखि लिएर सङ्गीतको ड्रम, मादलसम्म बजाउन जानेका छन् (दुवाल, २०५६ : ४) । उनको साहित्येतर व्यक्तित्व व्यक्तिगत उन्नति-प्रगति, पारिवारिक, व्यवसायिक जीवनका क्रियाकलाप, प्रतिकूल परिस्थिति, संघर्ष आदिमा केन्द्रित हुँदाहुँदै पनि उनको शिक्षा, समाज र जीवन संघर्ष साथै चिन्तनशीलतालाई महत्त्वपूर्ण

प्राप्तिका रूपमा लिन सकिन्छ । यिनै विविध पक्षहरूका आधारमा उनको साहित्येतर व्यक्तित्वलाई केलाउन सकिन्छ ।

### ३.३.१ शारीरिक व्यक्तित्व

रत्नप्रसाद अनामणि श्रेष्ठ बहुआयामिक व्यक्तित्व भएका व्यक्ति हुन् । व्यक्तित्व भनेको बाहिरी आँखाले आंकलन गर्न सकिने जीउडाल, रूपरङ्ग आदिद्वारा प्रष्टिन्छ । अनामणिलाई बाहिरी र आन्तरिक व्यक्तित्वले पनि चिन्न सकिन्छ । आन्तरिक व्यक्तित्वले आफ्नो नाम राख्न सफल अनामणि बाहिरी व्यक्तित्वले पनि त्यत्तिकै धनी देखिन्छन् । उनका कृतिहरू मात्र आकर्षक होइनन्, उनको शारीरिक आकृति पनि आकर्षक किसिमको देखिन्छ । उमेरमा ४९ वर्ष पुगेका अनामणिको उचाइ ४ फिट ९ इन्च तथा ७६ के.जी. शारीरिक तौल रहेको छ । होचो कदका हेर्दा मोटा-मोटा देखिने अनामणिको गोलो मुखाकृति सधैँ हँसिलो रहेको देख्न सकिन्छ । गहुँगोरो वर्णका अनामणि घरमा बस्दा सर्ट पाइन्ट लगाएर बस्न रुचाउँछन् भने सभा समारोहमा जाँदा परिस्थिति अनुकूल सर्टपाइन्ट तथा कोट पाइन्ट लगाउने गर्दछन् । पोसाकमा उनलाई हल्का नीलो सर्ट र पाइन्ट मन पर्छ (शोधनायकबाट प्राप्त जानकारी) । सादा जीवन उच्च विचारमा आस्था राख्ने अनामणिको शारीरिक व्यक्तित्व एउटा साधारण नेपाली नागरिकको जस्तै देखिन्छ ।

### ३.३.२ अध्ययनशील व्यक्तित्व

रत्नप्रसाद अनामणि श्रेष्ठ एक अध्ययनशील व्यक्ति हुन् । उनले कक्षा १ देखि १० सम्म चण्डेश्वरी उच्च मा.वि. नाला काभ्रेमा अध्ययन पुरा गरेका थिए । सुरुका दिनहरूमा उनी पढाइमा निकै नै कमजोर थिए । कक्षा ४ बाट मात्र शैक्षिक स्तरमा सुधार आएको कुरा उनी बताउँछन् । कक्षा ६ देखि १० सम्म त उनी कक्षामा कि त द्वितीय, कि त तृतीय स्थान हासिल गर्दथे । घरको खेतिपाती तथा पसलको काममा बुबाआमालाई सहयोग गर्दै आफ्नो पढाइ अगाडि बढाएका अनामणिले २०४३ सालमा द्वितीय श्रेणीमा एस.एल.सी. परीक्षा उत्तीर्ण गरेका थिए । त्यसपछि उनले भक्तपुर बहुमुखी क्याम्पस भक्तपुर दुधपाटीबाट २०४६ सालमा भौतिकशास्त्र लिएर आइ.एस.सी परीक्षा उत्तीर्ण गरे । पाउरोटी उद्योग सञ्चालन गर्दै अध्ययन गरेका अनामणिले आइ.एस.सी. परीक्षामा सोचे जस्तो सफलता हात पार्न सकेनन् । त्यसपछि उनले आफूले अध्ययन गरेको विद्यालय चण्डेश्वरी मा.वि.मा अस्थायी शिक्षकको रूपमा कार्य गर्दै नेपाली एवम् स्वास्थ्य शारीरिक शिक्षा मूल विषय लिई २०५१

सालमा बी.एड. उत्तीर्ण गरे । जीवनमा अनेकौं सङ्घर्षका बाबजुद उनी २०५३ सालमा त्रिभुवन विश्वविद्यालयबाट नेपालीमा एम.ए. उत्तीर्ण गर्न सफल भए । यसै बीचमा उनले रेडियो शिक्षा शिक्षक तालिम, कम्प्युटर लोटस डिवेस वर्ड पर्फेक्ट तालिम, टाइपराइटर तालिम, पत्रकारिता तालिम, सहकारी तथा कृषि लगायतका तालिम पनि लिन भ्याएका थिए । संकाय परिवर्तन गर्दै आफ्नो औपचारिक शिक्षा अगाडि बढाएका अनामणिले हाल महेन्द्र संस्कृत विश्वविद्यालय अन्तर्गत रही पी.एच.डी.का लागि भक्तपुरको लोक साहित्य परम्परामा अनुसन्धानरत रहेका छन् (शोध नायकबाट प्राप्त जानकारी) । अध्ययनमा दत्तचित्त भई अगाडि बढ्दै गएकाले नै आज उनले साहित्यमा उचाइ प्राप्त गर्न सफल भएका छन् । बढी भन्दा बढी पुस्तक किन्न रुचाउने अनामणिले हालसम्म पनि दैनिकजसो विभिन्न पुस्तक तथा पत्रपत्रिकाको स्वाअध्ययन गर्दै आफ्नो बौद्धिक व्यक्तित्वलाई निखार्दै आएका छन् ।

### ३.३.३ समाजसेवी व्यक्तित्व

नेपाली समाजका विविध रूप र परिपाटीलाई सानैदेखि भोग्दै आएका रत्नप्रसाद अनामणि श्रेष्ठ एक शिक्षित एवम् संवेदनशील व्यक्ति भएका नाताले यथासक्य समाजसेवाका क्षेत्रमा सक्रिय रहनु स्वाभाविक देखिन्छ । करिब कक्षा ४ मा पढ्दा ताका उनी जुनियर रेडक्रस सर्कलमा आबद्ध भई समाज सेवाको क्षेत्रमा आफ्नो कदम बढाएका थिए । जुनियर रेडक्रसमा आबद्ध भएपछि उनमा समाजसेवा गर्नुपर्छ भन्ने भावनाको विकास भएको देखिन्छ । त्यसपछि उनी एकपछि अर्को गर्दै समाजसेवाको क्षेत्रमा सक्रिय हुँदै अगाडि बढ्दै गए । बनेपाको शिर मेमोरियल हस्पिटलमा वर्षायाममा झाडापखालाले ग्रस्त बिरामीको चाप बढ्दा सो ठाउँमा गई स्वयम् सेवकको रूपमा कार्य गर्ने होस् या रक्तदान कार्यक्रम नै किन नहोस् आफू उपस्थित भई समाजसेवाको क्षेत्रमा सक्रिय रहन्थे । यसैक्रममा उनले काठमाडौं र काभ्रेमा गरी ६ पटक रक्तदानको कार्यक्रम समेत आयोजना गरिसकेका छन् । आफूले पनि ६ पटक रक्तदान समेत गर्न भ्याएका छन् (शोध नायकबाट प्राप्त जानकारी) । एकल तथा सामूहिक रूपमा रहेर उनले गरेका समाजसेवाका कार्यहरूलाई निम्न बुँदाहरूद्वारा अझ स्पष्ट पार्न सकिन्छ ।

- ४ कक्षामा पढ्दादेखि नै जुनियर रेडक्रस सर्कलमा आबद्ध रही समाज सेवाका क्षेत्रमा सक्रिय भएका

- द रेयुकाइ नेपाल काभ्रे शाखाको संस्थापक कार्यसमिति सदस्य भई सामाजिक कार्य गरेका
- काभ्रेली साहित्यिक संगम (२०४७) को संस्थापक सदस्य भई कार्य गरेका थिए ।
- २०५१/५२ सालमा नेपाल रेडक्रस सोसाइटी काभ्रे शाखा जुनियर रेडक्रस उपसमितिको संयोजक भई कार्य गरेका
- सिपमूलक व्यवसायिक तालिम, बचत गर्ने बानी बसाल्ने, ऋण सहुलियत लगायतका समाजको चौतर्फी हितको उद्देश्य बोकेर स्थापना भएको उग्रचण्डी बचत तथा ऋण सहकारी संस्थाको संस्थापक अध्यक्ष भई २०५१ देखि २०६१ सालसम्म कार्य सम्पादन गरेका,
- नेवारी भाषा साहित्यको उठानमा सक्रिय संस्था 'मंका : खल :" काभ्रे शाखाको सचिव भई (२०५१) मा कार्य गरेका,
- विद्यालय सरसफाई, विद्यालय वातावरणलाई प्रकृति मैत्री बनाउने लगायतका विषयवस्तुमा आधारित रही युनिसेफ तथा आरोहण समूहको सहकार्यमा चण्डेश्वरी नाट्य समूहबाट २०५२ सालमा नेपालका विभिन्न पचास ठाउँमा गई स्कुल तथा चोकचोकमा पूर्ण सक्रियताका साथ नाटक प्रदर्शन गरेका
- फ्रान्स सरकारको सहयोगमा नाला क्षेत्रका पुराना मठ मन्दिरहरू जिर्णोद्धार गर्ने उद्देश्यले स्थापित 'काभ्रे एकीकृत परियोजनाको सल्लाहकार समितिको कोषाध्यक्ष भई २०५३ देखि २०५६ साल सम्म कार्य गरेका ।
- चण्डेश्वरी माध्यमिक विद्यालय नाला काभ्रेको भवन निर्माण कमिटिको सदस्य भई काभ्रे जिल्लाकै सबैभन्दा लामो भवन निर्माणमा (२०५६/५७) सालतिर सक्रिय भूमिका निर्वाह गरेका,
- पाठ्यपुस्तक सर्वसुलभ पार्ने, सहज वतावरण बनाउने उद्देश्यले स्थापित भएको काभ्रे पुस्तक तथा स्टेशनरी विक्रेता संघको सचिव भइ २०५६ सालमा कार्य गरेका,
- नाला-काठमाडौं सम्पर्क मञ्चको कार्य गर्ने उद्देश्यले स्थापित 'नाला-समाज' को सह-सचिव भई २०५८ सालमा कार्य गरेका
- व्यापारिक हकहितको उद्देश्यले स्थापित गोंगबु व्यापार समितिको अध्यक्ष भई २०६४ देखि हालसम्म कार्य गर्दै आएका

- नक्साल भगवती मन्दिरको जिर्णोद्वारमा विशेष सहयोगी भूमिका निर्वाह गरेका,
- परिवर्तनका लागि पहल नेपाललाई २०७१ सालमा लगभग १५ हजार मूल्य बराबरको पुस्तक वितरण गरेका
- प्रहरी र समुदाय मिलेर शान्ति सुरक्षा अमनचयन गर्ने उद्देश्यले स्थापित सामुदायिक प्रहरी सेवा समिति गोंगबुको बुद्धिजीवी समितिको सदस्य भई कार्य गरेका (२०७१।७२),
- २०७१-७२ मा नेपाल शान्ति स्काउटको सहायक कमिस्नर भई कार्य गरेका

यसरी उनले विभिन्न संघ-संस्थामा सक्रिय भएर एवम् व्यक्तिगत रूपमा सक्रिय भएर समाजसेवा गर्दै आएको देखिन्छ । निस्वार्थ भावले उत्तरदायित्व वहन गर्दै सामूहिक कार्यमा लगनशीलताका साथ जुट्ने अनामणिको एक महत्त्वपूर्ण व्यक्तित्वका रूपमा समाजसेवी व्यक्तित्व रहेको छ ।

## ३.३.४ सङ्घर्षशील व्यक्तित्व

रत्नप्रसाद अनामणि श्रेष्ठको जीवन बाल्यकालदेखिनै सुख, दुःख, हर्ष, विस्मात, शोक र सन्तुष्टिका अवस्थाहरूबाट गुज्रँदै आएको देखिन्छ । जीवन आफैमा संघर्षपूर्ण हुन्छ । हरेक मानिसले समाजमा स्थापित हुनका लागि संघर्ष गर्नुपर्ने हुन्छ । ग्रामीण परिवेशमा हुर्किएका अनामणिको जीवन पनि सङ्घर्षपूर्ण तरिकाले बित्दै आएको छ । उनको परिवारको गाथा पनि निकै सङ्घर्षपूर्ण रहेको देखिन्छ । उनका बाबुले निकै नै सङ्घर्ष गरेर घर व्यवहार चलाएका थिए । अनामणि पनि सानैदेखि मेहनती थिए । उनी विद्यार्थी जीवनमा बाल्यकाल देखिनै भैंसी, बाख्रा चराउने, भकारो सोहोर्ने, खेतीपातीको काम गर्ने एवम् पसलको काममा बुबा आमालाई सघाउने जस्ता काम गर्दै अगाडि बढेका एक संघर्षशील व्यक्ति हुन् । त्यस्तै उनले पाउरोटी उद्योग सञ्चालन गर्दै आइ.एस.सी. एवम् स्कुल पढाउँदै बी.एड. अनि एम.ए. उत्तीर्ण गरेका थिए । लामो समयसम्म कुखुरापालन एवम् कृषि व्यवसायमा लागेका उनका बाबुले व्यापार, व्यवसाय एवम् उद्योग सञ्चालन गर्ने कुरामा उनलाई हौसला गरिनै रहे । उनले आफ्नो घरको प्रमुख व्यवसाय कृषिलाई आधुनिकीकरण गरे । उनको कृषिमा आधुनिकीकरण देखेर जापानको जाइकाबाट समेत प्राविधिक रूपमा सहयोग प्रदान भएको थियो (शोधनायकबाट प्राप्त जानकारी) । खाली बस्न नरुचाउने, केही न केही गरिराख्न रुचाउने अनामणि धेरै कुराहरूको सिपमा दक्ष रहेका छन् । हालसम्म पनि संयुक्त परिवारमा रहेका अनामणिको काभ्रेको नालामा रहेको करिब ४० रोपनी जग्गामा आलु, गोलभैंडा

लगायतका कृषिजन्य खेती एवम् बेमौसमी तरकारीको उत्पादन हुँदै आएको छ । संघर्षको दौरानमा परिवारका हरेक सदस्यबाट राम्रो सहयोग पाएका अनामणिले साहित्यमा समेत सक्रिय रहँदै एकपछि अर्को प्रगति हासिल गर्दै गएका छन् । आफ्नो व्यापार व्यवसायका लागि शिक्षण पेसाबाट राजीनामा दिएर उनले व्यापार एवम् व्यवसायलाई नै दिलो ज्यान लगाएर एउटा छुट्टै पहिचान जमाउन सफल भएका छन् । सङ्घर्ष गर्दै गर्दा काठमाडौँमा २ वटा घर पनि बनाएका छन् । व्यापार व्यवसायका विभिन्न क्षेत्रमा हात हालेका अनामणिका हालसम्म पनि अनामणि ग्रुप इन्डस्ट्रिज प्रा.लि., मणिरत्न मल्टिप्लास्ट इण्डस्ट्रिज, निस्पक्ष मिडिया प्रा.लि., गुञ्जन सञ्चार प्रा.लि., अनामणि एग्रोटेक एण्ड अल्ट्रेनेटिभ इनर्जी, अनामणि प्रकाशन, उग्रचण्डी कपडा पसल, न्य भगवती बुक्स स्टेशनरी, आर.एस.स्टोर एण्ड कम्युनिकेसन लगायतका कम्पनीहरू दर्ता गरी सञ्चालनमा रहेका छन् (शोधनायकबाट प्राप्त जानकारी) । मध्यमवर्गीय किसान परिवारमा जन्मेका अनामणिको समग्र जीवनी केलाउँदा उनलाई एक कुशल संघर्षशील व्यक्तित्वका रूपमा पाउन सकिन्छ ।

### ३.३.५ धार्मिक व्यक्तित्व

रत्नप्रसाद अनामणि श्रेष्ठ धार्मिक व्यक्तित्व भएका व्यक्ति हुन् । उनी हिन्दु धार्मिक पृष्ठभूमि भएको नेवार परिवारमा जन्मेका हुन् । घरमा बुबाआमाले नियमित रूपमा पूजाअर्चना गर्ने गर्दथे । घरको यस्तो धार्मिक वातावरणको प्रभाव उनमा नपर्ने कुरै थिएन । बाल्यकालमा यस्तै ६-७ वर्षको उमेर देखि उनमा पूजा गर्ने बानी बसेको थियो । उक्त समयमा उनले सरस्वती वन्दना कण्ठस्थ पारी आफ्ना हरेक कापीको प्रथम पृष्ठमा लेख्ने गरेका थिए (शोधनायकबाट प्राप्त जानकारी) । धर्म भन्ने धारण गर्ने कुरा हो भन्ने उनको मान्यता रहेको छ । उहिले धर्म नै कानुन थियो भन्ने अनामणिले धर्मले नीति नियममा बस्न सिकाउँछ, पारिवारिक जमघट गराउँछ साथै आन्तरिक पर्यटनलाई टेवा दिन्छ भन्ने मान्दछन् । सबै धर्म समान हुन् भन्ने अनामणि आफ्नो परम्परागत संस्कृति बमोजिम हिन्दु धर्ममा आस्थावान् रहेका छन् । उनी समय समयमा विभिन्न मठमन्दिर जाने, दसैँ, तिहार लगायतका चाडपर्वको पूजामा सरिक हुने, नेवारहरूको हरेक १५-१५ दिनमा हुने पूर्णिमा एवम् औँशी लगायतका विशेष दिनहरूमा पूजाआजामा सक्रिय रहने गर्दछन् । हिन्दु धर्ममा गहिरो श्रद्धा एवम् आस्था राख्ने अनामणिले प्युठानको स्वर्गद्वारी, काठमाडौँ, भक्तपुर र ललितपुरका प्राय मन्दिरहरू, मनकामना मन्दिर लगायत स्वदेशका धेरै मन्दिरहरू एवम् भारतको गोरखपुरमा रहेको गोरखनाथ मन्दिर आदि मठ मन्दिरहरूमा गई पूजा अर्चना

गरेका छन् । साथै बौद्ध धर्मलाई पनि हिन्दु धर्म अन्तर्गत नै रहेको एउटा शाखा मान्ने अनामणिमा बौद्धधर्म प्रति पनि आस्था रहेको देखिन्छ । यसै क्रममा उनले नेपालका विभिन्न गुम्बा एवम् स्तूपाहरूका साथै चीनको स्वशाषित क्षेत्र तिब्बतका अधिकांश गुम्बाहरू, पोताला दरबार, चोखाङ् टेम्पल, सिगार्चे लगायतका मन्दिर तथा गुम्बाहरूको पनि भ्रमण तथा दर्शन गरेका छन् (शोधनायकबाट प्राप्त जानकारी) । यसरी उनको व्यक्तित्वको अर्को महत्त्वपूर्ण पाटो धार्मिक व्यक्तित्व रहेको देखिन्छ ।

### ३.३.६ उद्यमी व्यक्तित्व

रत्नप्रसाद अनामणि श्रेष्ठ एक कुशल उद्यमी हुन् । उद्यमी व्यक्तित्व उनको व्यक्तित्वको एक महत्त्वपूर्ण पाटो रहेको छ । युवा अवस्थादेखि नै खाली बस्न नरुचाउने केही न केही गरिराख्ने प्रवृत्ति भएका अनामणिले आइ.एस.सी. पढ्दाताका २०४३ देखि २०४५ सालसम्म भगवती पाउरोटी उद्योग सञ्चालन गरेका थिए । पाउरोटी उद्योग बन्द गरेपछि २०४८ देखि २०५० सालसम्म भिनेक्स कापी उद्योग सञ्चालन गरे । त्यसैगरी २०४६ सालदेखि नाला एवम् कोटेश्वरमा भगवती बुक्स सेन्टर सञ्चालनमा रहेका छन् । त्यस्तै २०४८ सालमा अनामणि प्रकाशनको स्थापना गरी हालसम्म पनि चलाइरहेका छन् । उनी २०५६ साल वसन्त पञ्चमीका दिन काठमाडौँमा आइ गोंगबु चोकमा उग्रचण्डी कपडा पसल खोलेर बसे । सो कपडा पसल हालसम्म पनि सञ्चालनमा रहेको छ । २०६४ सालमा उनले अनामणि ग्रुप एण्ड इण्डस्ट्रिज प्रा.लि.को स्थापना गरे । जुन हालसम्म पनि गोंगबुमा सञ्चालनमा रहेको छ । जसले शुद्ध पिउने पानीको उत्पादन गर्दछ । त्यसैगरी उनका हालसम्म सञ्चालित उद्योग तथा कम्पनीहरू १ लिटर पानीको बोतल उत्पादन गर्ने एम.पेट इण्डस्ट्रिज (२०६८), काभ्रे नालामा रहेको २० लिटर जारको बिर्को र १ लिटर बोतलको पिफर्म उत्पादन गर्ने मणिरत्न मल्टिप्लास्ट इन्डस्ट्रिज (२०७०), नालामा रहेको महुरीपालन तथा कृषि सम्बन्धी कार्य गर्ने हेतुले स्थापित अनामणि एग्रोटेक एण्ड अल्टरनेटिभ इनर्जी (२०७१), खोज अनलाइन टिभी, खोज अनलाइन रेडियो, खोज अनलाइन पत्रिका सञ्चालन गर्दै आएको निस्पक्ष मिडिया प्रा.लि (२०७३), एवम् सञ्चालनको क्रममा रहेको गुन्जन सञ्चार प्रा.लि. (२०७४) आदि रहेका छन् (शोधनायकबाट प्राप्त जानकारी) । यी उद्योग व्यवसायमध्ये अनामणि ग्रुप एण्ड एण्डस्ट्रिज, उग्रचण्डी कपडा पसल, आर.एस. कम्युनिकेसन, मणिरत्न मल्टिप्लास्ट तथा अनामणि एग्रोटेकले राम्रो सफलता हासिल गरेका छन् । भविष्यमा प्लास्टिक रिसाइक्लिन तथा कृषि उद्योगमा जोड दिने कुरा उनी

बताउँछन् । विद्युत्को कमी, कच्चापदार्थको अभाव, मित्रराष्ट्र ठूला देशहरूसँग कडा प्रतिस्पर्धा गर्नुपर्ने अवस्था, प्रशासनिक झन्झट, लोनमा समस्या, दक्ष प्राविधिकको कमी, सरकारले उद्योगीलाई प्राथमिकतामा नराख्नु जस्ता कुरालाई उद्योगको मुख्य समस्या ठान्ने अनामणिले हाम्रो देश मूलतः कृषिप्रधान भएकाले कृषिमा आधारित उद्योगहरू बढीभन्दा बढी खोल्नुपर्ने, समस्या न्यूनीकरण गर्दै राम्रो बजार व्यवस्थापन गर्नुपर्ने समयानुकूल उद्योगलाई आधुनिकीकरण गर्नुपर्ने, स्वदेशमा रहेको कच्चापदार्थलाई प्राथमिकता दिनुपर्ने कुरामा जोड दिन्छन् । उनले उद्योगको विकासका लागि विभिन्न सङ्घ तथा सङ्गठनमा आबद्ध भई कार्य गर्दै आएका छन् । उनले काभ्रे पाठ्यपुस्तक बिक्री वितरण सङ्घको सचिव (२०५६), गोंगबु व्यापार समितिको अध्यक्ष (२०६४-हालसम्म), खानेपानी प्रशोधन तथा बिक्री वितरण सङ्घको संस्थापक महासचिव (२०६८-२०७०), पेट एसोसिएसन नेपालको संस्थापक सदस्य (२०७१-हालसम्म), अनलाइन रेडियो एसोसिएसन सङ्घको संस्थापक उपाध्यक्ष (२०७४-हालसम्म), लगायतका सङ्घ सङ्गठनमा आबद्ध रही कार्य सम्पादन गरेका एवम् गर्दै आएका छन् (शोधनायकबाट प्राप्त जानकारी) । यी कार्यहरूबाट अनामणिको उद्योगी व्यक्तित्व महत्त्वपूर्ण रहेको पाइन्छ ।

### ३.३.७ शिक्षक व्यक्तित्व

रत्नप्रसाद अनामणि श्रेष्ठलाई शिक्षक व्यक्तित्वका रूपमा पनि चिनाउन सकिन्छ । उनले जीवनमा लामो समयसम्म अस्थायी शिक्षकको रूपमा २०४६ साल भाद्र १६ गतेबाट आफैले अध्ययन गरेको चण्डेश्वरी उच्च मा.वि. नाला काभ्रेमा सक्रिय भई कार्य गरेका थिए । प्रा.वि. शिक्षकका रूपमा प्रवेश गरे तापनि उनले मा.वि तहसम्म नै अध्यापन गर्ने गरेका थिए । २०५६ सालमा काठमाडौँ बसाई सरेपछि पनि काठमाडौँबाट नै लगभग ४ वर्ष जति काभ्रेको नालामा पढाउन दैनिक आउजाउ गरे । २०६० सालमा पुण्य मा.वि. पनौतीमा स्थायी शिक्षकका रूपमा दरबन्दी प्राप्त गर्न सफल भए तापनि स्थायी नियुक्त भएको करिब १ महिनापछि जागिरबाट राजीनामा गरी व्यापारको सिलसिलामा काठमाडौँमै रहन थाले (शोधनायकबाट प्राप्त जानकारी) । जीवनको १४ वर्ष शिक्षण पेसामा संलग्न रहेका अनामणिले विद्यालयमा अध्यापनका अतिरिक्त लिडरसिप, पत्रकारिता, उद्योग सम्बन्धी, सहकारी लगायतका तालिम तथा प्रशिक्षण दिने काम एवम् ब्लड डोनेसनको मोटिभेसन दिने काम समेत गरेका थिए । गाउँमै बसेर समाज सेवा गर्ने गहिरो इच्छा हुँदाहुँदै पनि उनले व्यापारको सिलसिलामा काठमाडौँ गएर बसोबास गर्न थालेका थिए (शोधनायकबाट

प्राप्त जानकारी) । यद्यपि शिक्षण पेसामा जस्तो आत्मसन्तुष्टि अरु पेसाबाट प्राप्त गर्न नसकेको उनी स्वीकार्दछन् । यसरी शिक्षक व्यक्तित्वलाई पनि उनको जीवनको एक महत्त्वपूर्ण व्यक्तित्वका रूपमा लिन सकिन्छ ।

### ३.३.८ स्वभावगत व्यक्तित्व

रत्नप्रसाद अनामणि श्रेष्ठ मिलजुल गर्ने, घनिष्टता बढाउने क्रममा उमेरलाई सीमारेखाका रूपमा लिँदैनन् । उनी सबै क्षेत्रमा चित्त बुझ्दो तर्क दिन सक्ने, बच्चा, बूढा, तन्नेरी, कामदार समेत सबैसँग मिल्न सक्ने सामाजिक व्यक्तित्व हुन् (रिमाल, २०७४ : ४) । मिठो बोली वचन भएका अनामणि बोलिराख्नु पर्ने बहिर्मुखी स्वभावका रहेका छन् । धेरै हाँसो ठट्टा गर्नुपर्ने अनामणिलाई चियाको चुस्कीसँगै अध्ययन गर्न मनपर्छ । साहित्य एवम् नेपाली संस्कृतिमा विशेष रुचि राख्ने अनामणि नाचगानमा पनि उत्तिकै रमाउने गर्दछन् । पुस्तकहरू किनेरै पढ्नुपर्छ भन्ने उनको मान्यता रहिआएको छ । उच्च रक्तचापले पीडित भए तापनि साँझ परेपछि उनको रक्सी पिउनुपर्ने आदत रहेको छ । उनी अन्याय, अत्याचार, थिचोमिचो सहेर बस्न सक्दैनन् । गाउँछिमेकमा जग्गा मिच्नेहरूको विरुद्ध खरो रूपमा उत्रने उनको बानी रहेको छ । सबैलाई चाँडै विश्वास गरिहाल्ने आफ्नो नराम्रो बानी भएको कुरा उनी बताउँछन् । आफूले कहिल्यै हजुरबुबा एवम् हजुरआमालाई देख्न नपाएकाले सबै बुढापाकालाई आफ्नै हजुरबुबा एवम् हजुरआमा सरह व्यवहार गर्ने उनको बानी रहेको छ (शोधनायकबाट प्राप्त जानकारी) । यसैले उनको स्वभावगत व्यक्तित्व पनि एक महत्त्वपूर्ण व्यक्तित्वका रूपमा लिन सकिन्छ ।

### ३.३.९ चिन्तनशील व्यक्तित्व

रत्नप्रसाद अनामणि श्रेष्ठको महत्त्वपूर्ण पक्ष भनेको नै चिन्तनशीलता हो । अध्ययन, चिन्तन र मनन नगरी कुनै कार्य वा रचना गर्न कठिन हुन्छ । अझ एउटा साहित्यिक व्यक्तिलाई कुनै न कुनै चिन्तनले अँगालिरहेको हुन्छ । पूर्वीय दर्शनलाई वैज्ञानिकताको नजिक रहेको छ भन्ने मान्यता राख्ने अनामणिलाई आफ्नो धर्म, संस्कृति, परम्पराको जगेर्ना गर्नुमा विशेष चाख रहेको छ । साहित्यमा सामान्यतया यथार्थपरक, प्राकृतिक चिन्तन, धार्मिक प्रगाढ आस्था एवम् भातृत्व प्रेम दर्साउनु पर्दछ भन्ने चिन्तनबाट प्रेरित भएका अनामणिमा मार्क्सवादी साहित्यप्रति विशेष झुकाव रहिआएको छ (शोधनायकबाट प्राप्त जानकारी) ।

## ३.३.१० चित्रकार व्यक्तित्व

रत्नप्रसाद अनामणि श्रेष्ठ एक कुशल चित्रकार हुन् । विशेषगरी उनी आधुनिक अमूर्त खालका चित्र बनाउन रुचाउने गर्दछन् । उनी चित्रकलाका सौखिन सानैदेखि थिए । कक्षा ७ मा पढ्दा उनी जिल्लाव्यापी चित्रकलामा समेत भाग लिएका थिए । थाङ्का चित्रकला भने गुरु बाबुकाजी कर्माचार्यसँग सिकेका हुन् । उनले हालसम्म आधुनिक, धार्मिक, रेखाचित्र, थाङ्का जस्ता चित्रहरू बनाएका छन् (शोधनायकबाट प्राप्त जानकारी) । **'दाउहरू फरक-फरक'** (२०६२) गजल सङ्ग्रहभित्र भाव अनुसारका चित्रहरू आफैले बनाएर समावेश गरेका छन् भने **'चुट्किला सङ्ग्रह'** भाग १ र भाग २ मा कभर डिजाइन समेत गरेका छन् । ४ वटा थाङ्का पनि बनाइसकेका अनामणिले हालसम्म चित्रकलाको कुनै प्रदर्शन भने गरेका छैनन् । हालसालै उनले आफ्नै घरको भित्तामा ४० हजार वर्ग सेमीको चण्डेश्वरी भैरवको चित्र बनाएका छन् (शोधनायकबाट प्राप्त जानकारी) । त्यसैले उनको चित्रकार व्यक्तित्व पनि एक महत्त्वपूर्ण व्यक्तित्वका रूपमा रहेको छ ।

## ३.३.११ खेलाडी व्यक्तित्व

रत्नप्रसाद अनामणि श्रेष्ठ बाल्यावस्था देखिनै खेलहरू प्रति रुचि राख्ने गर्दथे । यद्यपि उनको खेलाडी व्यक्तित्वको उद्घाटन भने क्याम्पस जीवनमा भएको थियो । बी.एड.मा नेपाली र हेल्थ एण्ड फिजिकल एजुकेशन विषय मेजरका रूपमा लिए पछि भने उनको खेलप्रति सक्रियता बढेको देखिन्छ । फुटबल, डण्डिवियो, भलिबल, बास्केटबल, चेस, टेवलटेनिस, ब्याडमिन्टन, खोखो आदि खेलहरू खेल्न आएता पनि भलिबलमा चाहिँ उनको विशेष रुचि रहेको छ । उनले विभिन्न खेलकुद प्रतियोगितामा भाग लिई उत्कृष्ट खेल खेले बापत विभिन्न प्रमाणपत्र तथा पदक समेत हासिल गरेका छन् । यस्तै क्रममा २०५०/५१ सालतिर चैतन्य क्याम्पसमा बी.एड. पढ्ने समयमा भलिबल एवम् फुटबलमा प्रथम स्थान हासिल गर्न उनी सफल भएका थिए । त्यसैगरी २०५० सालमा विद्यार्थी समूहले आयोजना गरेको टेबलटेनिस प्रतियोगितामा दोस्रो स्थान हासिल गरेका थिए । त्यस्तै खेलकुद साहित्यकार समाज (२०७३) द्वारा आयोजित प्रथम साहित्यिक भलिबल प्रतियोगितामा प्रथम भएका थिए । सोही समूहले आयोजना गरेको फुटबल प्रतियोगिता पहिलो एवम् दोस्रो दुवैमा प्रथम साथै बास्केटबलमा पनि प्रथम स्थान हासिल गर्न सफल भएका थिए (शोधनायकबाट प्राप्त जानकारी) । उनी खेलले शारीरिक सुसङ्गठन तथा बौद्धिक विकासमा टेवा दिन्छ भन्ने

मान्यता राख्छन् । नेपाल राष्ट्रिय डण्डिबियो क्लब २०६४ को अध्यक्ष भएका अनामणिले नेपालको राष्ट्रिय खेल डण्डिबियो हुनुपर्ने भन्दै जोडदार आवाज उठाएर यसको विकासका लागि डण्डिबियो उत्पादन गर्न भनी मेसिन समेत ल्याएर डण्डिबियो उत्पादनको थालनी समेत गरेका थिए । हाल उनी खेलकुद साहित्यकार समाजको संस्थापक सचिव समेत रहेका छन् (शोधनायकबाट प्राप्त जानकारी) । यसरी उनको व्यक्तित्वको पाटो केलाउँदा खेलाडी व्यक्तित्व पनि महत्त्वपूर्ण व्यक्तित्व रहेको देखिन्छ ।

### ३.३.१२ वाद्यवादक व्यक्तित्व

रत्नप्रसाद अनामणि श्रेष्ठको अर्को महत्त्वपूर्ण पक्ष वाद्यवादक व्यक्तित्व पनि हो । उनलाई सुर बाजा बाहेक ताल बाजामा मादल, आधुनिक ड्रमसेट, गितार, जिम्बे, धिमे, मुर्चुङ्गा, क्याजोन, खैंजडी लगायतका बाजा बजाउन आउँछ । विशेष गरी बाल्यावस्थामा बुबाले मादल किनेर ल्याइदिए पछि उनलाई वाद्यवादनमा विशेष रुचि पलाएको थियो । २०५४ सालमा चण्डेश्वरी मा.वि.को स्वर्ण जयन्तीमा उनले आधुनिक ड्रमसेट बजाएका थिए । त्यसैगरी उनले जात्रामा धिमे बाजा एवम् देउसी भैलो लगायतका चाडपर्व तथा गाउँघरका कार्यक्रमहरूमा मादल, गितार लगायतका बाजाहरू बजाउँदै आएका छन् । त्यस्तै उनले बाजाहरूबारे धेरै नै अध्ययन तथा अनुसन्धान गरेका छन् । नेवारी लोक बाजाहरूबारे अध्ययन गरी विभिन्न पत्रपत्रिकाहरूमा लेखरचनाहरू समेत प्रकाशित गर्दै आएका छन् (शोधनायकबाट प्राप्त जानकारी) ।

### ३.३.१३ पत्रकार व्यक्तित्व

रत्नप्रसाद अनामणि श्रेष्ठको व्यक्तित्व मध्ये पत्रकार व्यक्तित्व पनि एक पर्दछ । उनले २०५५ सालमा नेपाल पत्रकार महाशाखा काभ्रे शाखाले आयोजना गरेको पत्रकारिता तालिममा सहभागिता जनाएका थिए । उनले युवा अवस्थामा आफ्नै टोलबाट प्रकाशित हुने 'भिन्तुना' भित्ते पत्रिकाको सम्पादन गरेर पत्रकारिताको जगतमा पाइला अगाडि बढाएका थिए । २०५६/५७ सालमा साहित्यिक पत्रकार सङ्घको सदस्य भएका अनामणिले विभिन्न पत्र-पत्रिकाहरूमा संलग्न रही लेख रचनाहरू प्रकाशित गर्दै आएका छन् । हाल उनले खोज अनलाइन पत्रिका, खोज अनलाइन रेडियो, खोज अनलाइन टि.भी. चलाउँदै आएका छन् । विभिन्न पत्रपत्रिकाहरूको सम्पादक, सहयोगी तथा सल्लाहकार भई कार्य गर्दै आएका अनामणि हाल नेपाल पत्रकार सङ्घको सदस्य तथा अनलाइन रेडियो एसोसियसनको

उपाध्यक्ष समेत रहेका छन् (शोधनायकबाट प्राप्त जानकारी) । आफ्नै घरको एक कोठामा रेडियोको स्टुडियो बनाएर कार्य गर्दै आएका अनामणिको पत्रकार व्यक्तित्व पनि निकै महत्त्वपूर्ण रहेको देखिन्छ ।

## ३.३.१४ सम्पादक व्यक्तित्व

रत्नप्रसाद अनामणि श्रेष्ठको अर्को एक महत्त्वपूर्ण पक्ष भनेको सम्पादक व्यक्तित्व हो । उनी एक कुशल सम्पादक हुन् । युवा अवस्थामा रहँदा 'भिन्तुना' भित्ते पत्रिकामा सम्पादकको भूमिका निर्वाह गरेर आफ्नो सम्पादक व्यक्तित्वको उद्घाटन गरेका अनामणिले हालसम्म आइपुग्दा थुप्रै पत्र-पत्रिका तथा पुस्तकहरूको सम्पादन गरिसकेका छन् (शोधनायकबाट प्राप्त जानकारी) । उनको सम्पादक व्यक्तित्वलाई अझ प्रस्ट पार्न उनले गरेका सम्पादन कार्यहरूलाई बुँदागत रूपमा यसरी प्रस्तुत गरेर देखाउन सकिन्छ ।

- युवा अवस्थामा छँदा आफ्नै टोलबाट प्रकाशित हुने 'भिन्तुना' भित्ते पत्रिकाको सम्पादन गरेर सम्पादन कार्यको सुरुवात गरेका,
- आफैले सङ्कलित गरेर तयार पारिएको 'चुट्किला सङ्ग्रह' भाग १ (२०४८) र 'चुट्किला सङ्ग्रह' भाग २ (२०४८) को सम्पादन,
- स्पन्दन साहित्यिक मासिक पत्रिका (हवाइ पत्रिका) को २०५० सालमा १ वर्षसम्म सम्पादनको भूमिका निर्वाह गरेका,
- 'नव प्रतिभा' मासिक पत्रिकाको प्रधान सम्पादक भएर २०५१/५२ सालमा कार्य गरेका,
- 'जुनियर रेडक्रस स्मारिका' २०५१/५२ सालमा प्रधान सम्पादक,
- 'प्रदीपिका' भाग १ (२०५३) र भाग २ (२०५४) चण्डेश्वरी मा.वि. नाला काभ्रेको वार्षिक मुखपत्रको सम्पादक,
- 'जनमत' साहित्यिक मासिक पत्रिकाको २०५४/५५ मा सहयोगीको भूमिका निर्वाह गरेका,
- २०६० मा 'नाला समाज' को प्रधान सम्पादक भएका,
- 'फुच्चे सिस्नुपानी' वर्ष १ अङ्क २ का सहयोगी (२०६१),
- 'गोंगबु व्यापार समिति स्मारिका' २०६४ को प्रधान सम्पादक,
- 'घचा ल्वहः' मासिकको प्रधान सम्पादक,

- सहयात्रा सामुदायिक सेवा समिति तथा प्रहरी सेवा समितिको वार्षिक मुखपत्र वर्ष ६ अङ्क १ माघ २०६४ को सम्पादक सहयोगीको भूमिका निर्वाह,
- 'रातो हिमाल' साहित्यिक द्विमासिक २०७० भदौ-असोज वर्ष १, अङ्क १, पूर्णाङ्क १ को भाषा सम्पादक,
- 'संसाक' साहित्य पाक्षिक वर्ष १, अङ्क २ असोज २०७० देखि सल्लाहकार,
- जनमत वाङ्मय प्रतिष्ठान नेपालका आजीवन सदस्य,
- 'रातो हिमाल' साहित्यिक द्विमासिक वर्ष १, अङ्क १ साउन-भदौ (२०७०), सम्पादन समूहको सदस्य,
- खोज अनलाइन पत्रिकाको प्रधान सम्पादक (२०७३-हालसम्म)
- 'संकल्प यात्रा' राष्ट्रिय त्रैमासिक पत्रिकाको सल्लाहकार वर्ष ३ अङ्क १, पूर्णाङ्क ९, भाद्र-कार्त्तिक २०७३ देखि हालसम्म ।

उल्लिखित बुँदाहरूका आधारमा रत्नप्रसाद अनामणि श्रेष्ठको सम्पादक व्यक्तित्व पनि उनको महत्त्वपूर्ण व्यक्तित्वका रूपमा रहेको छ भन्ने कुरा प्रस्ट हुन्छ ।

## ३.३.१५ राजनीतिक व्यक्तित्व

रत्नप्रसाद अनामणिको व्यक्तित्वका पाटाहरू अन्तर्गत राजनीतिक व्यक्तित्व पनि एक पर्दछ । रसियन कल्चर सेन्टरबाट प्रकाशित हुने 'सोभियत भूमि' पत्रिका उनका बुबाले नियमित घरमा ल्याउने गर्दथे । जुन पत्रिकाको अध्ययनबाट उनी लगायत घरका सबैजनामा कम्युनिष्ट राजनीतिको प्रभाव परेको थियो । यस्तै क्रममा अनामणिले २०४४ सालमा अनेरास्ववियु काभ्रे जिल्लाको सदस्यता लिएका थिए । लामो समयसम्म कम्युनिष्ट राजनीतिमा सक्रिय रहेका अनामणि राजनीतिक खिचातानी एवम् फुटवादले आजित भएर हाल स्वतन्त्र वामपन्थीका रूपमा रहेका छन् । सर्वहारा वर्गको नेता भन्दै राजनीति गर्ने अनि सत्ता र पैसाको विलासितामा फसेपछि सारा पृष्ठभूमि भुलेर आफूलाई नवराजाका रूपमा सम्झने नेतावर्गप्रति अनामणि हार्दिक विद्रोह प्रकट गर्दछन् (शोधनायकबाट प्राप्त जानकारी) ।

## ३.३.१६ लेखक व्यक्तित्व

लेखक व्यक्तित्व पनि रत्नप्रसाद अनामणि श्रेष्ठको एक महत्त्वपूर्ण व्यक्तित्व हो । उनी एक कुशल साहित्यकार हुन् । साहित्यका अतिरिक्त अन्य विषयवस्तुमा आधारित

पुस्तकहरूको प्रकाशन पनि उनले गरेका छन् । विभिन्न विषय तथा क्षेत्रहरूको विशेष अध्ययन तथा अनुसन्धान गरी खोजमूलक, ऐतिहासिक, धार्मिक, सांस्कृतिक, व्यापारिक, औद्योगिक, सामाजिक, कृषिमूलक आदिजस्ता विषयमा पुस्तक तथा विभिन्न पत्रपत्रिकाहरूमा लेख प्रकाशित गर्दै आएका अनामणिलाई एक कुशल लेखकका रूपमा पनि लिन सकिन्छ । उनले **नासद्यो** (२०४९), **यम्हद्यो** (२०४९) जस्ता ऐतिहासिक लेखको पुस्तक एवम् विभिन्न पत्रपत्रिकाहरूमा विभिन्न विषयमा आधारित लेख रचनाहरू प्रकाशित गरेका एवम् गर्दै आएका छन् (शोधनायकबाट प्राप्त जानकारी) । त्यसैले उनको जीवनको महत्त्वपूर्ण व्यक्तित्व लेखक व्यक्तित्व पनि हो भन्न सकिन्छ ।

### ३.३.१७ निर्देशक व्यक्तित्व

रत्नप्रसाद अनामणि श्रेष्ठ निर्देशक पनि हुन् । उनले आफ्नो गाउँ नालामा रहँदा हरेक वर्ष गाई जात्रामा समूह बनाएर ख्याली नाटकहरूको निर्देशन तथा प्रहसन गर्ने गर्दथे । चण्डेश्वरी मा.वि.मा करीब १० वर्ष सम्म नृत्यको प्रशिक्षण दिने काम पनि उनले गरेका थिए । उनले चण्डेश्वरी नाट्यसमूहको अध्यक्ष भई सो नाटक समूहमा निर्देशकको भूमिका समेत निर्वाह गर्ने गरेका थिए (शोधनायकबाट प्राप्त जानकारी) । उल्लिखित कुराहरूले गर्दा उनको निर्देशक व्यक्तित्व पनि महत्त्वपूर्ण रहेको कुरा बुझ्न सकिन्छ ।

## ३.४ निष्कर्ष

रत्नप्रसाद अनामणि श्रेष्ठको व्यक्तित्व बहुआयामिक रहेको छ । विशेष गरी रेडियोको बालकार्यक्रम तथा स्कुलमा हुने कविता वाचन प्रतियोगिताको कारणले विशेष प्रभावित भई साहित्यमा आकृष्ट भएका अनामणिमा ६, ७ कक्षामा पढ्दाको अवस्थामा अनिवार्य नेपाली विषयको किताबमा पत्रपत्रिका भन्ने शीर्षकको पाठ पढ्दा देखि भने पढ्नुपर्ने भावनाको विकास भएको थियो । त्यसैबेला देखिनै उनी अध्ययनशील एवम् साहित्यप्रेमी भएको देखिन्छ । आफ्नो टोलबाट प्रकाशित हुने 'भिन्तुना' भित्ते पत्रिकामा नेवारी भाषामा कविता लेखेर साहित्य यात्रा सुरु गरेका भनिए तापनि सो कविता अप्राप्य रहेकाले उनको पहिलो प्राप्य रचना २०४५ को 'पञ्चायत' मासिक पत्रिकाको वर्ष ६, अङ्क ८ मा प्रकाशित 'नेपाल आमाको छातीमा शान्ति फिजाऊ' शीर्षकको कवितालाई मान्न सकिन्छ । तत् पश्चात् उनले साहित्य यात्रालाई निरन्तरता दिइरहेका छन् । धेरै काम जानेका, नयाँनयाँ काम सिक्न तल्लीन रहने, बुढा, बच्चा तन्नेरी सबैसँग मिल्न सक्ने भएकाले उनी बहुआयामिक व्यक्तित्व

भएका स्रष्टा हुन् । बाल्यावस्थादेखिनै हालसम्म जीवनका विविध पक्षमा संघर्षशील रहँदै आएका अनामणि हालसम्म पनि व्यापार व्यवसाय, विभिन्न संघसंस्था लगायत साहित्य क्षेत्रमा सक्रिय रूपमा सङ्घर्ष गर्दै आएका छन् । मोहन दुवाल, स्व. कृष्णप्रसाद पराजुली, स्व. जनकप्रसाद हुमागाई, स्व. आशाकाजी सेवक, स्व. केदारनाथ प्रधान आदिबाट साहित्यमा प्रभावित भएर अगाडि बढेका अनामणिले हालसम्म आइपुग्दा विभिन्न कृतिहरूको रचना गरिसकेका छन् । यसबाहेक उनले पेसागत संस्था, समाज लगायत विभिन्न क्षेत्रमा ख्याति कमाएका छन् । अनामणिद्वारा सृजना गरिएका कृतिहरू नेपाली साहित्याकाशमा अमूल्य कृतिका निधिका रूपमा रहने छन् भने उनको बहुआयामिक व्यक्तित्वले नेपाली समाजलाई सदैव मार्गनिर्देश गरिरहने छ ।

## परिच्छेद चार

# रत्नप्रसाद अनामणि श्रेष्ठका साहित्यिक कृतिहरूको अध्ययन

### ४.१ पृष्ठभूमि

रत्नप्रसाद अनामणि श्रेष्ठको साहित्यिक अनुराग बाल्यकालदेखि नै सुरुवात भएको देखिन्छ । करिब ६-७ कक्षामा पढ्दाको समयमा अनिवार्य नेपाली विषयमा 'पत्रपत्रिका' शीर्षकको पाठ पढ्दा देखि नै आफूमा पढ्नुपर्छ भन्ने भावनाको विकास भएको कुरा उनी बताउँछन् । यसैबेलादेखि नै उनी अध्ययनशील एवम् साहित्यप्रेमी भएको देखिन्छ । उनका बुबा पनि साहित्यप्रेमी हुनुहुन्थ्यो । जसका कारणले पनि उनका घरमा साहित्यिक पाठ्यपुस्तकहरू भित्रिरहन्थे । यसैले गर्दा पनि उनको साहित्यिक व्यक्तित्वको विकासमा टेवा पुगेको पाइन्छ । विद्यालयस्तरमा हुने साहित्यिक कार्यक्रमहरूमा अनामणिले भाग लिइरहन्थे । उनको साहित्यतर्फको झुकाव देखेर गुरु दामोदर अधिकारीले साहित्यकार मोहल दुवालसँग भेटवार्ता गराइदिए । मोहन दुवालसँगको भेटपछि उनको साहित्यिक व्यक्तित्वबाट अनामणि निकै नै प्रभावित भएका थिए । पछि उनकै सङ्गतबाट काभ्रेली साहित्यिक संगमको स्थापना गरी यसैको संस्थापक सदस्य भई कार्य समेत गरे (शोधनायकबाट प्राप्त जानकारी) ।

रत्नप्रसाद अनामणि श्रेष्ठले २०४५ सालको **पञ्चायत** मासिक पत्रिकाको वर्ष ६, अङ्क ८ मा "नेपाल आमाको छातीमा शान्ति फिजाऊ" शीर्षकको कविता छपाएर औपचारिक रूपमा नेपाली साहित्य सागरमा हाम फालेको देखिन्छ । त्यसै समयदेखि नै नेपाली साहित्यमा उनको यात्रा अनवरत रहेको पाइन्छ । हालसम्म आइपुग्दा उनका **फूलको माया लागेपछि** (मुक्तक सङ्ग्रह, २०४८), **दुखेको घाउ** (हाइकु सङ्ग्रह, २०६१), **दाउहरू फरक-फरक** (गजल सङ्ग्रह, २०६२), **शब्द पथमा** (हाइकु सङ्ग्रह, २०६९), **मेरो गोरेटोमा तिम्रो छायाँ** (मुक्तक सङ्ग्रह, २०७३), **ख्याल ख्यालमै सल्क्यो जिन्दगी** (गजल सङ्ग्रह, २०७३), **लाज हराएका मान्छेहरू** (कविता सङ्ग्रह, २०७३), **भो नखिच तस्बिर** (मुक्तक सङ्ग्रह, २०७४) र नेवारी भाषाको हाइकु सङ्ग्रह **लँय् लुगु किपा** (२०७४) जस्ता साहित्यिक कृतिहरूको प्रकाशन भएको पाइन्छ । त्यसैले प्रस्तुत शोधग्रन्थमा उनको नेवारी भाषामा लिखित हाइकु सङ्ग्रह एवम् पत्र-पत्रिकाहरूमा प्रकाशित साहित्यिक रचनाहरू बाहेक वि.सं.

२०७४ साल माघ महिनासम्म प्रकाशित उल्लिखित साहित्यिक कृतिहरूको मात्र अध्ययन तथा विश्लेषण गरिएको छ ।

## ४.२ विषय परिचय

रत्नप्रसाद अनामणि श्रेष्ठको पहिलो कविता सङ्ग्रह **लाज हराएका मान्छेहरू** (२०७३) हो । आफ्नो जीवनको साहित्यिक यात्रा २०४५ बाट कविता लेखेर नै सुरुवात गरेको भए तापनि सङ्ग्रहकै रूपमा भने उनले धेरै पछि मात्र प्रस्तुत कृति प्रकाशित गर्न सफल भए । यद्यपि कविताका लघुतम आयामका कृतिहरू भने उनले प्रकाशित गरिनै रहेका थिए । प्रस्तुत कविता सङ्ग्रहमा अनामणिले २० वटा कविताहरू समावेश गरेका छन् । **लाज हराएका मान्छेहरू** शीर्षकको कवितालाई टपक्क टिपेर उनले सिङ्गो कृतिको नामाकरण गरेका छन् । यस सङ्ग्रहका सबै कविताले आफ्नो मौलिक अस्तित्व बोकेका छन् । सामान्य स्तरका पाठकले भन्दा बौद्धिक पाठकले श्रेष्ठज्यूका कविताको मूल्य थाहा पाउने छन् । यो सङ्ग्रहमा व्यङ्ग्य, विद्रोह, मानवीय संवेदना, प्रकृतिको मार्मिक चित्रण आदि विविध पक्षको अभिव्यक्ति भेटिन्छ (सापकोटा, २०७३ : ग) । कविको कल्पना शक्ति र परिवेशलाई हेर्ने दृष्टि धेरै नै गहिरो भएको पाइन्छ । सरल तथा स्पष्ट भाषाशैलीमा गहन भाव अभिव्यक्त गर्न कवि सफल भएका छन् ।

## ४.३ कविताको सैद्धान्तिक परिचय

कविता साहित्यका विविध विधाहरूमध्ये सर्वप्राचीन विधा हो । पूर्वीय साहित्यमा यसलाई काव्य शब्दले चिनिन्छ । संस्कृत भाषाको 'कवृ' धातु 'कव' मा परिवर्तित भई त्यसमा 'इ' प्रत्यय थपेर कवि शब्दको व्युत्पादन भएपछि यही 'कवि' शब्दमा 'ता' प्रत्यय लगाउँदा 'कविता' शब्दको निर्माण भएको देखिन्छ । 'कविता ' शब्दको व्युत्पादन जस्तै 'काव्य' शब्दको व्युत्पादन पनि संस्कृतको 'कवृ' धातुमा 'इ' प्रत्यय लगाई त्यसमा व्य/व्यत् (व्य/य) प्रत्यय लगाएर भएको पाइन्छ तथापि सरलताका दृष्टिले 'कवि' मा 'ता' प्रत्यय लगाएर व्युत्पादन गर्ने प्रचलन बढेको देखिन्छ । 'कविता' वा 'काव्य' शब्दको यस किसिमको व्युत्पादनका आधारमा 'कविता' वा 'काव्य' शब्द कविसँग सम्बन्धित देखिन्छ । यसलाई कविको कर्मका रूपमा व्याख्या गरिएको पाइन्छ (त्रिपाठी र अन्य, २०६० : १५) । कविताका लागि अंग्रेजीमा Poetry वा Poem शब्दको प्रयोग पाइन्छ । अंग्रेजीमा प्रचलित Poetry र

Poem शब्दको निर्माण ग्रिक ल्याटिन जस्ता प्राचीन भाषाहरूबाट भएको देखिन्छ । यसलाई निम्नलिखित अनुसार देखाउन सकिन्छ :

१. ल्याटिन-Poeticus (पोइटिकस)

२. ग्रिक-Poietikos (पोइटिकोस)

३. फ्रान्सेली - Poe'me (पोइमे)

४. ल्याटिन - Poema (पोइमा)

५. ग्रिक- Poiema (पोइमा)

यसरी यी भाषाका उपर्युक्त शब्दहरूबाट अंग्रेजीको Poetry र Poem शब्दको निर्माण भएको देखिन्छ । सामान्यतया Poetry शब्द काव्यका लागि र Poem शब्द कविताका लागि बढी प्रयोग भएको पाइन्छ । यी सबै शब्दहरूले सिर्जनासँग सम्बन्धित अर्थ जनाउने भएकाले र कवि कर्मका रूपमा समेत अर्थ बुझाउने भएकाले कविद्वारा सिर्जना गरिएको लयात्मक रचना भन्ने अर्थ बुझाएको मानिएको छ (गौतम, २०६९ : १-२) । कविताका बारेमा विभिन्न विद्वानहरूले आ-आफ्नो मत प्रस्तुत गरेको पाइन्छ । भरतमुनिको कथनानुसार कवितामा कोमल र सुन्दर पदविन्यास, गूढ शब्दार्थहीनता, सबोधता, युक्तिपूर्णता, नृत्यका लागि उपयुक्तता, रसनिष्पत्तिका लागि गुण र सन्धियुक्तता हुनुपर्छ (थापा, २०७३ : ३४) । त्यस्तै वेदव्यास (एघारौं शताब्दी) का अनुसार सङ्क्षेपमा भाव व्यक्त गरिने, अलङ्कार र गुणले युक्त दोषरहित पदावली नै कविता काव्य हो । अर्का विद्वान् मम्मट (एघारौं शताब्दी) का विचारमा अलङ्कार भए पनि नभए पनि दोषरहित र गुणसहितको शब्द र अर्थको समष्टि रूप काव्य हो (सिग्द्याल, २०४४ : ७) । त्यस्तै ईसापूर्व ३८४-३२२ का पाश्चात्य काव्य चिन्तक एरिस्टोटलका अनुसार भाषाका माध्यमबाट हुने प्रकृतिको अनुकरण नै काव्य हो । अर्का विद्वान् सेक्सपियरका अनुसार अदृश्य वस्तुलाई पनि साकार बनाउने कविको कल्पनाविम्ब र उडन्ते, अस्तित्वहीन एवम् नगण्य वस्तुलाई पनि मूर्त बनाएर नाम र स्थान प्रदान गर्ने कविको लेखनी नै कविता हो (गौतम, २०६९ : ११) । त्यसैगरी महाकवि लक्ष्मीप्रसाद देवकोटाका अनुसार प्रतिभाप्रद सहज भावहरूको सहज र साङ्गीतिक अभिव्यक्ति नै कविता हो, जसको सम्बन्ध पाठकसँग हुन्छ । त्यस्तै बालकृष्ण समले भावनाको बौद्धिक कोमलतालाई कविता हो भन्ने विचार प्रस्तुत गरेका छन्

(उपाध्याय, २०५५ : १५) । यसरी विभिन्न विद्वान्हरूको कवितासम्बन्धी विचारहरूको अध्ययन पश्चात् सारभूत रूपमा समेटी परिभाषा बनाउँदा कोमल, सुन्दर पदविन्यासयुक्त, अलङ्कार र गुणले युक्त, दोषरहित, कल्पनायुक्त सहज भावनाको बौद्धिक कोमलता नै कविता हो भन्न सकिन्छ ।

## ४.३ कविताका प्रमुख तत्त्वहरू

संरचनाको निर्माणका लागि आवश्यक पर्ने उपकरणहरूलाई संरचक घटक वा तत्त्व भनिन्छ । यी संरचक तत्त्व वा घटकहरू संरचनाका अवयव हुन् । साहित्यिक कृति वा रचना पनि त्यस्तै किसिमका संरचना नै हुन् । साहित्यका जुनसुकै विधाका कृतिको निर्माणका लागि निश्चित वा आधारभूत घटकहरूको मेल हुनु आवश्यक छ । कविता पनि साहित्यकै एउटा विधा भएको र यो एक किसिमको संरचनासमेत भएकाले कविताको निर्माणका लागि पनि केही आधारभूत तत्त्व वा संरचक घटकहरूको मेल हुनुपर्दछ । यस्ता संरचक तत्त्व वा घटकहरूले कृतिलाई पूर्णता प्रदान गर्छन् । कवितालाई साकार अस्तित्वमा ल्याउने काम संरचक तत्त्वले गर्दछन् (गौतम, २०६९ : ८०) । कविताका विधागत भेदमध्ये मुक्तक र फुटकर कवितादेखि खण्डकाव्य महाकाव्यसम्मको स्वरूपलाई ध्यानमा राख्दा कविताका घटक निम्नलिखित मुख्य पक्ष वा तत्त्व देखापर्छन् : १) शीर्षकविधान (२) विषयवस्तु एवम् भावविधान (३) संरचना (४) लयविधान (५) भाषाशैली (६) कथनपद्धति (७) विम्ब, प्रतीक र अलङ्कारविधान ।

यी तत्त्वहरू परस्पर आबद्ध रहने गर्दछन् । यिनका बारेमा समष्टिमा निम्नानुसार चर्चा गर्न सकिन्छ ।

### ४.३.१ शीर्षकविधान

शीर्षक कविता कृतिको नामकरण मात्र नभइ कृतिको सारभूत भाव विचारको सूचक सङ्केत वा उद्घाटकसमेत हुनुपर्ने हो । शीर्षक विशेषीकृत भएमा यसले कृतिका अन्तर्वाह्य संरचना र भाषाशैलीले वहन गरेको समग्र विषयवस्तुको केन्द्रीय कथ्यलाई जाहेर गर्दछ (त्रिपाठी र अन्य, २०६५ : १७) । त्यसैले कविता कृतिमा शीर्षक महत्त्वपूर्ण घटक मानिन्छ । कुनैपनि कविता कृतिको शीर्षक अभिधात्मक, लक्षणात्मक र व्यञ्जनात्मक रूपबाट प्रस्तुत गरिएको हुन्छ ।

## ४.३.२ विषयवस्तु एवम् भावविधान

जीवन जगत्को समग्र विषयवस्तु र मानवचेतनाको यावत् अनुभवपुञ्ज कवितामा नअटाउने चाहिँ होइन र पुरै प्रकृति (जीवन र जगत्), मानवीय समाज र संस्कृति, पुराकथा र इतिहास, दर्शन र ज्ञान-विज्ञान आदिका साथै मानवमनको समस्त अनुभव-व्यापार (अनुभूतिपुञ्ज वा भावराशि) को कथन कवितामा हुन सक्दछ । कविताको कथ्य सामग्री र सन्दर्भको सेरोफेरो यही नै हो (त्रिपाठी र अन्य, २०६५ : २०) । विषयवस्तु एवम् भावविधानलाई कविताको अनिवार्य एवम् महत्त्वपूर्ण घटक मानिन्छ ।

## ४.३.३ संरचना

कुनै पनि कविता कृतिमा संरचना वाह्य र आन्तरिक किसिमले व्यक्त हुन्छ । वाह्य संरचनामा लयात्मक खण्ड/गण र विश्राम भई पाउ/चरणमा वा पङ्क्ति विधान तथा पङ्क्तिपुञ्ज सँगै थालिन्छ र त्यसका विविध भाग र परिच्छेदमा विस्तारित हुन्छ । आन्तरिक संरचनामा कृतिमा अङ्गालिएको कथनपद्धतिका माध्यमबाट थालिन्छ र सिधै कवि कथन पद्धतिद्वारा नै कथ्य भाव, विचार र त्यससँग सम्बन्धित सन्दर्भ तथा सामग्रीको कथन कविताकृतिमा गरिएको हुन्छ (त्रिपाठी र अन्य, २०६५ : १८) । संरचनालाई पनि कविताको अनिवार्य घटक मानिन्छ ।

## ४.३.४ लयविधान

कविता विधाको मुख्य विधागत परिचायक स्वरूप तत्त्व लयविधान नै हो । यो लयविधान प्रथमतः भाषिक स्वरव्यञ्जन वर्णका वर्णगत ध्वनिको साम्यवैषम्य दुवै भएको वितरण प्रक्रियाको कालगत प्राप्ति हो र कविताकृतिका चरण/पाउ वा पङ्क्ति/हरफको गतिक्रम र यतिविधानबाट थालिन्छ । यस्तो चरण वा पङ्क्तिको वार्णिक/मात्रिक वा आक्षरिक वितरणक्रम (आवृत्ति/अनावृत्ति) तथा यति र उच्चारणकालको लम्बाइले पनि लयविधानमा भूमिका खेल्दछ (त्रिपाठी र अन्य, २०६५ : १८) ।

## ४.३.५ भाषाशैली

कविताको भाषाशैली भन्नु जुन अर्थको कथन कुनै कविताकृतिले गर्नु छ त्यसका निम्ति उपलब्ध भाषिक विकल्पमध्येबाट सबभन्दा बढी ललित र रागात्मक अनि व्यञ्जक र लयात्मक हुन सक्ने गरी वर्ण, शब्द/पद, पदावली, वाक्यखण्ड, वाक्य र अनुच्छेद

विधानसमेत सिर्जित हुने कुरा हो । यसक्रममा भाषा अभिधार्थ (वाच्यार्थ) भन्दा पर लाक्षणिक र व्यञ्जकसमेत बन्न पुग्दछ (त्रिपाठी  र अन्य, २०६५ : १९) भाषाशैलीय तत्त्वहरूले नै कवितालाई निश्चित संरचना प्रदान गर्नाका साथै योजनाबद्ध किसिमले व्यवस्थित गराउँछन् ।

## ४.३.६ कथन पद्धति

कविता मूलतः आत्मालाप वा मनोलाप (एकान्त आत्म-गुञ्जन) गर्ने भाषिक लयात्मक कथन कला हो तापनि त्यस मनोलाप वा मनोगुञ्जनको अभिव्यक्ति गर्ने श्रुतिरम्य कथन अपेक्षित नै हुन्छ । कवि आफै सिधै कुनै कवितात्मक कथन गर्दछ भने त्यो कवि प्रौढोक्ति हो र यो स्थिति गद्य क्षेत्रको निबन्धविधासँग पनि तुलनीय छ । यहाँ कथयिता वा आत्मालापी कविले आफ्नै वस्तुपरक वा आत्मपरक कथ्य आफै गुन्गुनाउँदा पनि अप्रत्यक्षतः कसैप्रति (भावकप्रति) सम्बोधित गरी भन्दछ र यो कथन खास गरी तृतीय पुरुष वा प्रथम पुरुषमा र कहिले कता द्वितीय पुरुषमा पनि कथित वा आत्मालापित हुन सक्छ (त्रिपाठी र अन्य, २०६५ : १९) । कवितामा भाव अभिव्यक्त गर्नका लागि आत्मपरक, प्रश्नात्मक एवम् वर्णनात्मक जस्ता कथनशैलीको प्रयोग गर्न सकिन्छ ।

## ४.३.७ विम्ब, प्रतीक र अलङ्कारविधान

कुनै पनि कृतिमा मुख्य कथ्य (कथन गरिएको : प्रस्तुत) अर्थको सहचर प्रतिच्छायाका रूपमा आउने अर्को सहप्रस्तुत वा सहवर्ती अर्थ विम्ब हो । जीवनजगत्का विविध सन्दर्भ र सामग्रीबाट विम्बविधान हुन सक्छ र अर्थालङ्काहरू विम्बविधानकै उपक्रम हुन् । अर्थालङ्कार वा विम्बमध्ये स्वभावोक्ति (यथार्थपरक कथन) को आफ्नै सौन्दर्य नहुने होइन तर वक्रोति वा अतिशयोक्तिबाट सृजित विम्बालङ्कारहरू विशेष चमत्कारी ठहर्छन (त्रिपाठी र अन्य, २०६५ : २१) । त्यस्तै वर्तमान सन्दर्भमा प्रतीक शब्दले कुनै चिजलाई प्रतिनिधित्व गर्ने सजीव वा निर्जीव वस्तुलाई बुझाउँछ । साहित्य तथा भाषामा सादृश्य वा साहचर्यद्वारा कुनै चिजको प्रतिनिधित्व गर्ने वस्तुलाई प्रतीक भनिन्छ (शर्मा र अन्य, २०६३ : ३१६) । विम्ब प्रतीक र अलङ्कारविधानलाई कविताको महत्त्वपूर्ण तत्त्व मानिन्छ ।

## ४.४ लाज हराएका मान्छेहरू (२०७३) कविता सङ्ग्रहको तत्त्वगत अध्ययन

यहाँ कविताका प्रमुख तत्त्वहरू शीर्षकविधान, विषयवस्तु एवम् भावविधान, संरचना, लयविधान, भाषाशैली, कथनपद्धति, विम्ब, प्रतीक र अलङ्कार आदिका आधारमा **लाज हराएका मान्छेहरू** कविता सङ्ग्रहभित्र रहेका २० वटा कविताहरूको निम्नबमोजिम विश्लेषण गरिएको छ ।

### ४.४.१ शीर्षकविधान

**लाज हराएका मान्छेहरू** कविता सङ्ग्रहमा बीस वटा कविताहरू रहेका छन् । ती बीस वटा कविताहरू मध्येको **लाज हराएका मान्छेहरू** शीर्षकको कवितालाई टिपेर सिङ्गो कृतिको नामाङ्करण गरिएको पाइन्छ । यस कविता सङ्ग्रहका कविताहरूको शीर्षक छनोटमा विविधता अपनाइएको पाइन्छ । यस सङ्ग्रहमा रहेका केही कविताहरूमा विषयवस्तुका आधारमा शीर्षक चयन गरिएको छ भने केही कविताहरूमा कविताकै ह्रफरुलाई जस्ताको तस्तै टपक्क टिपेर शीर्षकीकरण गरिएको पाइन्छ । यसका शीर्षकहरू प्राय छोटा, छरिता, भावपूर्ण, आकर्षक, साङ्केतिक तथा पाठकहरूलाई कौतुहल पैदा गर्ने खालका पनि छन् । साथै केही शीर्षकहरू प्रतीकात्मक पनि रहेका छन् । ती सबै शीर्षकहरू प्रत्यक्ष एवम् परोक्ष रूपमा कविताकै मुलभाव एवम् विषयवस्तुमा केन्द्रित रहेकाले सार्थक रहेको देखिन्छ ।

**लाज हराएका मान्छेहरू** कविता सङ्ग्रहमा विभिन्न तरिकाले शीर्षकीकरण गरिएको छ । जसमध्ये कविताकै अनुच्छेदलाई टपक्क टिपेर शीर्षकीकरण गरिएका केही हरफहरूको नमूना यसरी प्रस्तुत गरिएको छ ।

- एक मुट्ठी श्वास बाँकी रहेको
  यो बूढो अस्पतालको
  म बूढो कवि ! (श्रेष्ठ, २०७३ : १८)

  (कविताको शीर्षक चयन : म बूढो कवि !)

- मुसाले खेत जोत्दैन महाशय !
  खेत जोत्नलाई गोरु र राँगा चाहिन्छ
  मुसालाई जोत्ने प्रयत्न नगर (श्रेष्ठ, २०७३ : १९)

  (कविताको शीर्षक चयन : मुसाले खेत जोत्दैन)

- त्यसैले आजैबाट
  आ-आफ्नै ठाउँबाट
  शान्तिको अखण्ड दीप प्रज्ज्वलित गरौँ
  कहिल्यै ननिभ्नेगरी
  प्रज्ज्वलित गरौं (श्रेष्ठ, २०७३ : ३१)

(कविताको शीर्षक चयन : शान्तिको अखण्डदीप प्रज्ज्वलित गरौँ)

त्यसैगरी म मेरै माटोमा जमरा छर्न चाहन्छु, मौन विद्रोह गरिरहेछु, अलच्छिनी फ्याउरो, यात्रा अझै बाँकी छ, पासा मेरो नाममा राज्य नमाग, मेरो टोलका बुढावालाई जस्ता कविताहरूको शीर्षकीकरण पनि कविताकै अनुच्छेदलाई टिपेर गरिएको देखिन्छ । उपर्युक्त शीर्षकहरू कविताको भाव अनुसारकै रहेको देखिन्छ ।

त्यस्तै यस कविता सङ्ग्रहमा कविताको विषयवस्तु अनुसारको शीर्षकीकरण पनि गरिएको देख्न सकिन्छ । विषयवस्तु अनुसार शीर्षकीकरण गरिएका केही कविताहरूको नमुना यसरी प्रस्तुत गरिएको छ ।

- छोरा मुटुभरिको सम्झना !
  काठमाडौँमा लुकाएको बिजुलीले
  झिलिमिली पार्‍यो अरे ।
  कहिल्यै पनि लोडसेडिङ्ग
  हुँदैन अरे । (श्रेष्ठ, २०७३ : १०)

(कविताको शीर्षक चयन : छोरालाई चिठी)

- भूकम्पसँगै भागेका कैदीहरू
  डिस्कोमा पक्राउ परे
  पीडितलाई आएको राहत
  जस्तापाता चोरहरू सधैं फरार रहे (श्रेष्ठ, २०७३ : २१)

(कविताको शीर्षक चयन : भूकम्प र राहत)

- हेर न साथी कमिला
  मेहनती र आँटिला
  साथी साथी मिलेर
  काम गर्छन् जोसिला (श्रेष्ठ, २०७३ : ३२)

(कविताको शीर्षक चयन : मेहनती कमिला)

- नेता र भुइँचालोको कहिल्यै पनि
  विश्वास गर्नुहुन्न रे ।
  यिनीहरूले हामीलाई दुःख बाहेक
  केही दिन सक्दैनन रे ।
  यिनीहरू लाज हराएका हुन् है बुबा । (श्रेष्ठ, २०७३ : ६३)

(कविताको शीर्षक चयन : लाज हराएका मान्छेहरू)

त्यसैगरी जनताको लेखाइमा संविधान, हाम्रो निर्णय, लाहुरेको चिठ्ठी, अमूर्त क्रान्ति जस्ता कविताहरूको शीर्षकीकरण पनि विषयवस्तुको आधारमा गरिएको देखिन्छ । यस कविता सङ्ग्रहमा देशप्रेम, मानवीय संवेदना, प्रकृतिको मार्मिक चित्रण, व्यङ्ग्य, विद्रोह, भ्रष्टाचारको पर्दाफास, शान्तिको चाहना, आदि विषयहरू उठान गर्न कवि सफल भएका हुन् ।

त्यस्तै यस कविता सङ्ग्रहका केही कविताहरूको शीर्षकीकरण प्रतीकात्मक रूपमा गरिएको देखिन्छ । कविले साँझमा ठोक्किएका काँचका गिलासहरूको ठोक्काइको आवाजले प्रत्येक दिनको थकान हलुका हुन्छ भन्दै त्यो ठोक्काइमा अलिकति आत्मीयता र अलिकति सहानुभूति रहेको हुन्छ भन्ने भाव अभिव्यक्त गरेका छन् । गिलासको प्रत्येक ठोक्काइले दिनको समाप्ति र रातको प्रारम्भको सङ्केत गर्दछ भन्दै कविले नेताहरूले पाँचतारे होटलमा ठोक्काउने काँचका गिलासहरूको ठोक्काइलाई स्वार्थ एवम् भ्रष्टाचारको गन्धका रूपमा लिएका छन् भने सोझा साझा जनताहरूले ठोक्काउने गिलासहरूको ठोक्काइलाई आत्मीयता, सहानुभूति, आँट, भरोसा एवम् मनका उकुसमुकुस भावहरूको अभिव्यक्तिका रूपमा लिएका छन् । उदाहरणको रूपमा यस कविताका केही पङ्क्ति निम्नानुसार प्रस्तुत गरिएको छ :

- हाम्रा काँचका गिलासको ठोक्काइ

  माननीयहरूले पाँचतारे होटेलमा

  ठोक्काइएको भन्दा

  महङ्गा रिसोर्टहरूमा ठोक्काएको भन्दा

  नितान्त फरक छन्

(श्रेष्ठ, २०७३ : २५-२६)

त्यसैगरी 'वनभरि एक्लै सल्ला सुसाई रहेछ' कविताको शीर्षक पनि प्रतीकात्मक रहेको देखिन्छ । समाजमा सीमित हुनेखाने वर्गहरूकै बोलवाला रहेको एवम् तल्लो वर्गका आवाजहरू विलीन भइरहेको वर्तमान नेपाली समाजप्रति प्रतीकात्मक व्यङ्ग्य गर्दै कविले प्रस्तुत कवितामा यसरी भाव अभिव्यक्त गरेका छन् :

वनभरि कसैलाई नराखी

एक्लै सल्लो आज आफ्नै

विरहमा सुसाई रहनु परेको

यो सल्लोलाई ...... ।

(श्रेष्ठ, २०७३ : ७६)

त्यस्तै 'देश प्रतिविम्बित कविको कोट' कविताको शीर्षकीकरण पनि प्रतीकात्मक रहेको पाइन्छ । प्रस्तुत कवितामा कवि अनामणिले हाम्रो देशको अवस्थालाई कविको थोत्रो, झुत्रे एवम् मैलो कोटसँग तुलना गरेर व्यङ्ग्यात्मक भाव अभिव्यक्त गरेका छन् । उदाहरणका रूपमा कविताका केही हरफहरू यसरी प्रस्तुत गरिएको छ ।

नेताका भाषणका परिणामहरू

कार्यकर्ताका चालचलनहरू

देशको भावी र भविष्यहरू

यी सबै सबै वाद र नाराहरू

आज कविको कोटले

प्रतिविम्बित गरेको छ

(श्रेष्ठ, २०७३ : ७९)

कोटको भित्रको एक चोक्टा भन्दा

देशको चोक्टा झर्न

लागेकोमा बढी तनाव देखिन्छ ।

हो.....यी... र यस्तै कोटको

परिस्थितिले कविको कोट बनेको छ देश ।

(श्रेष्ठ, २०७३ : ८०)

यसरी प्रस्तुत कविता सङ्ग्रहको शीर्षकीकरण अधिकांश कविताहरूमा कविताकै हरफहरूलाई जस्ताको तस्तै टिपेर गरिएको छ भने केही कविता विषयवस्तुका आधारमा एवम् केही चाहिँ प्रतीकात्मक आधारमा गरिएको पाइन्छ । शीर्षक सार्थकताका दृष्टिले विवेचना गर्दा यस सङ्ग्रह भित्रका सबै शीर्षकहरू सार्थक रहेको देखिन्छ ।

## ४.४.२ विषयवस्तु एवम् भावविधान

रत्नप्रसाद अनामणि श्रेष्ठले **लाज हराएका मान्छेहरू** कविता सङ्ग्रहमा विविध विषयको उठान गरेका छन् । यस सङ्ग्रह भित्रका कविताहरूमा भ्रष्टाचार, वेथिति, अन्याय, अत्याचार आदिको विरोध, राजनीतिक व्यङ्ग्य-विद्रोह, भूकम्प पछिको पीडा, अस्तव्यस्त सरकारी कामकाजको विरोध, क्रान्तिकारी अवाज, शान्तिको चाहना, मेलमिलाप एवम् एकताको चाहना, देशप्रेम, जनताको संविधानको पक्षमा वकालत, जातीयतावादको विरोध, नेताका खोक्रा भाषणको विरोध, भातृत्वको भावना, गरिबीको पीडा, दीनदुःखीको आवाज, परदेशीको पीडा, नाकाबन्दी पछि भोग्नुपरेको पीडा, वैदेशिक हस्तक्षेप, देशको भाषा, धर्म एवम् संस्कृतिको प्रेम, खोक्रा वामपन्थीहरूको विरोध, देशको वर्तमान दुरावस्थाको चित्रण, प्रकृति चित्रण आदि जस्ता विभिन्न विषयवस्तुहरू समावेश गर्न कवि अनामणि सफल भएका छन् ।

सबैजसो कविताहरूमा यिनले देशबारे र मान्छेको जीवनक्रमबारे आफ्नो विचार राखेका छन् । देश दुख्दाका स्थितिहरू, नेताहरू भड्किँदाका रूपरङ्गहरू देखेर यिनले व्यङ्ग्य शब्द शैलीमा चलनचल्तीको सरल भाषामा कवितामा आफ्नो आक्रोश पोखेका छन् (श्रेष्ठ, २०७४ : ६) । नेताहरूबाट हुने गलत क्रियाकलापलाई व्यङ्ग्य गर्दै कवि भन्छन् -

उनीहरूको ठोक्काइमा
राष्ट्रिय ढुकुटी रित्याउने गन्ध छ
प्रत्येक नेपालीको पसिना र
परिश्रमको मूल्य छ

(श्रेष्ठ, २०७३ : २६)

तिम्रो नाकको उचाइ मिलाउन
हरेक भाषणमा संविधानका कुराहरू फलाक्दै
आफ्नै आँखामा आफूलाई
कहिले राष्ट्रपति त कहिले प्रधानमन्त्रीसम्मको
सपना बाँधेर दिन काट्दैछौ ।

(श्रेष्ठ, २०७३ : ३६)

तिम्रा पद, पाइला र पर्खालहरू
हामीलाई मान्य हुने छैन
तिम्रो प्रत्येक पलपलमा व्यक्त गरेका
मिथ्या भाषणहरू हामीलाई मान्य हुने छैन
तिम्रो स्वार्थ स्वर्गका दरबारहरू
हामीलाई चाहिँदैन

(श्रेष्ठ, २०७३ : ३९-४०)

यसरी उनले आफ्ना कविताहरूमा नेताहरूको भ्रष्टाचारी प्रवृत्ति एवम् स्वार्थी राजनैतिक प्रवृत्ति माथि खरो रूपमा प्रस्तुत भई उनीहरूको फोस्रा भाषणको विरोध गरेको देखिन्छ ।

त्यस्तै क्रान्तिको चाहना गर्दै कवि आफ्नो विचार यसरी अभिव्यक्त गर्दछन्-

सृजनशील हातहरू बढाएर
परिश्रमी आँखाहरू खुलाएर
मेरो देश बनाउनु छ
धुलोको कसिंगर हटाउनु छ

(श्रेष्ठ, २०७३ : ५५)

अनियन्त्रित भीडहरूबाट
हाम्रो अँगालोको खुसीहरू नलुटोस्
क्रान्तिमाथिको विश्वास नघटोस्
क्रान्ति ह्वीस्की र ब्रान्डीहरूमा विलीन नसाटियोस्
चिल्ला कार र बङ्गलाहरूमा विलीन नहोस्

(श्रेष्ठ, २०७३ : ५९)

देशमा व्याप्त धुलो एवम् कसिंगरलाई जरै देखि हटाउनको लागि क्रान्ति आवश्यक छ भन्दै क्रान्तिको विश्वास नघटोस् एवम् क्रान्तिकारीहरू विलासितामा अल्भेर क्रान्तिलाई निस्तेज नपारुन भन्ने भाव कवि अनामणि व्यक्त गर्दछन् ।

त्यस्तै उनी देश प्रेमको भावलाई पनि यसरी अभिव्यक्त गर्दछन् -

मेरो कमजोरीको फाइदा उठाएर
कसैले कुनै पनि व्यवहार
म विरुद्ध उठाएमा म कहिल्यै सहन्न ।
बरु प्राण जाला स्वीकार्य छ
यात्राको अन्तिम घडीसम्म लडौंला
म मेरै नागरिकतामा बाँच्न चाहन्छु
म मेरै माटोमा जमरा छर्न चाहन्छु ।

(श्रेष्ठ, २०७३ : ३५)

प्यारो सगरमाथाको काखमा बस्न
खोला, नाला, पहाड, मैदान
पार गर्ने तिम्रो असहाय मन हेर्न
म आउँदैछु
बेली, चमेली, बुकी र पारिजातले पनि डाक्दै होलान् ।

(श्रेष्ठ, २०७३ : ५२)

कोटको भित्रको एक चोक्टा भन्दा

देशको चोक्टा झर्न

लागेकोमा बढी तनाव देखिन्छ ।

(श्रेष्ठ, २०७३ : ८०)

कवि अनामणिले आफ्ना कवितामा देशप्रेमबारे निकै मार्मिक ढङ्गले आफ्ना विचारहरू अभिव्यक्त गरेका छन् । देशको कारुणिक अवस्था एवम् सीमा मिचिएको प्रति गहिरो दुःख व्यक्त गरेका छन् ।

त्यसैगरी उनले आफ्ना कवितामा श्रृङ्गारिक भावको अभिव्यक्ति पनि गरेको देखिन्छ । उदाहरणका लागि -

मेरी अभागिनी

म हृदयका कोमल भावनाहरू लिएर

तीव्र आतुरताका साथ

तिम्रो पातलो गाला, स्वच्छ हृदय

अनि छिनेका कम्मर र गाजले आँखालाई

हेर्न आउँदैछु ।

(श्रेष्ठ, २०७३ : ५१)

खासगरी कवितामा श्रृङ्गारिकतालाई कम जोड दिने अनामणिले हार्दिक प्रेमको अभिव्यक्ति गर्ने गरेको पाइन्छ ।

उनले आफ्ना कवितामा प्रकृतिको मार्मिक चित्रण पनि गरेका छन् जसलाई उदाहरणका रूपमा यसरी प्रस्तुत गर्न सकिन्छ :

पहाडको झरनाबाट बग्नुपर्ने

बिहानीको किरणसँगै

शीतका थोपाहरू लुक्नुपर्ने

चराहरूको चिरबिर सँगै

प्रकृतिमा लाली थपिनु पर्ने

(श्रेष्ठ, २०७३ : १५)

सम्भना छ अभै

बकैनाका रुखमा बसेर

त्यो चिबे कराएको

अनि उत्तिसको रुखमा

जुरेलीहरू एक आपसमा

कानुखुसी गरेको

(श्रेष्ठ, २०७३ : १५-१६)

त्यसैगरी कवि अनामणिले आफ्ना कविताहरूमा भूकम्प पछिको विकृति एवम् विसङ्गतिलाई पनि मार्मिक ढङ्गले प्रस्तुत गरेको देखिन्छ । उदाहरणका रूपमा केही कविताका हरफरुलाई यसरी देखाउन सकिन्छ -

भूकम्पसँगै भागेका कैदीहरू

डिस्कोमा पक्राउ परे

पीडितलाई आएको राहत

जस्तापाता चोरहरू सधैँ फरार रहे ।

(श्रेष्ठ, २०७३ :२१)

आमाले धानको विऊ

सबै भूकम्पले पुरियो बाबु भन्नुहुन्थ्यो,

त्यतै कतै छरछिमेकीसँग

पैंचो मागरे चलाउनु है बुबा ।

(श्रेष्ठ, २०७३ : ६१)

बुबा ! राहत दियो भन्दैमा

कुहेको चामल, मिसावट तेल,

भण्डारमा थन्किएको चाउचाउ

म्याद नाघेको औषधी

केही गर्न नसकेको गरिबी देखाउँदै

फोटो खिचाएर राहत नलिनु है बुबा ।

(श्रेष्ठ, २०७३ : ६२)

रत्नप्रसाद अनामणि श्रेष्ठले आफ्ना कविताहरूमा व्यापक विषयको उठान गरेको देखिन्छ । भ्रष्टाचार, वेथिति, अन्याय, अत्याचार, गरिबीको पीडा, प्रकृति चित्रण, भूकम्पपछिको पीडा, देशप्रेम, मानवीय संवेदना, नेताहरूको खोक्रा भाषण, शान्तिको चाहना, भातृत्वप्रेम, नाकाबन्दी पछिको पीडा आदि विषयवस्तुहरू मार्मिक ढङ्गले अभिव्यक्त गर्न उनी सफल भएका छन् । भावका दृष्टिले उनका कविताहरू अत्यन्तै ओजिला रहेका देखिन्छन् ।

## ४.४.३ संरचना

वाह्य संरचनाका हिसाबमा अनामणिको प्रस्तुत कविता सङ्ग्रह गद्यात्मक संरचनामा आबद्ध रहेको देखिन्छ । जम्मा ८० पृष्ठमा फैलिएको यस कविता सङ्ग्रहमा २० वटा कविताहरू रहेका छन् । यस सङ्ग्रहमा रहेका कविताहरू सुरुदेखि क्रमशः ६७, ९३, २५, २६, ९४, ३६, १२, २६, ८६, ३९, ३४, ६६, ३५, ३१, ६६, ६३, ५७, ६४, ७१, ८६ हरफमा आबद्ध रहेको देखिन्छ । यस सङ्ग्रहका कविताहरू थोरैमा १२ हरफे देखि बढीमा ९४ हरफ सम्म फैलिएको देखिन्छ । 'मेहनती कमिला' एवम् 'यात्रा अझै बाँकी छ' शीर्षकका २ वटा कवितामा अन्त्यानुप्रासको प्रयोग भएको देखिन्छ । उदाहरणका लागि -

हेर न साथी कमिला
मेहनती र आँटिला
साथी साथी मिलेर
काम गर्छन् जोसिला

(श्रेष्ठ, २०७३ : ३२)

खोल्नु पर्ने ढोकाहरू खुलेका छैनन्
बोल्नुपर्ने मुखहरू बोलेका छैनन्
कसैलाई गाँसको डर छ
कसैलाई श्वासको डर छ

(श्रेष्ठ, २०७३ :५४)

प्रस्तुत दुईवटा कविता बाहेक उनका अन्य कविताहरू अन्त्यानुप्रास विहीन रहेका देखिन्छन् । यद्यपि कुनै कुनै कविताको केहीकेही ठाउँमा भने छिटफुट रूपमा अन्त्यानुप्रासको प्रयोग भएको देखिन्छ ।

आन्तरिक संरचनालाई हेर्दा उनका कविताहरू मुक्त लयमा भए तापनि अन्तरअनुप्रासको प्रयोगले लयात्मक देखिन्छन् । विषयवस्तु वा भावको प्रस्तुतिका लागि उनले आवश्यकता अनुसार प्रथम, द्वितीय एवम् तृतीय पुरुष दृष्टिविन्दुको प्रयोग गरेको देखिन्छ । ७ वटा कवितामा प्रथम पुरुष, अनि अरु सात वटै कवितामा द्वितीय पुरुष एवम् ६ वटा कवितामा तृतीय पुरुष दृष्टिविन्दुको प्रयोग उनले गरेको पाइन्छ । विभिन्न विम्ब, प्रतीक एवम् अलङ्कारको प्रयोगले उनका कविताहरू सौन्दर्यपूर्ण भएका देखिन्छन् । अभिधा, लक्षणा एवम् व्यञ्जना शब्दशक्तिको प्रयोगले भाषा चमत्कारपूर्ण बन्न सफल भएको देखिन्छ ।

## ४.४.४ लयविधान

रत्नप्रसाद अनामणि श्रेष्ठको **लाज हराएका मान्छेहरू** कविता सङ्ग्रहमा १९ वटा गद्य कविता एवम् १ वटा बालकविता सङ्ग्रहीत गरिएको छ (श्रेष्ठ, २०७४ : ६) । उनका सम्पूर्ण कविताहरू मुक्त स्वतन्त्र गद्यात्मक शैलीमा लेखेको पाइन्छ । गद्य लयभित्र उनले जीवनका तीतामीठा भोगाई, राजनीतिक व्यङ्ग्य विद्रोह, मानवीय संवेदना, प्रकृतिको मार्मिक चित्रण, शान्तिको चाहना, भातृत्व प्रेम, भूकम्प पछिका दर्दनाक स्थितिहरू, देशप्रेम, मेलमिलाप एवम् एकताको चाहना, जातीयतावादको विरोध, नाकाबन्दीको पीडा, वैदेशिक हस्तक्षेपयुक्त राजनैतिक दुरावस्था, देशमा व्याप्त विकृति एवम् विसङ्गतिको पर्दाफासका साथै देशको दुरवस्थाको चित्रण आदि जस्ता विषयवस्तुहरूलाई पंक्तिबद्ध गरेको देखिन्छ । उनका कविता गद्यमा रचना गरेको भए तापनि अन्तर्लयमा सलल बगेका छन् । सरल भाषाशैलीमा गद्यात्मक पारामा चोटिला प्रहार गर्न कवि सफल भएका छन् । उनको कविता पढ्दा उनले गद्य कविताको मर्मलाई बुझेको देखिन्छ । उनको लेखाइमा यति प्रबल कवित्व छ कि उनका कृति पढ्नेले अवश्य बुझ्ने छन् (ढकाल, २०७३ : छ) । पङ्क्ति पङ्क्ति पढ्दा वा सुन्दा उनका कविताहरू अति मीठा लाग्छन् । उनका गद्य कविताका सिलसिला र सन्तुलित सङ्गीत योजना भने मनमा जसरी अनुभूत गरिएको छ उसैगरी राखिएको पाइन्छ । उनका अधिकांश कविताहरू अन्त्यानुप्रास विहीन रहेको देखिन्छन् । उदाहरणका रूपमा उनका कविताहरूलाई यसरी प्रस्तुत गर्न सकिन्छ :

महाकाली रोएको देशमा
हृदयस्पर्शी छालहरूसँगै
अविरल, अनवरत, प्रवाहहरू
बगिरहे .......बगिरहे (श्रेष्ठ, २०७३ : ३०)

दशगजामा बसेर विदेशी भात खाँदै
मेरो देशमा ढुङ्गा हान्नेसँग
मलाई जोडेर राज्य नमाग पासा

(श्रेष्ठ, २०७३ : ६४)

पैयूँ फुल्ने रहरहरूमा
बकैनाका रुखहरू जस्तै
नाँगिदै सल्लाका सुसेलीहरूले
आज बर र पीपलको चौतारी झैँ
बन्नु पर्ने हो ।

(श्रेष्ठ, २०७३ : ७२)

## ४.४.५ भाषाशैली

रत्नप्रसाद अनामणि श्रेष्ठको **लाज हराएका मान्छेहरू** कविता सङ्ग्रहमा सरल, सहज एवम् आकर्षक भाषाशैलीको प्रयोग भएको पाइन्छ । यिनले व्यङ्ग्यात्मक शब्द-शैलीमा चलन चल्तीको भाषामा कवितामा आक्रोश पोखेका छन् (श्रेष्ठ, २०७४ : ६) । कलात्मक भाषामा वर्णनात्मक एवम् विवरणात्मक शैलीको प्रयोगद्वारा आफ्ना कविताहरू प्रस्तुत गर्न उनी सफल भएका छन् । केही कविताहरू भाव एवम् भाषाशैलीका दृष्टिमा क्लिष्ट देखिए तापनि अधिकांश कविताहरू सरल रहेको देखिन्छ । उनले आफ्ना कविताहरूमा संस्कृतका ऋण, शिक्षक, प्रकृति, श्वास, जीर्ण, विश्व आदि जस्ता तत्सम शब्दहरूको प्रयोग गरेको देखिन्छ । साथै ठेट नेपाली झर्रा शब्दहरू बाऊ, सुस्केरा, सुसेली, आँट, झारफुक, निगालो, मेसो, पैँचो, सालनाल आदि तथा लोडसेडिङ, सोलार, डलर, सामान, बगली, काका, होटल, एम्बुलेन्स, अक्सिजन, इन्जेक्सन, जमाना, दिमाग आदि जस्ता आगन्तुक शब्दहरूको पनि व्यापक रूपमा प्रयोग गरेको पाइन्छ ।

उनका कविताहरूमा प्रयोग भएको भाषाशैलीमा विविधता पाइन्छ । उनले आफ्नो विषयको पुष्टिका लागि कतै तार्किक तथा कतै समीक्षात्मक पद्धति पनि अपनाएको देखिन्छ । उनका कविताहरूमा बोलीचालीको नजिक-नजिक रहेको शिष्ट नेपाली भाषाको सरल स्वभाविक प्रयोग नै बढी मात्रामा भएको देखिन्छ । उदाहरणका लागि-

उनीहरूले बन्द गर्दा

मेरो बज्यैको एक सय पचास वर्षको

सन्दुक बालेर छाक टारेको छु पासा

(श्रेष्ठ, २०७३ : ६५)

त्यसैगरी अनामणिका कवितामा कतै व्यञ्जनात्मक एवम् प्रतीकात्मक भाषाको पनि प्रयोग भएको पाइन्छ । जस्तै :

मेरो मुटुका कुनाकुनामा

कहिले सुस्ता दुख्छ

कहिले कालापानी दुख्छ

दुख्नेको सीमा बढ्दै गएको छ

हुँदाहुँदै पचास साठ्ठी ठाउँमा दुख्न थाले ।

(श्रेष्ठ, २०७३ : ३४)

अलच्छिनी फ्याउरो

कराएपछि गाउँमा

कोही न कोही मर्छन् रे ।

(श्रेष्ठ, २०७३ : ४७)

त्यस्तै अनामणिका कवितामा आलङ्कारिक भाषाको पनि प्रयोग भएको पाइन्छ । जस्तै -

यो बूढो अस्पतालको

म बूढो कवि !

(श्रेष्ठ, २०७३ : १८)

अनामणिका कविताहरूमा अभिधा शक्तिको बहुल्य भए पनि कतैकतै लक्षणा एवम् व्यञ्जना शक्तिको पनि प्रयोग भएको पाइन्छ । विभिन्न विम्ब, प्रतीक एवम् अलङ्कारहरूको प्रयोगले उनका कविताहरू सुन्दर एवम् ओजिला बन्न पुगेका देखिन्छन् । केही कविताहरूमा भाषागत अशुद्धिहरू पनि देखिन्छन् ।

## ४.४.६ कथन पद्धति

रत्नप्रसाद अनामणि श्रेष्ठको **लाज हराएका मान्छेहरू** कविता सङ्ग्रहका कविताहरूमा प्रथम, द्वितीय एवम् तृतीय पुरुष दृष्टिविन्दुको प्रयोग भएको पाइन्छ । यस सङ्ग्रहमामा प्रथम पुरुष दृष्टिविन्दुको प्रयोग भएका सात वटा, द्वितीय पुरुष दृष्टिविन्दुका सातवटा एवम् तृतीय पुरुष दृष्टिविन्दुको प्रयोग भएका ६ वटा कविताहरू रहेको देखिन्छ । त्यसैगरी उनले आफ्नो भाव अभिव्यक्त गर्नका लागि आत्मपरक प्रश्नात्मक एवम् वर्णनात्मक कथनशैलीको प्रयोग गरेको देखिन्छ । उदाहरणका लागि-

**आत्मपरक**

यो बूढो अस्पतालको
म बूढो कवि !
मृत्यु र जीवनको दोसाँधमा
रहेको म बूढो कवि

(श्रेष्ठ, २०७३ : १८)

**प्रश्नात्मक**

के हाम्रा पाइतालाहरू
हाम्रा दिमाग र मनहरू
अग्रपथमा लम्किरहेका छन् त ?

(श्रेष्ठ, २०७३ : २४)

यसपाली जमरा छर्न नपाइने हो कि ?
मेरो जमिनको माटोमा
यसपाली जमरा छर्न नपाइने हो कि ?
किन जान्ने बुझ्नेले मेरो पीडा बुझ्दैन

(श्रेष्ठ, २०७३ : ३५)

**वर्णनात्मक**

पैयूँ फुल्ने रहरहरूमा
वकैनाका रुखहरू जस्तै
नाँगिदै सल्लाको सुसेलीहरूले
आज बर र पिपलको चौतारी झैं
बन्नु पर्ने हो ।

(श्रेष्ठ, २०७३ : ७२)

## ४.४.७ विम्ब, प्रतीक र अलङ्कारविधान

रत्नप्रसाद अनामणि श्रेष्ठको **लाज हराएका मान्छेहरू** कविता सङ्ग्रहमा विभिन्न विम्ब, प्रतीक एवम् अलङ्कारहरूको उचित प्रयोग भएको पाइन्छ । उनको विम्ब योजना त साह्रै घत लाग्दो छ (सापकोटा, २०७३ : घ) । विशेषगरी समसामयिक विषयवस्तुलाई ओजनदार विम्बसँग रमाउँदै उनी कविता सृजना गर्दछन् । विरालोले मुसालाई खेलाए जस्तै सुन्दर विम्बहरू खेलाएका छन् (ढकाल, २०७३ : छ) । उनका कविताहरूमा सांस्कृतिक, सामाजिक, प्राकृतिक आदि विम्बहरू पाइन्छन् । उदाहरणका रूपमा प्राकृतिक विम्बलाई यसरी हेर्न सकिन्छ ।

बिहानीको किरणसँगै
शीतका थोपाहरू लुक्नुपर्ने
चराहरूको चिरबिर सँगै
प्रकृतिमा लाली थपिनु पर्ने

(श्रेष्ठ, २०७३ : १५)

त्यसैगरी अनामणिले आफ्ना कविताहरूमा विभिन्न प्रतीकहरूको पनि प्रयोग गरेको पाइन्छ । उनका कविताहरूमा मुसा, भ्यागुता, गँड्यौला, जमरा, सूर्य, जून, फ्याउरो, बुद्ध, गिद्ध, लालीपप, सल्ला, कविको थोत्रो कोट जस्ता शब्दहरू प्रतीकका रूपमा आएका छन् । जस्तै कालको प्रतीकको रूपमा फ्याउरोलाई यसरी प्रयोग गरेका छन् -

अलच्छिनी फ्याउरो

कराएपछि गाउँमा

कोही न कोही मर्छन् रे ।

भन्नु हुन्न

यसपालिको पालो

कसको हो ?

(श्रेष्ठ, २०७३ : ४७)

अनामणिले प्रस्तुत कविता सङ्ग्रहमा विभिन्न शब्दालङ्कार तथा अर्थालङ्कारहरूको प्रयोग गरेको पाइन्छ । उनका कविताहरूमा अनुप्रास, उपमा, तुल्ययोगिता, अर्थान्तरन्यास, उत्प्रेक्षा, दृष्टान्त, रूपक आदि अलङ्कारहरूको प्रयोग भएको पाइन्छ । उनका कवितामा छेकानुप्रास एवम् अन्त्यानुप्रास अलङ्कारको प्रयोग यसरी गरिएको छ -

कसैलाई गाँसको डर छ

कसैलाई श्वासको डर छ

(श्रेष्ठ, २०७३ : ५४)

उनका कवितामा वृत्यनुप्रासको सुन्दर संयोजन पनि पाइन्छ । जस्तै -

तिम्रा पद, पाइला र पर्खाइहरू

हामीलाई मान्य हुनेछैन

तिम्रो प्रत्येक पलपलमा व्यक्त गरेका

मिथ्या भाषणहरू हामीलाई मान्य हुने छैन

(श्रेष्ठ, २०७३ : ३८)

उनले उपमा अलङ्कारको प्रयोग पनि गरेको देखिन्छ । जस्तै -

हरेक बिहानीमा उत्साह छैन

प्रकृतिले पनि खुसीहरू बाँडेका छैनन्

वसन्त  ऋतु पनि कुरूप झैं लाग्छ

(श्रेष्ठ, २०७३ : १५)

तेल सिद्धिन लागेको

दियो जस्तो
मसिनो प्वालबाट
निस्केर गइरहेको
बेलुन जस्तो
एक मुठ्ठी श्वास बाँकी रहेको
यो बुढो अस्पतालको
म बूढो कवि !

(श्रेष्ठ, २०७३ : १८)

उनका कवितामा तुल्ययोगिता अलङ्कारको पनि प्रयोग पाइन्छ ।

यो बूढो अस्पतालको
म बूढो कवि

(श्रेष्ठ, २०७३ : १८) ।

त्यस्तै उत्प्रेक्षा अलङ्कारको प्रयोग पनि उनले गरेका छन् । जस्तै -

अब त वनका चरीले पनि नचिने झैं गरी
को हो ? को हो ? सोधिने छ

(श्रेष्ठ, २०७३ : ५२)

उनका कवितामा दृष्टान्त अलङ्कार पनि प्रयोग भएको पाइन्छ । जस्तै :

नेताका भाषणका परिणामहरू
कार्यकर्ताका चालचलनहरू
देशको भावी र भविष्यहरू
यी सबै-सबै वाद र नाराहरू
आज कविको कोटले
प्रतिविम्बित गरेको छ ।

(श्रेष्ठ, २०७३ : ७९)

## ४.४.८ निष्कर्ष

रत्नप्रसाद अनामणि श्रेष्ठ समकालीन सामाजिक यथार्थवादी, मानवतावादी, राष्ट्रवादी, व्यङ्ग्यात्मक कवि हुन् । उनका कविताहरूमा कल्पना पक्ष भन्दा यथार्थ पक्षको वाहुल्यता पाइन्छ । उनका कविताहरूमा भ्रष्टाचार, अन्याय, अत्याचारको विरोध, राष्ट्रिय चिन्तन, गरिवीको पीडा, भूकम्पपछिको पीडादायिक अवस्था, प्रकृति प्रयोग, शान्तिको चाहना, जातीयतावादको विरोध, स्वार्थयुक्त राजनीतिप्रति व्यङ्ग्य विरोध, देशप्रेम, वैदेशिक हस्तक्षेप, विदेशिनुको पीडा, देशको वर्तमान दुरवस्था आदि जस्ता विषयहरू अभिव्यक्ति भएको पाइन्छ । गद्यात्मक शैलीमा लेखिएका उनका सबै कविताहरू गहन भावले युक्त रहेको हुनाले पठनीय छन् । शब्दालङ्कार तथा अर्थालङ्कारको उचित प्रयोग भएको यस सङ्ग्रहमा भाव अनुसारका विम्ब एवम् प्रतीकहरूको प्रयोग पनि उत्तिकै सफल तरिकाले भएको पाइन्छ । विषयसूचीमा १९ कविताहरू उल्लेख गरे तापनि यस सङ्ग्रहमा २० वटा कविताहरू रहेका छन् । कविले विभिन्न समयमा सिर्जना गरी विभिन्न पत्रपत्रिकाहरूमा छपाएका कविताहरूलाई पनि यसै सङ्ग्रहमा समेटिएको पाइन्छ । आफ्नो साहित्य यात्राको लामो समयपछि **लाज हराएका मान्छेहरू** शीर्षकको कविता सङ्ग्रह प्रकाशित गरेका अनामणिले यसै कृतिमार्फत उत्कृष्ट कवि सर्जकका रूपमा आफ्नो छुट्टै पहिचान बनाउन सफल भएका देखिन्छन् ।

## ४.५ रत्नप्रसाद अनामणि श्रेष्ठका मुक्तक सङ्ग्रहहरूको अध्ययन

## ४.५.१ विषय परिचय

रत्नप्रसाद अनामणि श्रेष्ठले आजभन्दा करिब दुई दशक अगाडि २०४६ सालमा काभ्रेबाट प्रकाशित जनमत मासिक पत्रिकाको वर्ष ६, अङ्क १/२ मा प्रकाशित 'हवाइजहाज मात्र होइन प्रिय' शीर्षकको मुक्तक प्रकाशित गरी नेपाली साहित्यको मुक्तक फाँटमा अवतरण गरेको देखिन्छ । उनको पहिलो मुक्तक संग्रह **फूलको माया लागेपछि** (२०४८) हो । जुन सङ्ग्रहमा माया र सौन्दर्यलाई मनोरञ्जनको तराजुमा राखेर पेश गर्न खोजेको भान हुन्छ (दुवाल, २०४८ : आवरण पृष्ठ) । अधिकांश प्रेमभाव युक्त मुक्तक रहेका उनको पहिलो मुक्तक सङ्ग्रहका केही मुक्तकहरू लेखक मनको अभिव्यक्ति, व्यङ्ग्यात्मक एवम् प्रजातान्त्रिक, क्रान्तिकारी भावले समेटिएका छन् । जम्माजम्मी ३२ वटा मुक्तकहरू रहेको प्रस्तुत सङ्ग्रहका केही मुक्तकहरूमा भने चतुष्पदी ढाँचाको अभाव देखिन्छ ।

त्यसैगरी रत्नप्रसाद अनामणि श्रेष्ठको दोस्रो मुक्तक सङ्ग्रह **मेरो गोरेटोमा तिम्रो छायाँ** (२०७३) हो । जसमा अनामणिले ४० वटा मुक्तकहरू समावेश गरेका छन् । पहिलो मुक्तक सङ्ग्रहको तुलनामा यो सङ्ग्रह परिष्कृत, वजनदार एवम् व्यापक विषयवस्तुको प्रस्तुतिका दृष्टिले महत्त्वपूर्ण रहेको देखिन्छ । यस सङ्ग्रहमा देखावटी, इमान्दार, भावना, सपना, अनपत्यार, आशा, कल्पना, भय, फोस्रो श्रम, कुलत, घात, बेइमान, कर्म, पछुतो, चोरी, साहस, अठोट, राष्ट्रियता, अवसरवादी, निर्धक्कता, सोच जस्ता धेरै विषय खोस्रने काम मुक्तकबाट देखिएको छ (रिमाल, २०७४ : ४) । भावका दृष्टिले गहकिलो भए तापनि भाषिक शुद्धताका दृष्टिले भने प्रस्तुत कृति आलोचकीय देखिन्छ ।

त्यस्तै रत्नप्रसाद अनामणि श्रेष्ठको तेस्रो मुक्तक सङ्ग्रह **भो नखिच तस्बिर** (२०७४) हो । अघिल्ला मुक्तक सङ्ग्रहहरूको तुलनामा यो सङ्ग्रह भाव, भाषा एवम् संरचनात्मक दृष्टिले अझ बढी गहन देखिन्छ । ४८ पेजमा फैलिएको प्रस्तुत कृति आकारका दृष्टिले पुराना मुक्तक सङ्ग्रहहरू जस्तै सानो रहेको देखिन्छ । प्रस्तुत सङ्ग्रहका मुक्तकमा सूक्ष्म चेतन प्रवाह निकै प्रबल छ । अन्तर्वस्तुका दृष्टिमा मुक्तकमा सूक्ष्म चेतना प्रवाह निक्कै प्रबल छ । अन्तर्वस्तुका दृष्टिमा मुक्तकले सामाजिक विकृति, विसङ्गति र उत्पिडनलाई उधिन्नुका साथै शृङ्गारिक धारालाई पक्रेका छन् (धमला, २०७४ : ६) । यस कृतिमा पनि अनामणिले शृङ्गारिकताकै सेरोफेरोमा रहेर जीवन जगत्का यावत् विषयवस्तुहरू खोतल्ने काम गरेका छन् । जम्मा ३७ वटा मुक्तकहरू रहेको प्रस्तुत सङ्ग्रहमा रहेका २३, २४ र २५ औं नम्बरमा भएमा मुक्तकहरू भने **मेरो गोरेटोमा तिम्रो छायाँ** मुक्तक सङ्ग्रह (२०७३) बाट टपक्क टिपेर राखिएको देखिन्छ ।

रत्नप्रसाद अनामणि श्रेष्ठको **फूलको माया लागेपछि** (२०४८), **मेरो गोरेटोमा तिम्रो छायाँ** (२०७३) एवम् **भो नखिच तस्बिर** (२०७४) तीनवटै कृतिको शीर्षकीकरण भने मुक्तककै पंक्तिबाट टपक्क टिपेर गरिएको देखिन्छ । तसर्थ यी तीनै कृतिको शीर्षक सार्थक देखिन्छ । गद्य ढाँचामा रचित उनका केही मुक्तकहरूलाई छोडेर अधिकांश मुक्तकहरूमा अन्त्यानुप्रासको सफल संयोजन भएको पाइन्छ । उनका तीन वटै मुक्तक सङ्ग्रह आकारका दृष्टिले भने साना रहेका छन् ।

### ४.५.२ मुक्तकको सैद्धान्तिक परिचय

मुक्तकको व्युत्पत्ति केलाउँदा 'मुक्त' शब्दमा क (कन्) जोडिएर 'मुक्तक' बनेको देखिन्छ । स्वतन्त्र, स्वच्छन्द, बन्धनहीन, खुला अर्थ बुझाउने 'मुक्त' शब्दमा जोडिने 'क' ले कवितासँग

सम्बन्ध गाँसेर स्वतन्त्र कविता भन्ने रुढ अर्थ प्रदान गर्छ र त्यसले सङ्क्षिप्त आकार समेतलाई सङ्केत गरेको मानिन्छ । आफैमा स्वतन्त्र र एक भावमा आधारित सानो कविता भन्ने अर्थमा मुक्तकलाई स्वीकार गरिएको पाइन्छ (नेपाल, २०७३ : ४२) । संस्कृत मान्यतामा एक श्लोकी (चार पङ्क्ति वा हरफ) कवितालाई 'मुक्तक' संज्ञा दिने गरिन्छ । संस्कृत भाषाका सूक्तिहरू, अरबी भाषाका रुबाइयात, उर्दू र फारसी भाषाका सायरी तथा जापानी भाषाका काइकु र ताङ्का मुक्तक अन्तर्गत नै पर्दछन् (नेपाल, २०७३ : ४१) । त्यसैगरी कथा सूत्रमा आबद्ध नभएको, हृदयका भावलाई प्रतिविम्बित गर्ने प्रभावकारी निरपेक्ष स्वतन्त्र कविता (पोखरेल र अन्य, २०५८ : १०२०) लाई मुक्तक भनिन्छ । प्रारम्भकालीन नेपाली मुक्तक अनुप्रासयुक्त देखापर्दछन् भने बिचमा अनुप्रासविहीन मुक्तकहरू धेरै लेखिएको पाइन्छ । हरफ पनि तिन देखि दस र अझ बढी हरफ सङ्ख्या रहेर पनि मुक्तकको संज्ञा दिने गरेको पनि भेटिन्छ । परन्तु पछिल्लो चरणमा आएर मुक्तकलाई पुनः परिभाषित गर्न प्रयास गरियो (नेपाल, २०७३ : ४६) । पछिल्लो परिभाषा अनुसार नेपाली मुक्तक अरबी भाषाको रुबाईबाट प्रभावित भएको देखिन्छ । चार पाउमा पूर्णता प्राप्त गर्ने मुक्तकमा पहिलो दोस्रो र चौथो पाउमा अन्त्यानुप्रास मिलेको हुन्छ, तेस्रो पाउमा मिल्नुपर्छ भन्ने छैन । पहिलो, दोस्रो र तेस्रो पाउ कविले व्यक्त गर्न खोजेको भावानुभूतिको आधारभूमिका रूपमा हुन्छन् । रुबाईको सारभूत तत्त्व चौथो पाउमा हुन्छ । त्यसैले चौथो पाउ सारपूर्ण र प्रभावपूर्ण हुनुपर्छ (थापा, २०७३ : २७६) । मुक्तक कविताकै लघुतम उपविधा भएकाले यहाँ अनामणिका तीन वटै मुक्तक सङ्ग्रहहरूको विश्लेषण कविता तत्त्वका आधारमा समष्टिगत रूपमा निम्नबमोजिम गरिएको छ ।

### ४.५.३ विषयवस्तु एवम् भाव विधान

रत्नप्रसाद अनामणि श्रेष्ठले आफ्ना मुक्तक सङ्ग्रहहरूमा विविध विषयको उठान गरेका छन् । उनका **फूलको माया लागेपछि** (२०४८), एवम् **मेरो गोरेटोमा तिम्रो छायाँ** (२०७३) एवम् **भो नखिच तस्बिर** (२०७४) मुक्तक सङ्ग्रहमा माया प्रीति, मिलन-विछोड लगायतका श्रृङ्गारिक भावाभिव्यक्तिको प्रयोग अधिक भेटिन्छ । यसबाहेक लेखक मनको अभिव्यक्ति, व्यङ्ग्य, विद्रोह, प्रजातन्त्र प्राप्तिको खुसीयाली, जीवनको पीडादायिक भोगाइ, देश छोड्दाको पीडा, अभाव, देशप्रेम, इमान्दारीपन, कृषिप्रतिको मोह, मानवीय दुष्प्रवृत्तिको विरोध, क्रान्तिको चाहना आदि जस्ता विषयवस्तुको अभिव्यक्ति पनि भेटिन्छ ।

श्रृङ्गारिक भावधारा एवम् प्रेममय विषयवस्तुमा रचिएका उनका मुक्तकहरूलाई उदाहरणका रूपमा यसरी देखाउन सकिन्छ :

नक्कली मुस्कान होइन सक्कली हाँसो चाहिन्छ
झुठो आश्वासन होइन अटल विश्वास चाहिन्छ ।
सच्चा, विश्वास र वास्तविक माया हो भने
प्रेमको प्रतीक स्वरूप एउटा नासो चाहिन्छ ।

(श्रेष्ठ, २०४८ : १३)

आज फेरि तिम्रो लागि एउटा फूल टिपी ल्याएँ
मेरो मनपर्ने आउने दिन बाटोभरी लिपी ल्याएँ
कसैले छेकेर छेकिन्न रे मायाका आफ्नै गोरेटोहरू
डराई-डराई घरबाट भागीलुकी छिपी ल्याएँ

(श्रेष्ठ, २०७३ : ३०)

तिम्रो घर छेउको चोकमा आउनु तिमी
हप्ता दिन नभेटेको झोकमा आउनु तिमी
सधैँभरि, हर समय भेटिरहन कहाँ सकिन्छ र
मनका कुराहरू खाली राखी भोकमा आउनु तिमी ।

(श्रेष्ठ, २०७४ : ३२)

त्यसैगरी जीवनको दुःखदायी स्थिति एवम् पीडादायी भोगाइप्रति अनामणि यस्तो धारणा अभिव्यक्त गर्दछन्-

सँगै साथीको नियतिले साह्रै तीरमा छ जिन्दगी
लक्ष्य भेट्टाउन हिँडे पनि के गर्नु  पिरमा छ जिन्दगी
भगवान् पनि कति निर्दयी हुँदा रहेछन् अचेल
आफ्नो दुःख आफैलाई थाहा छ भिरमा छ जिन्दगी

(श्रेष्ठ, २०७३ : ४४)

अनामणि आफ्ना मुक्तकहरूमा भ्रष्टाचार एवम् बेथितिप्रति व्यङ्ग्य एवम् विद्रोही भाव अभिव्यक्त गर्दै यस्तो धारणा राख्दछन् -

नेता बनौँ घाँटी खराब छ
व्यापारी बनौँ झुटो बोल्न स्वागत छ ।
आफूलाई खै के भनौँ ? के गरौँ ?
न नेतामा, न त व्यापारीमा तागत छ ।

(श्रेष्ठ, २०४८ : २६)

संसारका सारा खुसी लुटिन्छन् आजभोलि
सोझा-साझा जनताहरू कुटिन्छन् आजभोलि
दलाल, तस्कर, फटाहाहरूको यो युग हो भने
युवाको लक्ष्य आधा बाटोमै छुटिन्छन् आजभोलि

(श्रेष्ठ, २०७३ : ४५)

थुप्रै व्यवस्था आए गरिबको नाना फेरिएन
नुनिलो आँसुसँग खाएको त्यो खाना फेरिएन
नेता र ठूलालाई त सधैँ महापर्वहरू आए,
गरिब जनताको भलो हुने गाना फेरिएन ।

(श्रेष्ठ, २०७४ : २६)

त्यसैगरी प्रजातान्त्रिक एवम् क्रान्तिकारी भावको अभिव्यक्ति पनि गरेको देखिन्छ । उदाहरणका लागि -

पारिलो घाम चरक्क चर्केको छ
एउटा बिरुवा बल्ल तल्ल सप्रेको छ
सयौँ बलिदान, संघर्ष र एकताले
आज हाम्रो हितको दिन फर्केको छ

(श्रेष्ठ, २०४८ : २८)

यो देशमा प्रजातन्त्रको लहर आयो बुबा
कच्चा तेल बन्ने सबैको रहर आयो बुबा
हरे देशमा कसैले केही गर्ने वाला छैन,
सफा गर्न आँधी चाहिने ठहर आयो बुबा ।

(श्रेष्ठ, २०७४ : २८)

त्यस्तै अनामणिका मुक्तकहरूमा देशप्रेमको विषयवस्तु एवम् भाव पनि पाउन सकिन्छ । देश छोड्दाको पीडालाई पनि मार्मिक ढङ्गले अभिव्यक्त गर्नमा उनी सिपालु देखिन्छन् । त्यसैगरी उनका मुक्तकहरूमा देशको सीमा मिचिएको प्रति विरोधको स्वर पनि पाइन्छ । जस्तै :

आफ्नो सिधा पथ थियो कस्तो बाटो समाएछु
नेपाली मन नेपाली नै हुन्छ कस्तो माटो समाएछु
साल नाल गाडेको देशको माया बिर्सेर
नेपाली हुनुको गौरव छाडेर विदेश पाटो समाएछु

(श्रेष्ठ, २०७३ : २८)

नेपालको विकास गर्न अघि बढौँ हामी
निरन्तर प्रगतिको शिखरहरू चढौँ हामी
हाम्रो आरिस गर्दै कुनै वैरी आउँछ भने
जिउ ज्यानको बाजी राखी लडौँ हामी

(श्रेष्ठ, २०७३ : ४७)

तिमीले कोरेको नक्सा मेरो मनले मानेन,
राज्यले समयमा नै बार हाल्न जानेन,
सोभ्का नेपाली जनताका सरल विचारमा,
गु लाई धेरै बेर चलाई राख्न आवश्यक ठानेन ।

(श्रेष्ठ, २०७४ : ३६)

त्यसैगरी अनामणि लेखक एवम् कवि मनको अभिव्यक्ति यसरी गर्दछन् -

नलेखौँ मन मान्दैन
लेखौँ कलम चल्दैन
खोइ के भनौं, आज भोलि
यही चालाले काम बन्दैन

(श्रेष्ठ, २०७३ : २४)

त्यस्तै रत्नप्रसाद अनामणिका मुक्तकहरूमा कृषिप्रतिको मोह एवम् ग्रामीण विकासको चाहना पनि अभिव्यक्त भएको पाइन्छ । शहरतिर बसाई सर्ने लहरबाट आजित भई उनले अब गाउँ फर्केर कृषि कर्म गरेर देशलाई आत्मनिर्भर बनाउने भाव राख्दै यस्तो भन्दछन् -

गाउँ फर्क अभियान हामीले चाल्नुपर्छ
नालामा आलु खेती गर्न थाल्नुपर्छ
भिर, पाखा, पखेरामा अम्लिसो खेती गरी
सब्जिमा निर्भर बन्न गुन्द्रुक सिन्की गाल्नुपर्छ ।

(श्रेष्ठ, २०७३ : ४६)

## ४.५.४ संरचना

रत्नप्रसाद अनामणि श्रेष्ठको बाह्य संरचनाका हिसाबमा **फूलको माया लागेपछि** (२०४८) का केही मुक्तकहरूलाई छोडेर सबैजसो मुक्तकहरू चतुष्पदी रहेका छन् । यसका साथै यसै सङ्ग्रहका केही मुक्तकहरूमा पहिलो, दोस्रो र चौथो हरफको अन्त्यानुप्रास योजना पनि कहीँकतै नियोजितपूर्ण भएको देखिँदैन । उदाहरणका लागि -

औँशीको रातमा चन्द्रमा खोज्छु
तर म पाउँदिन
तिम्रो नक्कले जीवनसङ्ग दाँज्छु
तर म भ्याउँदिन

(श्रेष्ठ, २०४८ : १२)

प्रस्तुत मुक्तक २ हरफको मुक्तकलाई ४ हरफको बनाइएको देखिन्छ । यसमा पहिलो, दोस्रो एवम् चौथो हरफमा क्रमसँगै अन्त्यानुप्रासको संयोजन भएको पाईंदैन ।

संरचनाका दृष्टिले अनामणिको पहिलो मुक्तक सङ्ग्रह **फूलको माया लागेपछि** (२०४८) केही मात्रामा आलोचकीय रहँदा रहँदै पनि सफल रहेको देखिन्छ । प्रायः मुक्तकहरूमा पहिलो, दोस्रो र चौथो हरफको अन्त्यानुप्रास योजना मिलेको देखिन्छ । यसका साथै अधिकांश मुक्तकहरूमा पहिलो, दोस्रो र तेस्रो हरफमा विषवस्तु र भावको उठान गरिएको छ भने त्यसको परिणाम र निष्कर्ष चौथो हरफमा रहेको पाइन्छ । उदाहरणका लागि-

मेरो मुटुको कति माया तिमी आफै जाँची हेर
मेरो नयन अगाडि खुसीले एक पटक नाची हेर
मेरो सबै बानी, व्यवहार थाहा पाउने छौ
यो मूर्खसङ्ग सधैंको लागि जीवन टाँसी हेर ।
(श्रेष्ठ, २०४८ : १४)

त्यसैगरी उनको दोस्रो एवम् तेस्रो मुक्तक सङ्ग्रह **मेरो गोरेटोमा तिम्रो छायाँ** (२०७३) र **भो नखिच तस्बिर** (२०७४) संरचनात्मक दृष्टिले सफल मुक्तक सङ्ग्रहका रूपमा देखापरेका छन् । यी दुबै सङ्ग्रहका सबै मुक्तकहरूमा पहिलो, दोस्रो र चौथो हरफको अन्त्यानुप्रास योजना मिलेको पाइन्छ भने तेस्रो हरफमा चाहिँ विषमता पाइन्छ । यसका साथै हरेक मुक्तकहरूमा पहिलो, दोस्रो र तेस्रो हरफमा विषयवस्तु र भावको उठान गरिएको छ भने त्यसको परिणाम र निष्कर्ष चौथो हरफमा रहेको देखिन्छ । उदाहरणका रूपमा -

हिजो आज अरु नै कामले हराएँ भन्छौ तिमी
एक्लो जिन्दगीमा एक्लै कराएँ भन्छौ तिमी
म त केही कुरा बुझ्न सकेको छैन आज
मनको सिंहासनमा धपक्क सजाएँ भन्छौ तिमी
(श्रेष्ठ, २०७३ : २४)

म डराउँथे साँच्चिकै तिमी आँखा तर्दा खेरी
फूर्तिलो शरीर पनि खुम्चिन्थे छायाँ पर्दा खेरी
कहिलेकाहीँ त्यो समय उल्टो बग्दछ भन्छन्,
जीवन रमाइलो लाग्न थाल्यो माया भर्दा खेरी (श्रेष्ठ, २०७४ : १८)

आन्तरिक संरचनालाई हेर्दा अनामणिका मुक्तकहरूमा छन्दको प्रयोग नभए तापनि अनुप्रास योजनाले गर्दा मुक्तकहरू लयात्मक बनेका छन् । विषयवस्तु वा भावको प्रस्तुतीकरणका लागि उनले आवश्यकता अनुसार प्रथम एवम् द्वितीय पुरुषको अधिक प्रयोग गरेको देखिन्छ । विभिन्न विम्ब, प्रतीक एवम् अलङ्कारको प्रयोगले उनका मुक्तकहरू सौन्दर्यपूर्ण बनेका देखिन्छन् । अभिधा, लक्षणा एवम् व्यञ्जना शैलीको प्रयोग पनि उनले उत्कृष्ट तरिकाले गरेको देखिन्छ ।

### ४.५.५ लयविधान

कवितालाई अन्य विधाबाट अलग राख्ने परिचयात्मक तत्त्व लयविधान हो । मुक्तक कविताकै लघुतम रूप भएकाले लय मुक्तकको पनि अनिवार्य एवम् प्रमुख तत्त्व हो । लयले मुक्तकमा मिठास प्रदान गर्ने गर्दछ । रत्नप्रसाद अनामणि श्रेष्ठका मुक्तकहरू छन्दोबद्ध छैनन् । यद्यपि अनुप्रास योजनाले गर्दा लयात्मक बनेका छन् । उनका मुक्तकहरू मुक्त छन्दमा लेखिएका छन् । अन्तरअनुप्रास एवम् अन्त्यानुप्रासको सफल संयोजन उनका मुक्तकमा पाइन्छ । तथापि उनको पहिलो मुक्तक सङ्ग्रह **फूलको माया लागेपछि**मा रहेका केही मुक्तकहरूमा भने चतुष्पदी ढाँचामा अन्त्यानुप्रासको संयोजन राम्रोसँग भएको देखिँदैन । जस्तै  उदाहरणका लागि -

पानी बिनाको नदी के नदी
मूर्ति बिनाको मन्दिरको मन्दिर
रुख बिनाको जङ्गल के जङ्गल
तिमी बिनाको म मान्छे के मान्छे ?

(श्रेष्ठ, २०४८ : २२)

प्रस्तुत मुक्तकमा पहिलो, दोस्रो र चौथोमा क्रमशः अन्त्यानुप्रासको संयोजन पाइँदैन । त्यसकारण यसमा मुक्तकमा हुनुपर्ने लयात्मकताको अभाव देखिन्छ ।

केही मुक्तकहरूलाई छोडेर उनका पहिलो, दोस्रो र तेस्रो तीन वटै मुक्तक सङ्ग्रहमा भएका अधिकांश मुक्तकहरू अनुप्रास संयोजनले लयात्मक रहेका देखिन्छन् । सरल भाषाशैलीमा चोटिलो प्रहार गर्न उनी सक्षम देखिन्छन् । उदाहरणका रूपमा यसरी देखाउन सकिन्छ -

हजारौं प्रतिविम्बहरू तिम्रो मुहारमा लोभिए
थुप्रै कलमहरू तिमीलाई प्रेम पत्र लेख्न चोबिए ।
समयको जबानीमा फुलेका फूलहरू
मेरो हृदय उजाड पारेर सब खोसिए ।

(श्रेष्ठ, २०४८ : १७)

पार्वती खोज्दै हिँड्ने शिवजीको हाल भयो
विष भांग धतुरो खाई चाल भयो
हरक्षण हर समय भेटिरहने मान्छे आज
तिमीले भेट्न नचाहेको वर्षौं साल भयो

(श्रेष्ठ, २०७३ : ४२)

धेरै दिनपछि आज खुलेर कताबाट ।
त्यो नजर लगाउँदै डुलेर कताबाट,
दुनियाँको वास्ता गर्दिन भन्थ्यौ हिजो आज,
तिम्रो हँसिलो मुहार फुलेर कताबाट ॥

(श्रेष्ठ, २०७४ : ४२)

## ४.५.६ भाषाशैली

रत्नप्रसाद अनामणि श्रेष्ठको मुक्तक सङ्ग्रहहरूमा सरल, सहज एवम् आकर्षक भाषाशैलीको प्रयोग पाइन्छ । उनका मुक्तकहरूमा संस्कृतका तत्सम शब्दहरू यौवन, हृदय, जल, पत्र, दरिद्र, स्नेह, प्रिय, प्रणय, दीर्घायु, अनन्त, वर्षा, दर्शन, संस्कृति, विचित्र, प्रहर, शिर, संसार, पृथ्वी जस्ता शब्दहरूको प्रयोग भएको पाइन्छ । साथै झर्रा नेपाली शब्दहरू पँधेरो, गोरेटो, गुन्द्रुक, पखेरो, भक्कानो, ठेस, सुसेल्दै आदि एवम् पसल, गजल, बोतल, जवान, बजार, दिल, खुन, आखिर, नगद, जमाना, फोटो, दुनियाँ, असल, हिसाब, करेन्ट, फिप्टी, वर्थ डे, पोष्ट, च्याटिङ्ग, नेट, लेट जस्ता आगन्तुक शब्दहरूको प्रयोग पनि व्यापक रूपमा भएको पाइन्छ ।

उनका मुक्तकमा प्रयोग भएको भाषाशैलीमा विविधता पाइन्छ । उनले कतै सरल, सहज, सुन्दर एवम् सुकोमल भाषाको प्रयोग गरेको देखिन्छ । उदाहरणका लागि-

श्वास प्रश्वास चलिरहने जीवनको एउटा रीत हो
दया, करुणा, आदर्श र सहानुभूति मेरो प्रीत हो
हरेक घुम्ती, चौतारो, पँधेरो र कन्दराहरूमा
भेटेको बेला तिम्रो मीठो मुस्कान मेरो जीत हो

(श्रेष्ठ, २०४८ : ११)

आज फेरि तिम्रो लागि एउटा फूल टिपी ल्याएँ
मेरो मनपर्ने आउने दिन बाटोभरी लिपी ल्याएँ
कसैले छेकेर छेकिन्न रे मायाका आफ्नै गोरेटोहरू
डराई-डराई घरबाट भागी लुकी छिपी ल्याएँ

(श्रेष्ठ, २०७३ : ३०)

केशहरू सबै फुल्न थाल्यो सम्झना उस्तै छ
को कहाँ पुगे को कहाँ रहे झरना उस्तै छ ।
वर्षौं भयो हामी दुई नभेटेको यो संसारमा,
मन मस्तिष्कमा हिजो जस्तै आज पनि वेदना उस्तै छ ।

(श्रेष्ठ, २०७४ : ४७)

त्यस्तै श्रेष्ठका मुक्तकमा कतै व्यञ्जनात्मक एवम् प्रतीकात्मक भाषाको पनि प्रयोग भएको पाइन्छ । जस्तै :-

पारिलो घाम चरक्क चर्केको छ
एउटा विरुवा बल्ल तल्ल सप्रेको छ ।
सयौं वलिदान, संघर्ष र एकताले
आज हाम्रो हितको दिन फर्केको छ ।

(श्रेष्ठ, २०४८ : २८)

मायाको तिर्खा मेट्ने एक्कासी इनार भेटियो
प्रेमको इतिहासले बनाएको राम्रो मिनार भेटियो
जिन्दगी नदी जस्तै पवित्र भई बग्नु पर्छ भन्छन्
अटुट सम्बन्ध सधैँ रहने त्यो किनार भेटियो ।

(श्रेष्ठ, २०७३ : ४०)

यो देशमा प्रजातन्त्रको लहर आयो बुबा
कच्चा तेल बन्ने सबैको रहर आयो बुबा
हरे देशमा कसैले केही गर्ने वाला छैन,
सफा गर्न आँधी चाहिने ठहर आयो बुबा ।

(श्रेष्ठ, २०७४ : २८)

त्यसैगरी अनामणिका मुक्तकमा आलङ्कारिक भाषाको पनि प्रयोग भएको पाइन्छ । जस्तै :

हिजो आज मन यस्तै यस्तै हुन्छ
पानी बिनाको माछो जस्तै हुन्छ ।
कुनै निश्चित समयसम्म पर्खेको
असफल र बेवारिसे मान्छे जस्तै हुन्छ

(श्रेष्ठ, २०४८ : २०)

अनामणिका मुक्तकहरूमा बोलीचालीको नजिक-नजिक रहेको शिष्ट नेपाली भाषाको सरल, स्वभाविक प्रयोग नै बढी मात्रामा भएको देखिन्छ । उनका मुक्तकमा आत्मपरक, प्रश्नात्मक तथा वर्णनात्मक शैलीको प्रयोग भएको पाइन्छ । अभिधा, लक्षणा, व्यञ्जना शक्ति एवम् विम्ब, प्रतीक, अलङ्कारको प्रयोगले उनका मुक्तकहरू सुन्दर देखिन्छन् ।

### ४.५.७ कथनपद्धति

रत्नप्रसाद अनामणि श्रेष्ठका तीन वटै मुक्तक सङ्ग्रहमा सबै भन्दा बढी द्वितीय पुरुष दृष्टिविन्दुको प्रयोग भएको पाइन्छ । उदाहरणका लागि -

छाप्रोले काम दिने भए दरबार किन चाहियो
सपनाले पुग्ने भए बिपना किन चाहियो ?
तिम्रो प्रेम पत्र, मीठो मुस्कान र क्षणिक भेटले
पुग्ने भए तिम्रो जीवन मलाई किन चाहियो ?

(श्रेष्ठ, २०४८ : ३)

खोजिरहेछु तिम्रो सुन्दर तस्बिर मनको पसलभित्र

जति मिलाए मिलाउन नसक्ने पानीको कलभित्र

खोइ के भो ? के भो ? हिजो आज यो संसारमा

तिम्रो नाम लेखिएको छ आज मेरो गजलभित्र (श्रेष्ठ, २०७३ : ११)

आज किन किन दुनियाँमा तिम्रै नाउँ प्यारो

दुखेता पनि तिमीले लगाएको घाउ प्यारो

तिमी अर्कैको भैसक्यौ अफै त्यो माया रहेछ,

छलेर भए पनि भेट्न आउने दाउ प्यारो (श्रेष्ठ, २०७४ : २१)

अनामणिका मुक्तक सङ्ग्रहमा सबैभन्दा बढी द्वितीय पुरुषीय कथन ढाँचाको प्रयोग पाइए तापनि कतै कतै प्रथम एवम् तृतीय पुरुषीय कथनढाँचाको पनि प्रयोग भएको पाइन्छ । त्यसैगरी उनले आफ्नो भाव अभिव्यक्त गर्नका लागि आत्मपरक, प्रश्नात्मक तथा वर्णनात्मक कथनशैलीको प्रयोग गरेको देखिन्छ । उदाहरणका लागि -

**आत्मपरक**

जबानीमा मात्तिएको मान्छे हुँ म

बुढेसकालमा आत्तिएको मान्छे हुँ म

अनगिन्ती अनगिन्ती दुःखहरूले

बोतलहरू रित्याएको मान्छे हुँ म

(श्रेष्ठ, २०४८ : १८)

अनेक बहाना गरेर पिउनुपर्छ

टुक्रा जिन्दगी ठाउँ-ठाउँमा सिउनुपर्छ

समय हो र त यहाँ चलखेल धेरै

अनेक सम्झौता गरेर जिउनुपर्छ ।

(श्रेष्ठ, २०७४ : २२)

जिन्दगीमा आज एक्कासी डर लाग्यो
त्यो हात के दिएको थिएँ भर लाग्यो
एकै रथका दुई पाङ्ग्रा बन्यो रे,
मेरो पछि पछि उनैको थर लाग्यो ।

(श्रेष्ठ, २०७४ : १९)

**प्रश्नात्मक**

छाप्रोले काम दिने भए दरबार किन चाहियो
सपनाले पुग्ने भए विपना किन चाहियो ?
तिम्रो प्रेम पत्र, मीठो मुस्कान र क्षणिक भेटले
पुग्ने भए तिम्रो जीवन मलाई किन चाहियो ?

(श्रेष्ठ, २०४८ : ३)

गाँजा खाने शिवजीलाई दुध चढाएर हुने के ?
मासु खाने मान्छेलाई तुलसीमाला लगाएर हुने के ?
आफ्नो संस्कृतिलाई अलि अलि परिमार्जित गरौँ
धन प्राप्त हुन्छ भनी गाईलाई पूजा गराएर हुने के ?

(श्रेष्ठ, २०७३ : २१)

ठेस लाग्ने ढङ्गा पनि तिम्रो पक्ष लिन्छन् किन
उनी मायाको खेलाडी रे सबैले दक्ष भन्छन् किन ?
भो मलाई तिम्रो हरचिज हरक्षणबाट हटाऊ,
म फस्दिन भन्दा भन्दै तिम्रै कक्ष थुन्छन् किन ?

(श्रेष्ठ, २०७४ : ३५)

**वर्णनात्मक**

नक्कली मुस्कान होइन सक्कली हाँसो चाहिन्छ ।
झुठो आश्वासन होइन अटल विश्वास चाहिन्छ ।
सच्चा, विश्वास र वास्तविक माया हो भने
प्रेमको प्रतीक स्वरूप एउटा नासो चाहिन्छ

(श्रेष्ठ, २०४८ : १३)

संसारका सारा खुसी लुटिन्छन् आजभोलि
सोझासोझा जनताहरू कुटिन्छन् आजभोलि
दलाल तस्कर फटाहाहरूको यो युग हो भने
युवाको लक्ष्य आधा बाटोमै छुटिन्छन् आजभोलि

(श्रेष्ठ, २०७३ : ४५)

थुप्रै व्यवस्था आए गरिबको नाना फेरिएन
नुनिलो आँसुसँग खाएको त्यो खाना फेरिएन
नेता र ठूलालाई त सधैँ महापर्वहरू आए,
गरिब जनताको भलो हुने गाना फेरिएन ।

(श्रेष्ठ, २०७४ : २६)

## ४.५.८ विम्ब, प्रतीक र अलङ्कार विधान

रत्नप्रसाद अनामणि श्रेष्ठको मुक्तक सङ्ग्रहहरूमा विभिन्न विम्ब, प्रतीक एवम् अलङ्कारको प्रयोग भएको पाइन्छ ।

अनामणिले आफ्ना मुक्तकहरूमा सामाजिक, राजनीतिक, धार्मिक, प्राकृतिक, विम्बको प्रयोग गरेको पाइन्छ । उदाहरणका लागि प्राकृतिक विम्बको प्रयोग भएको मुक्तकलाई यसरी देखाउन सकिन्छ -

माया म गरिरहेछु तिम्रो पटक पटकको वचनले मारे पनि
कपटी संसारमा अब धेरै बाँच्दिन जीवनले हारे पनि
भो कसैले पनि यो अभागी बिरुवामा पानी नहाल
सुकेको पात पतिङ्गर न हो सजिलै पवनले झारे पनि

(श्रेष्ठ, २०७३ : १४)

त्यसैगरी अनामणिले आफ्ना मुक्तकहरूमा विभिन्न प्रतीकहरूको पनि प्रयोग गरेको पाइन्छ । उनले छाप्रो, दरबार, डुङ्गा, चश्मा, कलम, फूल, काँडा, माछो, घाम, रित्तो भाँडो, पत्थर, जुन, चुलेसी, गाई, गमला, स्याल, इनार, किनार, शिवजी, पार्वती, कच्चा तेल, आँधी, गु, आदि जस्ता शब्दहरू प्रतीकका रूपमा प्रयोग गरेका छन् । उदाहरणका लागि -

पारिलो घाम चरक्क चर्केको छ ।
एउटा बिरुवा बल्ल तल्ल सप्रेको छ
सयौँ बलिदान, संघर्ष र एकताले
आज हाम्रो हितको दिन फर्केको छ

(श्रेष्ठ, २०४८ : २८)

माथिको मुक्तकमा पारिलो घाम प्रजातन्त्रको एवम् एउटा बिरुवा हाम्रो देशको प्रतीकका रूपमा आएको छ । त्यस्तै उनले काँडालाई अवरोध एवम् नकारात्मक तथा फूललाई सकारात्मक एवम् मायाको प्रतीक मानेर यस्तो भाव अभिव्यक्त गरेको पाइन्छ :

थोरै फूल्ने फूलको बोट भित्र धेरै रहेछ काँडाहरू
जीवनको यात्रा गर्दा उकाली ओराली रहेछ डाँडाहरू
फलको आशा गरी चार हातपाउ जोतिरहेँ
कडा परिश्रम गरे तापनि रित्तो रहेछ भाँडाहरू

(श्रेष्ठ, २०७३ : १३)

त्यस्तै आँधीलाई क्रान्तिको प्रतीकका रूपमा उतारेर अनामणि यस्तो भाव अभिव्यक्त गर्दछन् :

यो देशमा प्रजातन्त्रको लहर आयो बुबा
कच्चा तेल बन्ने सबैको रहर आयो बुबा
हरे, देशमा कसैले केही गर्ने वाला छैन,
सफा गर्न आँधी चाहिने ठहर आयो बुबा

(श्रेष्ठ, २०७४ : २८)

त्यसैगरी अनामणिले आफ्ना तीन वटै मुक्तक सङ्ग्रहका मुक्तकहरूमा विभिन्न शब्दालङ्कार तथा अर्थालङ्कारको प्रयोग गरेको पाइन्छ । उनका मुक्तकहरूमा अनुप्रास, रूपक, उपमा, दृष्टान्त, अर्थान्तरन्यास आदि अलङ्कारहरूको प्रयोग भएको देखिन्छ । अनुप्रास अन्तर्गत अन्त्यानुप्रास उनका सबैजसो मुक्तकहरूमा एवम् अन्तरअनुप्रास केही मुक्तकहरूमा प्रयोग भएको देखिन्छ । अनुप्रासको प्रयोगले उनका मुक्तकहरू लयात्मक एवम् मधुर बनेका छन् भने अर्थालङ्कारको प्रयोगले मुक्तकहरू चमत्कारपूर्ण एवम् व्यञ्जनायुक्त

बनेका देखिन्छन् । उनका मुक्तकमा प्रयोग भएको छेकानुप्रास एवम् अन्त्यानुप्रासको नमुनालाई क्रमशः यसरी देखाउन सकिन्छ -

श्वास, प्रश्वास चलिरहने जीवनको एउटा रीत हो
दया, करुणा, आदर्श र सहानुभूति मेरो प्रीत हो
हरेक, घुम्ती, चौतारो, पँधेरो र कन्दराहरूमा
भेटेको बेला तिम्रो मीठो मुस्कान मेरो जीत हो (श्रेष्ठ, २०४८ : ११)

माया म गरिरहेछु तिम्रो पटक पटकको वचनले मारे पनि
कपटी संसारमा अव धेरै बाँच्दिन जीवनले हारे पनि
भो कसैले पनि यो अभागी बिरुवामा पानी नहाल
सुकेको पात पतिङ्गर न हो सजिलै पवनले झारे पनि

(श्रेष्ठ, २०७३ : १४)

त्यसैगरी वृत्यनुप्रास पनि अनामणिले सफल तरिकाले प्रयोग गरेको देखिन्छ । उदाहरणका लागि -

कहिले लाग्छ जिन्दगी कल्पनाको सागर हो
कहिले लाग्छ जिन्दगी वर्षाको भेल हो ।
कहिले लाग्छ जिन्दगी टुटेको दिल हो
कहिले लाग्छ जिन्दगी प्रियसीको मेल हो

(श्रेष्ठ, २०४८ : १६)

अनामणिका मुक्तकहरूमा उपमा अलङ्कारको प्रयोगले अर्थमा चमत्कार ल्याएको देख्न सकिन्छ। उदाहरणका लागि -

हिजो आज मन यस्तै-यस्तै हुन्छ
पानी विनाको माछो जस्तै हुन्छ ।
कुनै निश्चित समयसम्म पर्खेको
असफल र बेवारिसे मान्छे जस्तै हुन्छ

(श्रेष्ठ, २०४८ : २०)

त्यस्तै रूपक अलङ्कारको प्रयोगले पनि उनका मुक्तक आकर्षक देखिन्छन् । जस्तै -

खडेरीमा सिचाईं गर्ने कुलो जिन्दगी

सबैलाई पकाई ख्वाउने चुलो जिन्दगी

एकदिन त सबैले छोडेर जानै पर्छ,

यही पृथ्वीको मसिनो धुलो जिन्दगी

(श्रेष्ठ, २०७४ : ४५)

त्यसैगरी अनामणिले आफ्ना मुक्तक सङ्ग्रहमा लोकोक्ति अलङ्कारको पनि प्रयोग गरेको देखिन्छ । जस्तै -

जिन्दगीमा आज एक्कासी डर लाग्यो,

त्यो हात के दिएको थिएँ भर लाग्यो

एकै रथका दुई पाङ्ग्रा बन्यो रे,

मेरो पछि पछि उनैको थर लाग्यो

(श्रेष्ठ, २०७४ : १९)

अनामणिले आफ्ना मुक्तकहरूमा दृष्टान्त अलङ्कारको पनि प्रयोग गरेको देखिन्छ । जस्तै -

फूल कसरी फूल्छ मायाको गमला फुटेपछि

के अर्थ भयो मेरो जबानी सबै लुटेपछि

थाहा हुन्न यो पापी संसारमा को कस्तो ?

आँखा अगाडि तिम्रो वरपर सबै जुटेपछि

(श्रेष्ठ, २०७३ : २६)

त्यसैगरी अनामणिका मुक्तकहरूमा अर्थान्तरन्यास अलङ्कारको पनि सफल प्रयोग भएको देखिन्छ । उदाहरणका लागि -

नक्कली मुस्कान होइन सक्कली हाँसो चाहिन्छ

झुठो आश्वासन होइन अटल विश्वास चाहिन्छ ।

सच्चा, विश्वास र वास्तविक माया हो भने

प्रेमको प्रतीक स्वरूप एउटा नासो चाहिन्छ

(श्रेष्ठ, २०४८ : १३)

नेपालको विकास गर्न अघि बढौँ हामी
निरन्तर प्रगतिको शिखरहरू चढौँ हामी
हाम्रो आरिस गर्दै कुनै वैरी आउँछ भने
जिउ ज्यानको वाजी राखी लडौँ हामी

(श्रेष्ठ, २०७३ : ४७)

भो नखिच तस्बिर धेरै भो,
यो खिचेर के गर्नु बेरै भो
हाम्रो फोटो प्रमाण होइन
जे भए पनि तिमी त मेरै भो ॥

(श्रेष्ठ, २०७४ : १६)

## ४.५.९ निष्कर्ष

रत्नप्रसाद अनामणि श्रेष्ठका मुक्तक सङ्ग्रहहरू **फूलको माया लागेपछि** (२०४८), **मेरो गोरेटोमा तिम्रो छायाँ** (२०७३) एवम् **भो नखिच तस्बिर** (२०७४) को अध्ययन पश्चात् मुक्तक लेखनीमा उनको मूल प्रवृत्ति शृङ्गारिकता रहेको देख्न सकिन्छ । यद्यपि उनका मुक्तकहरूमा जीवनको पीडादायिक भोगाइ, देश छोड्दाको पीडा, अभाव, देशप्रेम, इमान्दारीपन, कृषिप्रतिको मोह, क्रान्ति प्रेम, मानवीय दुष्प्रवृत्तिको विरोध आदि जस्ता विषयहरूको प्रस्तुति पनि पाइन्छ । मुक्त लयमा लेखिएका उनका सबै मुक्तकहरूमा गहन भाव पाइन्छ । शब्दालङ्कार तथा अर्थालङ्कारको सफल प्रयोगले उनका मुक्तकहरू चमत्कारपूर्ण बनेका देखिन्छन् । अनुप्रासीय संयोजनले गर्दा उनका मुक्तकहरू लयात्मक देखिन्छन् । सरल भाषाशैलीमा लेखिएका उनका मुक्तकहरूमा विभिन्न विम्ब एवम् प्रतीकहरूको प्रयोग भएको पाइन्छ ।

आकारका दृष्टिले साना रहेका उनका तीन मुक्तक सङ्ग्रहहरू मध्ये पहिलो मुक्तक सङ्ग्रहमा ३२ वटा, दोस्रो मुक्तक सङ्ग्रहमा ४० वटा एवम् तेस्रो मुक्तक सङ्ग्रहमा ३७ वटा मुक्तकहरू रहेका छन् । उनले आफूले सञ्चालन गरेको अनामणि प्रकाशन नालाबाट २०४८ सालमा पहिलो मुक्तक सङ्ग्रह **फूलको माया लागेपछि** प्रकाशन गरेका थिए भने दोस्रो र तेस्रो मुक्तक सङ्ग्रह **मेरो गोरेटोमा तिम्रो छायाँ** र **भो नखिच तस्बिर** भने गौरी पब्लिक रिलेसन एन पब्लिकेशन काठमाडौँबाट क्रमशः २०७३ एवम् २०७४ सालमा प्रकाशन गरेको

देखिन्छ । तीन मुक्तक सङ्ग्रह प्रकाशित गरेर उनले नेपाली साहित्यको मुक्तक फाँटमा उल्लेख्य योगदान पुऱ्याएको देखिन्छ ।

## ४.६ रत्नप्रसाद अनामणि श्रेष्ठका गजल सङ्ग्रहहरूको अध्ययन

### ४.६.१ विषयप्रवेश

रत्नप्रसाद अनामणि श्रेष्ठ गजलकार पनि हुन् । उनको गजल यात्रा नेपाली साहित्यमा निकै लामो भैसकेको छ । वि.सं. २०४९ सालको कार्त्तिकमा प्रकाशित 'जनमत' मासिक पत्रिकाको वर्ष ९, अङ्क १० मा 'आँसुहरू पिइरहेँ, बाहिर सधैँ हाँसे पनि' शीर्षकको गजल प्रकाशित गरेर नेपाली साहित्यको गजल सागरमा होमिएका अनामणिको हालसम्म आइपुग्दा '**दाउहरू फरक फरक**' (२०६२) र '**ख्यालख्यालमै सल्क्यो जिन्दगी'** (२०७३) गरी दुईवटा गजल सङ्ग्रहहरू प्रकाशित भैसकेका छन् । यसका साथै विभिन्न पत्र पत्रिकाहरूमा बेला-बेलामा आफ्ना गजलहरू पनि प्रकाशित गर्दै आएको पाइन्छ । उनको पहिलो गजल सङ्ग्रहमा प्रेमभावयुक्त गजलका अतिरिक्त व्यङ्ग्य, विद्रोह, अभाव, असन्तुष्टि, निराशा जस्ता विषयहरू जोडदार रूपमा प्रस्तुत गरेको देखिन्छ भने दोस्रो गजल सङ्ग्रहमा शृङ्गारिकताकै सेरोफेरोमा रहेर समाजका यावत् विषयवस्तुहरूलाई केलाउने जमर्को गरिएको देखिन्छ ।

### ४.६.२ गजलको सैद्धान्तिक परिचय

'गजल' कुन स्रोतबाट आएको शब्द हो भन्नेबारे विद्वान्हरूमा मतमतान्तर पाइन्छ । एकथरी विद्वान्ले 'गजल' लाई अरबी भाषाबाट आएको शब्द मानेका छन् भने अर्काथरीले फारसी स्रोतबाट निष्पन्न शब्दका रूपमा यसलाई चिनाएका छन् । अत्यन्त कम समीक्षकले यस शब्दको सम्बन्ध संस्कृतसँग जोड्ने प्रयास गरेको पनि पाइन्छ (बराल, २०६८ : ३) । मुख्य रूपमा भन्नुपर्दा 'गजल' अरबेली भाषाको संयुक्त शब्द हो । गजल शब्द तीन ओटा शब्दहरू संयुक्त भएर बनेको हो । 'ग' को अर्थ बोली अथवा वाणी हो । अर्को शब्दमा वार्तालाप वा कुराकानी हो । 'ज' को अर्थ नारी हो र 'अल' को अर्थ सँग वा साथ हो । यसरी गजल शब्दले नारीका साथ हुने कुराकानीलाई बुझाउँछ । पछि यो प्रेमिकासँग गरिने प्रणय भावना र याचनाको अभिव्यक्तिका रूपमा विकसित भयो । आधुनिक गजलमा क्रमशः प्रणय भावनाको मात्र नभएर युगबोधको साथै समसामयिक सञ्चेतना र संवेदनाका भाव पनि समावेश भएको पाइन्छ । गजल एक प्रकारले गीतको अर्को रूप हो । गजलमा भाव र

अनुभूति विशेषको कलात्मक र लयात्मक अभिव्यक्ति हुन्छ (थापा, २०७३ : ५१) । गजलमा प्रयोग हुने सेर, बहर, मतला, मकता काफिया तथा रदिफ बाह्य बनौट अन्तर्गत पर्ने कुराहरू हुन् । भाव, कल्पना, लय, अलङ्कार आदिका अभावमा सेर, मकता, मतला, काफिया आदि भएर मात्र गजलले आफ्नो साहित्यिक अस्तित्व प्राप्त गर्न सक्दैन । यस अर्थमा कविता वा गीतिकविता अन्तर्गत पर्ने तत्त्वहरूलाई नै गजलका पनि तत्त्व मान्नु उपयुक्त हुन आउँछ (बराल, २०६८ : ३) । संरचनाद्वारा कुनै रचनाले गजलको बाह्य रूप धारण गरे पनि काव्यका लागि आवश्यक मानिने तत्त्वहरूका अभावमा कुनै पनि रचना गजल बन्न सक्दैन । यसैले यहाँ गजलका तत्त्वका रूपमा भाव तथा विषयवस्तु, कल्पना, सङ्गीत, विम्ब तथा प्रतीक अनि भाषाको विवेचना गरिएको छ (बराल, २०६८ : ४८) । यसका साथै संरचना गजलको अत्यावश्यक तत्त्व एवम् अलङ्कार गजलको आभूषण भएकाले यिनलाई पनि गजलकै तत्त्व अन्तर्गत समावेश गरी चर्चा गर्न सकिन्छ ।

### ४.६.३ विषयवस्तु एवम् भाव

विषयवस्तु एवम् भाव गजलको महत्त्वपूर्ण तत्त्व हो । प्रेमको विषयबाट प्रारम्भ भएको गजलको लेखनले अहिले विषय प्रयोगका रूपमा व्यापकता पाएको छ र संसारमा अहिले यस्तो कुनै विषय छैन, जसलाई गजलमा प्रयोग गर्न नसकियोस् । गजलमा विषय प्रयोगका सन्दर्भमा एउटा अनौठो विशेषता पनि छ । यसका भिन्न भिन्न सेरहरूमा भिन्न भिन्न विषय प्रस्तुत गर्न पाइने छुट पनि भएकाले एउटा गजलमा जति सेर छन् त्यति विषय प्रयोग हुन सक्छन् (बराल, २०६८ : ६६) । विषयवस्तु एवम् भावले नै गजललाई मिठासप्रदान गर्दछ, यसका साथै गजल आकर्षक पनि बन्दछ ।

### ४.६.४ कल्पना

गजलको लागि कल्पना अनिवार्य तत्त्व अन्तर्गत पर्दछ । कल्पना तत्सम शब्द हो । यसको सामान्य अर्थ 'रूप दिनु, बनाउनु, विचार, उत्प्रेक्षा, प्रतिमा' भन्ने हुन्छ । कल्पनाको अर्थ स्मृतिपटमा अनौठो नयाँ कुरा, वस्तुको प्रतिमा, रूपरेखा बनाएर काव्य, चित्र, प्रतिमा आदिका रूपमा उतार्ने वा मूर्त रूप दिने क्रियात्मक मानसिक शक्ति भन्ने पनि हुन्छ । कल्पनालाई अरबी भाषामा तखय्युल भनिन्छ । अरबी भाषाको पुलिङ्गि 'तखय्युल' शब्दले सोच्नु, विचार गर्नु, कल्पना गर्नु, प्रदान गर्नु आदि अर्थ बुझाउने गर्छ (बराल, २०६८ :

६९) । तसर्थ कल्पना बिना गजलको रचना हुन सक्दैन । कल्पनाले भावलाई खुलस्तसँग बाहिर प्रकट गर्न सहयोग गर्दछ ।

### ४.६.५ सङ्गीत एवम् लयविधान

सङ्गीत एवम् लय गजलको एउटा अनिवार्य तत्त्व अन्तर्गत पर्दछ । सङ्गीतको अभावमा गजलको कल्पना गर्न सकिँदैन र यहाँ सङ्गीतको तात्पर्य भाषाद्वारा नै अभिव्यक्त हुने छन्द, अनुप्रास तथा वर्ण, अक्षर अनि शब्द तथा पदावलीकै आवृत्तिसँग पनि छ भने गजलकार स्वयम् तथा गायकले गाउने सन्दर्भमा मौखिक सङ्गीत अनि वाद्यबादनसँग पनि छ । आनन्ददायक ध्वनिको ढाँचा सिर्जना गर्न तथा अर्थलाई अझ प्रभावकारी बनाउनका लागि गजलमा सङ्गीत प्रयोग गर्ने गरिन्छ (बराल, २०६८ : ७३) । यस अर्थमा पनि सङ्गीत एवम् लयलाई गजलको महत्त्वपूर्ण तत्त्व मान्न सकिन्छ । विभिन्न लय, छन्द एवम् बहरमा लेखिएका गजल साङ्गीतिक एवम् लयात्मक हुन्छन् ।

### ४.६.६ संरचना

संरचना गजलको महत्त्वपूर्ण तत्त्व हो । गजल बन्नका निमित्त एउटा निश्चित संरचनाको आवश्यकता पर्दछ । संरचना सम्बन्धी गजलमा कठोर नियमको व्यवस्था रहि आएको पाइन्छ । गजललाई कविताका अन्य उपविधाबाट अलग्याउनको लागि संरचनाले महत्त्वपूर्ण भूमिका निर्वाह गर्दछ । गजलको पङ्क्तिलाई मिसरा भनिन्छ । त्यस्तै दुई पङ्क्तिको एउटा पाउ हुन्छ । यस्तो पाउलाई सेर भनिन्छ । गजलमा कुनैपनि सेरको पहिलो मिसरा (पङक्ति) लाई मतला-ए-उला र दोस्रो मिसरा (पङ्क्ति) लाई मिसरा-ए-सानी भनिन्छ । सुरुको पहिलो सेरलाई मतला भनिन्छ । मतलाको अर्थ उदय हुनु वा सुरु हुनु हो (थापा, २०७३ : ५१) । गजलभित्र हुनुपर्ने संरचनात्मक तत्त्वहरू काफिया एवम् रदिफ पनि हुन् । काफियाको साहित्यिक अर्थ चाहिँ अनुप्रास, अन्त्यानुप्रास वा तुक भन्ने हुन्छ । गजलका सन्दर्भमा भने काफियाले सबै अनुप्रासलाई नबुझाई अन्त्यानुप्रास र रदिफभन्दा अघि आउने अनुप्रासयुक्त शब्दलाई बुझाउने गर्छ (बराल, २०६८: २९) । मतलाको दुवै मिसरा एवम् अन्य सेरको मिसरा-ए-सानीमा काफियाको प्रयोग हुने गर्दछ । त्यस्तै रदिफ शब्दले 'पछि आउने' वा 'बस्ने' भन्ने अर्थलाई बुझाउने भएकाले गजलको काफिया भन्दा पछि बस्ने सन्दर्भलाई पनि यसले सजिलै ग्रहण गर्न सक्छ । सबैजसो समीक्षकले रदिफको परिचय दिँदा यसै अर्थलाई प्रयोग गरेका छन् (बराल, २०६८ : ३८) । त्यसैगरी गजलको अन्तिम सेरमा

गजलकारका नाम वा उपनामको प्रयोग गर्ने परिपाटी पनि पाइन्छ । गजलको अन्तिम पङ्क्तिमा उपयुक्त उपनाम वा नामको संक्षिप्त रूप वा उपनामलाई तखल्लुस भनिन्छ ( थापा, २०७३ : ५४) । गजलको अन्तिम सेरलाई मकता भनिन्छ । गजलमा संरचनाको महत्त्वपूर्ण स्थान रहेको पाइन्छ । संरचनाबिना गजललाई गजल मान्न सकिँदैन ।

### ४.६.७ भाषाशैली

गजल भाषाका माध्यमद्वारा अभिव्यक्त हुने कलाविशेष हो । गजलले अस्तित्व भाषाकै माध्यमबाट प्राप्त गर्छ भने श्रोता तथा पाठकहरू गजलले अभिव्यक्त गर्ने अर्थ भाषा नै सुनेर लगाउने गर्छन् । समलोचकहरूले पनि गजलको व्याख्या तथा विश्लेषण गर्दा भाषाको नै सहयोग लिनुपर्छ । गजललाई सङ्गीतात्मक बनाउन पनि भाषाकै स्वर तथा व्यञ्जन वर्णहरूको भूमिका महत्त्वपूर्ण हुन्छ भने गजलमा प्रयोग हुने भाव, कल्पना, विम्ब तथा प्रतीकहरू पनि भाषाकै सहयोगद्वारा व्यक्त गरिन्छन् । यस अर्थमा भाषा गजलको अनिवार्य तथा महत्त्वपूर्ण तत्त्व सिद्ध हुन्छ (बराल, २०६८ : १२५) । भाषाशैली सर्जक अनुसार फरक-फरक हुने गर्दछ ।

### ४.६.८ विम्ब, प्रतीक एवम् अलङ्कार

विम्ब, प्रतीक एवम् अलङ्कार गजलका प्रमुख तत्त्वहरू हुन् । अंग्रेजीमा विम्ब शब्दलाई बुझाउन 'इमेज' शब्द प्रयोग गरिएको पाइन्छ र यसको अर्थ 'मूर्तचित्र' भन्ने हुन्छ । सामान्य अर्थमा भन्दा यसले वस्तु, कार्य, भाव, विचार, धारणा, मनका अवस्था, ऐन्द्रिक, अतिऐन्द्रिक अनुभवलाई बुझाउने गर्छ । यसको जन्म भाषिक ध्वनिको सहयोगले अमूर्त अनुभूति प्रक्रियाबाट हुन्छ र यसको मूल उपकरण इन्द्रिय जन्य अनुभव हुने गर्छ (बराल, २०६८ : ११३) । वर्तमान सन्दर्भमा प्रतीक शब्दले कुनै चिजलाई प्रतिनिधित्व गर्ने सजीव वा निर्जीव वस्तुलाई बुझाउँछ । साहित्य तथा भाषामा सादृश्य वा साहचर्यद्वारा कुनै चिजको प्रतिनिधित्व गर्ने वस्तुलाई प्रतीक भनिन्छ (शर्मा र लुइटेल, २०६३ : ३१६) । त्यस्तै अलङ्कार कविताको पोषक तत्त्व, प्राणतत्त्व र रसोत्कर्षक तत्त्वका रूपमा पनि रहेको हुन्छ । अलङ्कारले कविताको शब्द सौन्दर्य र अर्थ सौन्दर्यमा चमत्कार ल्याएर त्यसको सान्दर्यको अभिवृद्धिमा महत्त्वपूर्ण भूमिका खेलेका हुन्छन् । अलङ्कार कविताको आभूषण हो (गौतम, २०६९ : ११०) गजल पनि कविताको लघु आयामको उपविधा अन्तर्गत पर्ने भएकाले यसमा पनि अलङ्कारको महत्त्वपूर्ण स्थान रहेको छ ।

## ४.७ 'दाउहरू फरक फरक' गजल सङ्ग्रहको अध्ययन

### ४.७.१ विषय परिचय

रत्नप्रसाद अनामणि श्रेष्ठले २०४९ साल कार्त्तिकमा प्रकाशित 'जनमत' मासिक पत्रिकाको वर्ष ९, अङ्क १० मा 'आँसुहरू पिइरहें, बाहिर सधैं हाँसे पनि' शीर्षकको गजल प्रकाशित गरेर गजल यात्राको थालनी गरेको देखिन्छ । उनको पहिलो गजल सङ्ग्रह **'दाउहरू फरक फरक'** (२०६२) हो । यसमा उनले प्रेम र शृङ्गारलाई मात्र विषय र प्रसङ्ग नबनाई देशको समसामयिकताबारे, मानवीय सम्बन्धबारे, शोषण र अन्यायका विरुद्ध पनि आवाज उठाएका छन् (दुवाल, २०६२ : ४) । त्यसैगरी अभाव, असन्तुष्टि, निराशा, बिडम्बना, विवशता, विकृति, शोषणजस्ता जीवनका बाधक तत्त्वहरूलाई उनले विशेषतः आफ्ना गजलहरूका लागि कच्चा पदार्थका रूपमा सङ्कलन गरेका छन् र तिनलाई खारेर सेरहरूमा ढालेका छन् । कतै प्रेमका भाव पोखेका छन् भने कतै अन्तर्वेदन अभिव्यक्त गरेका छन् (न्यौपाने, २०६२ : भूमिका) । संरचनात्मक दृष्टिले प्रस्तुत कृति केही मात्रामा आलोचकीय देखिए तापनि भावका दृष्टिले भने निकै नै ओजिलो रहेको देखिन्छ । यस सङ्ग्रहमा २७ वटा गजलहरू समावेश गरिएको छ । प्रत्येक गजलमा भाव अनुसारका अमूर्त चित्रहरू पनि आफैले बनाएर प्रस्तुत कृतिमा उनले समावेश गरेका छन् । प्रस्तुत कृति **दाउहरू फरक फरक** (२०६२) लाई गजल तत्त्वका आधारमा निम्नबमोजिम समष्टिगत विश्लेषण गर्न सकिन्छ ।

### ४.७.२ विषयवस्तु एवम् भाव

रत्नप्रसाद अनामणि श्रेष्ठका प्रस्तुत गजल सङ्ग्रहमा रहेका गजलहरू मध्ये केही गजलहरू शृङ्गारिक प्रेम विषयका रहे तापनि बहुसंख्यक गजलहरू भने सामाजिक, व्यङ्ग्यात्मक एवम् विद्रोहात्मक रहेको देखिन्छ । अभाव, असन्तुष्टि, निराशा, विडम्बना, विवशता, विकृति, शोषण जस्ता सामाजिक समस्या एवम् मानवीय अनुभूतिहरू उनका गजलहरूमा पाइन्छ । प्रस्तुत सङ्ग्रहमा अनुभूतिको तीव्रता र भावको मिठास कतिपय गजलहरूमा सन्निहित भएको पाइन्छ । गजलमा शृङ्गारिक प्रवृत्तिको प्रयोग गर्नुपर्छ भन्ने शास्त्रीय मान्यताबाट पर हटेर उनले जीवनका यावत पक्षहरूलाई यस सङ्ग्रहमा समेट्न खोजको देखिन्छ ।

यस सङ्ग्रहका केही गजलहरूमा शृङ्गारिक भाव एवम् विषयवस्तुहरू रहेको देखिन्छ । उदाहरणका लागि -

धर्ती अझै बाँझै छ सिँचाई गर्न पानी छैन,
दिल अझै खाली छ बस्ने मायालु नानी छैन ।

(श्रेष्ठ, २०६२ : ४)

यस सङ्ग्रहमा रहेका शृङ्गारिक गजलहरूमा मिलन-बिछोड, पीडा, छटपटीजन्य भाव पोखिएको पाइन्छ ।

त्यसैगरी उनका गजलहरूमा देशप्रेमको भाव एवम् विषयवस्तु पनि पाइन्छ । उदाहरणका लागि-

नेपाली राष्ट्रियता र स्वाभिमान बचाउने हो भने,
आफ्नै डम्फूमा आफै मसक्क मसक्क मस्किदिए भयो

(श्रेष्ठ, २०६२ : २) ।

यस सङ्ग्रहमा रहेका गजलहरूमा नेताहरूको गलत क्रियाकलाप र भ्रष्टाचारप्रति व्यङ्ग्य एवम् विद्रोहको भाव पनि पाइन्छ । उदाहरणका लागि-

दुःखी जनताहरू जे सुकै, जस्तोसुकै अवस्थामा रहुन्,
माननीय महोदयहरूले पजेरो गाडी खुसुक्क किने हुन्छ (श्रेष्ठ, २०६२ : १०)

यस सङ्ग्रहमा कालो बजारी, मानिसको स्वार्थी प्रवृत्ति, न्याय विहीनता, गरिवी, दुःखपूर्ण जीवन आदि सामाजिक यथार्थ विषयवस्तु एवम् भावको प्रस्तुति पाइन्छ । जस्तै -

मिसावटको बजार हो यो, र त यहाँ छल सधैँ
सोझा सिधा बाँच्न हुन्न बलियाको बल सधैँ । (श्रेष्ठ, २०६२ : ८)

त्यस्तै यस सङ्ग्रहमा मानवीय पीडा, दुःख, असन्तुष्टि, निराशा, विवशता जस्ता मानवीय अनुभूतिहरूको मार्मिक प्रस्तुति पाइन्छ । जस्तै :

जिउने आशा मारी सक्यो, पटक पटक आशा देखाउनेले,
पराइको त कुरै छाडौं, मीठो आफ्नै भाषा बोलाउनेले । (श्रेष्ठ, २०६२ : ६)

### ४.७.३ कल्पना

रत्नप्रसाद अनामणि श्रेष्ठको प्रस्तुत गजल सङ्ग्रहमा माया प्रीति, मिलन विछोड, राजनैतिक व्यङ्ग्य एवम् विद्रोह, भ्रष्टाचारको विरोध, सामाजिक विषयवस्तु, पीडा, दुःख, दर्द जस्ता मानवीय अनुभूति आदि जस्ता भाव एवम् विषयवस्तुहरूलाई आफ्नो कल्पना शक्तिका माध्यमद्वारा गजलका सेरहरूमा अभिव्यक्त गरेको पाइन्छ । उदाहरणका लागि केही सेरलाई यसरी देखाउन सकिन्छ ।

हुलिया लिई जिन्दगी पहिचान पाउन गाह्रो छ,
छातीभित्र दबेका चोटहरू धुने मायालु ज्ञानी छैन ।

(श्रेष्ठ, २०६२ : ४)

पूर्व क्षितिजको इमान जमानमा असाध्य खिया लागेपछि,
कुन बाटो रोजौँ ? अन्योलमा आस्थाभित्रका रीतहरू

(श्रेष्ठ, २०६२ : १६)

यो आँसु कुनै मरुभूमिमा सिचाइँ भैदिए नि हुन्थ्यो,
यो दिल कुनै हृदयमा सुटुक्क रहिदिए नि हुन्थ्यो

(श्रेष्ठ, २०६२ : ३०)

### ४.७.४ सङ्गीत एवम् लयविधान

सङ्गीत एवम् लयविधानका दृष्टिले हेर्दा रत्नप्रसाद अनामणि श्रेष्ठको प्रस्तुत गजल सङ्ग्रहमा रहेका सबै गजलहरूमा कुनै पनि छन्द एवम् बहरको प्रयोग भएको देखिँदैन । उनका सम्पूर्ण गजलहरू मुक्त लयमा रहेको देखिन्छ । यद्यपि विभिन्न किसिमका अनुप्रास, अन्तरअनुप्रास, अन्त्यानुप्रास, मध्यानुप्रास, पद एवम् पदावलीको आवृत्ति जस्ता कुराहरूले गर्दा उनका गजलहरू लयात्मक एवम् साङ्गीतिक बनेका छन् । अन्तर्लयका कारणले गर्दा उनका गजलहरू आकर्षक एवम् श्रुतिमधुर लाग्दछन् । गजलमा प्रयोग भएका विभिन्न किसिमका काफिया एवम् रदिफहरूको प्रयोगले उनका गजलहरू सुन्दर बनेका देखिन्छन् । उदाहरणका रूपमा यस सङ्ग्रहमा समाहित गजलका केही सेरहरूलाई यसरी प्रस्तुत गर्न सकिन्छ ।

उनका गजलमा छेकानुप्रासको प्रयोग पाइन्छ । जस्तै-

इमान, जमान र इज्जतमा कति विज्ञापन गरौं,

संसार यस्तै न हो, गोहीले आँसु झार्दैमा के भो ?

(श्रेष्ठ, २०६२ : २६)

त्यस्तै यस सङ्ग्रहमा भएका गजलमा अन्त्यानुप्रासको सफल एवम् व्यापक प्रयोग पाइन्छ । जस्तै :

खाटा बसिसकेको पुरानो घाउलाई बल्झाइरहेछु म,

बेठेगान अविश्वासी श्वासलाई अल्झाइरहेछु म

(श्रेष्ठ, २०६३ : ५०)

## ४.७.५ संरचना

रत्नप्रसाद अनामणि श्रेष्ठको गजल सङ्ग्रहहरूमध्ये उनको पहिलो यस गजल सङ्ग्रहमा २७ वटा गजलहरू रहेका छन् । २७ वटा गजल मध्ये ७ वटा गजलहरू ५ सेरमा आबद्ध रहेका छन् भने २० वटा गजलहरू ४ सेरमा आबद्ध रहेको देखिन्छ । काफिया एवम् रदिफहरूको प्रयोगले उनका गजलहरू मुक्त लयमा भइकन पनि लयात्मक देखिन्छन् । उदाहरणका रूपमा उनको गजलका केही सेरलाई यसरी देखाउन सकिन्छ ।

धर्ती अझै बाँझै छ  सिँचाइ गर्न पानी छैन,

दिल अझै खाली छ बस्ने मायालु नानी छैन ।

नसुनिने स्वरभित्र विवशताका कुराहरू धेरै गरेँ,

मनको कारागारभित्र शायद बस्ने रानी छैन ।

(श्रेष्ठ, २०६२ : ४)

उपर्युक्त गजलका सेरहरूमा पानी, नानी, रानी जस्ता काफियाको प्रयोग गरिएको देखिन्छ भने 'छैन' रदिफको प्रयोग गरिएको देखिन्छ । रदिफ एवम् काफियाको सुन्दर तालमेलले उनका गजलहरू आकर्षक एवम् श्रुतिमधुर बनेका देखिन्छन् ।

प्रस्तुत गजलसङ्ग्रहमा रहेका गजलहरूमध्ये चारवटा गजलमा अनामणिले तखल्लुसको प्रयोग गरेको देखिन्छ । उदाहरणका लागि :

निश्चल माया किन अनाहकमा छरपष्ट भयो,

फेरि पनि यो रत्नका भासिरहेछ घाउहरू

(श्रेष्ठ, २०६२ : १२)

उनका केही गजलहरू संरचनात्मक दृष्टिले आलोचकीय देखिन्छन् । उनका केही गजलहरूमा रदिफ एवम् काफियाको समुचित प्रयोग हुन सकेको देखिँदैन । उदाहरणका लागि-

धेरै पटक हेर्दा पनि चिन्न नसक्ने आँखा कस्तो,

थुप्रै ढोका चहार्दा पनि मुठी नपाउने भिखारी जस्तो,

मायालु स्वरले बोलाउँदा सुन्न नसक्ने कर्ण कस्तो,

आफ्नै प्रिय आउँदा पनि बोल्न नसक्ने लाटी जस्तो ।

(श्रेष्ठ, २०६२ : २८)

उपर्युक्त उदाहरणमा अनुप्रासयुक्त काफियाको प्रयोग नभई सोको ठाउँमा आँखा, भिकारी, लाटी जस्ता शब्दहरू आएका छन् भने अन्त्यमा एउटै अक्षरको आवृत्तियुक्त रदिफ हुनु पर्नेमा कस्तो, जस्तो जस्ता फरक-फरक शब्दहरूको प्रयोग भएको पाइन्छ । तसर्थ गजलको संरचनात्मक नियममा आबद्ध नभएकाले उनका केही गजलहरू आलोचकीय देखिन्छन् ।

## ४.७.६ भाषाशैली

प्रस्तुत गजल सङ्ग्रह हेर्दा उनले प्रायः सबै गजलहरूमा सरल, सहज एवम् सुकोमल भाषाशैलीको प्रयोग गरेको देखिन्छ । जस्तै :

निष्ठुरीले छोडेर हालत मेरो यस्तो भयो,

नशाहरू पिइरहें पागलझैँ नाचे पनि ।

(श्रेष्ठ, २०६२ : २२)

त्यसैगरी उनले यस सङ्ग्रहका गजलहरूमा संस्कृतका वृद्धि, उषा, परिश्रम, स्वीकृति, निर्माण, समृद्ध, दरिद्र, ऋतु, पशु, विश्राम आदि जस्ता तत्सम शब्दहरूको प्रयोग गरेका छन् भने स्टार, न्युरोड, दिल, इमान, लोडसेडिङ्ग, बोतल, लेट, फसल, लाइसेन्स जस्ता आगन्तुक शब्दहरूको पनि प्रयोग गरेको पाइन्छ । त्यसैगरी टुकी, सुसेली, कान्छीनानी, उराठ आदि जस्ता झर्रा नेपाली शब्दहरूको पनि प्रयोग गरेको देखिन्छ ।

उनका गजलहरूमा व्यञ्जनात्मक एवम् प्रतीकात्मक भाषाको पनि प्रयोग भएको पाइन्छ । जस्तै -

आफू मरेर पनि अरुलाई बचाउने इच्छा छ मेरो,
बुढेसकालको लौरो एउटा पाइदिए पनि हुन्थ्यो ।

(श्रेष्ठ, २०६२ : ३०)

उनले यस सङ्ग्रहमा आलङ्कारिक भाषाको पनि प्रयोग गरेको देखिन्छ । जस्तै -

धेरैलाई आफ्नो ठानेँ थुप्रैलाई सक्दो उपकार गरेँ,
बिना मूलको पोखरी हुँ म कुन बेला सुक्ने थाहा छैन

(श्रेष्ठ, २०६२ : ४६)

उनका गजलमा प्रथम, द्वितीय एवम् तृतीय पुरुष कथन ढाँचाको प्रयोग भएको देखिन्छ । उनले आफ्नो गजलमा भाव प्रस्तुतिका लागि आत्मपरक, प्रश्नात्मक एवम् वर्णनात्मक शैलीको प्रयोग गरेको देखिन्छ । जस्तै -

**आत्मपरक**

खाटा बसिसकेको पुरानो घाउलाई बल्झाइरहेछु म
बेठेगान अविश्वासी श्वासलाई अल्झाइरहेछु म

(श्रेष्ठ, २०६२ : ५०)

**प्रश्नात्मक**

भोलि हुने कुरा हो, आज को भन्न सक्छ र ?
तिम्रो बहकिने मनले यो मुटु छुन सक्छ र ?

(श्रेष्ठ, २०६२ : १८)

**वर्णनात्मक**

मिसावटका बजार हो यो, र त यहाँ छल सधैँ
सोझा सिधा बाँच्न हुन्न बलियाको बल सधैँ

(श्रेष्ठ, २०६२ : ८)

### ४.७.७ विम्ब, प्रतीक एवम् अलङ्कार

रत्नप्रसाद अनामणि श्रेष्ठको प्रस्तुत गजल सङ्ग्रहमा विम्ब, प्रतीक एवम् अलङ्कारको व्यापक रूपमा प्रयोग भएको पाइन्छ । उनले यस संग्रहमा सामाजिक, सांस्कृतिक, राजनैतिक, प्राकृतिक आदि विम्बहरूको प्रयोग गरेको देखिन्छ । उदाहरणका रूपमा उनले प्रयोग गरेको प्राकृतिक विम्बलाई निम्नानुसार देखाउन सकिन्छ ।

हिउँजस्ता दाँत भैकन पनि हाँस्न नसक्ने मुस्कान कस्तो,
भारी बादल भैकन पानी पर्न नसकेको दिन जस्तो ।

(श्रेष्ठ, २०६२ : २८)

त्यसैगरी उनका गजलहरूमा डम्फू-राष्ट्रियताको प्रतीक, पजेरो-भ्रष्टाचारको प्रतीक, झारहरू-विद्रोहीहरूको प्रतीकका रूपमा आएका छन् भने अन्य शब्दहरू जस्तै डमरु, तेल, दियो, रित्तो बोतल, झरेको पात, पोखरी, बार, छेपारो आदि शब्दहरू पनि प्रतीकका रूपमा यस सङ्ग्रहमा आएको देखिन्छ ।

त्यस्तै अनामणिका यस सङ्ग्रहका गजलहरूमा विभिन्न शब्दालङ्कार एवम् अर्थालङ्कारको प्रयोग भएको देखिन्छ ।

उनका गजलमा प्रयोग भएको छेकानुप्रास एवम् अन्त्यानुप्रास अलङ्कारको उदाहरणलाई निम्नानुसार देखाउन सकिन्छ -

चिठ्ठीहरू उडिरहुन् हावा सँगसँगै
छायाँहरू बढिरहुन् माया सँगसँगै

(श्रेष्ठ, २०६२ : २४)

त्यस्तै उपमा अलङ्कारको प्रयोग यसरी गरेको देखिन्छ -

निष्ठुरीले छोडेर हालत मेरो यस्तो भयो,
नशाहरू पिइरहें पागल झैं नाचे पनि ।

(श्रेष्ठ, २०६२ : २२)

उनले रूपक अलङ्कारको पनि प्रयोग गरेको पाइन्छ । जस्तै -

बिना लाइसेन्सको चालक हुँ म, दुर्घटना हुने थाहा छैन
बिना हाँगाको पात हुँ म कुन बेला फ्याँक्ने थाहा छैन ।

(श्रेष्ठ, २०६२ : ४६)

उनले यस गजल सङ्ग्रहमा उत्प्रेक्षा अलङ्कारको प्रयोग पनि गरेको देखिन्छ । जस्तै-

नकुल्च झरेका पात सम्झी यसको पनि सार होला,
जीत आफैमा राख वरु तिम्रो पनि हार होला ।

(श्रेष्ठ, २०६२ : ४०)

उनले यस गजलसङ्ग्रहमा अर्थान्तरन्यास अलङ्कारको पनि प्रयोग गरेको पाइन्छ । जस्तै -

यो देश विकास र निर्माणको, कसलाई के मतलब ?
आफ्नो स्वार्थको लागि ठूल्ठूला भागवण्डा रोजे हुन्छ ।

(श्रेष्ठ, २०६२ : १०)

### ४.७.९ निष्कर्ष

रत्नप्रसाद अनामणि श्रेष्ठले २०४९ सालमा 'जनमत' मासिक पत्रिकामा आफ्नो गजल प्रकाशित गरेर गजल यात्राको थालनी गरेको देखिन्छ । विभिन्न पत्र-पत्रिकाहरूमा फुटकर रूपमा गजलहरू प्रकाशित गर्दै आएका अनामणिले २०६२ सालमा आएर २७ वटा गजलहरू समावेश गरी **'दाउहरू फरक फरक'** गजल सङ्ग्रह प्रकाशित गरेको देखिन्छ । यस सङ्ग्रहमा रहेका अधिकांश गजलहरूमा व्यङ्ग्य, विद्रोह, सामाजिक यथार्थको चित्रण, शोषण, गरिवी, अभावका साथै असन्तुष्टि, निराशा, पीडा, दुःख जस्ता मानवीय अनुभूतिहरूको प्रस्तुति पाइन्छ । यस सङ्ग्रहमा रहेका थोरै गजलहरूमा भने शृङ्गारिक एवम् प्रेमभावपूर्ण विषयवस्तुको अभिव्यक्ति पाइन्छ । संरचनात्मक दृष्टिले केही मात्रामा आलोचकीय रहे तापनि भावका दृष्टिले भने उनका गजलहरू ओजिला रहेका देखिन्छन् ।

## ४.८ 'ख्याल ख्यालमै सल्क्यो जिन्दगी' गजल सङ्ग्रहको अध्ययन

### ४.८.१ विषय परिचय

रत्नप्रसाद अनामणि श्रेष्ठको दोस्रो गजल सङ्ग्रह **ख्याल ख्यालमै सल्क्यो जिन्दगी** (२०७३) हो । प्रस्तुत गजल सङ्ग्रहमा ३८ वटा गजलहरू समावेश गरिएको देखिन्छ । यस सङ्ग्रहमा रहेका गजलमध्ये एउटा गजल भने नेवारी भाषामा लेखिएको पाइन्छ । उनले यस गजल सङ्ग्रहमा मायाप्रीतिकै सेरोफेरोमा रहेर गाउँले जीवन र शहरिया जीवनको परिवेश, धनी र गरिब बीचको खाल्डो, जातजातिमा विभेद, बाध्यतावस खाडीमा गएर रगत पसिना खर्चिनु परेको वेदना आदि समसामयिक विषयलाई उजागर गरेका छन् (बानियाँ, २०७४ : ९) । प्रस्तुत गजल सङ्ग्रहमा उनले शृङ्गारिक प्रकृतिका माया-प्रीति, मिलन-विछोड जस्ता भाव एवम् विषयवस्तु बोकेका गजलहरू बाहेक देशप्रेम, विद्रोह, वैदेशिक पीडा, जिन्दगीका उकाली-ओराली, जीवन भोगाइका पीडा, व्यथा, गरिबी, शहरीय कुरूप अवस्थाको चित्रण, घात-प्रतिघात, आत्मनिर्भरको चाहना, प्रकृति वर्णन, इमान्दारीपन, आडम्बरको विरोध आदि जस्ता भाव एवम् विषयवस्तुहरू उनले समावेश गरेको पाइन्छ । खासगरी यस गजल सङ्ग्रहमा शृङ्गारिक, प्रेमभावयुक्त गजलको बाहुल्यता रहेको देखिन्छ । माया-प्रेम, मिलन-विछोड जस्ता विषयवस्तु ज्यादा रहे तापनि उनले यसै विषयको सेरोफेरोमा रहेर अन्य विषयवस्तु एवम् भावहरू पोखेको देखिन्छ । अनामणिको यस **ख्याल ख्यालैमा सल्क्यो जिन्दगी** (२०७३) लाई गजल तत्त्वका आधारमा निम्नबमोजिम समष्टिगत रूपमा विश्लेषण गरिएको छ ।

### ४.८.२ विषयवस्तु एवम् भाव

रत्नप्रसाद अनामणि श्रेष्ठको प्रस्तुत गजल सङ्ग्रहमा माया-प्रीति, मिलन विछोड जस्ता प्रमेभावयुक्त, शृङ्गारिक गजलको बाहुल्यता रहेको देखिन्छ । उनले विशेषगरी मायाप्रीतिकै सेरोफेरोमा रहेर समाजका यावत् विषयहरू खोतल्ने प्रयास गरेको देखिन्छ । वर्गीय एवम् जातीय विभेद, परदेशीको पीडा, जीवनका पीडादायिक भोगाई, ग्रामीण मोह, भ्रष्टाचार एवम् वेथितिको विरोध, दुःख, पीडा, इमान्दारीपन, प्रकृति वर्णन, आडम्बरको विरोध, स्वाभिमान जस्ता यावत् विषयवस्तु एवम् भाव उनका गजलका सेरहरूमा पाइन्छ ।

विशेषगरी यस गजल सङ्ग्रहमा रहेका अधिकांश गजलहरू शृङ्गारिक तथा प्रेमभावले ओतप्रोत रहेको देखिन्छ । उदाहरणका लागि-

यो सुन्दर संसारमा उदाहरणीय बन्नु पर्दछ,

म मदन र तिमी मुना बन्ने लहर जिन्दगीको ।

(श्रेष्ठ, २०७३ : २२)

त्यसैगरी उनका गजलहरूमा भ्रष्टाचारप्रति व्यङ्ग्य एवम् विद्रोहको भाव पनि पाइन्छ । जस्तै-

विगार्न त ठूलाले नै बिगार्यो देशै कंगाल बनायो,

दरिद्र गरिब निमुखाहरूलाई रिस पोख्नु हुन्न हजुर ।

(श्रेष्ठ, २०७३ : २०)

प्रस्तुत गजलको सेरमा भ्रष्टाचारको विरोध मात्र नभई गरिब एवम् निमुखाहरू प्रति प्रेम भाव पनि पाइन्छ । त्यस्तै अनामणिको प्रस्तुत गजल सङ्ग्रहमा परदेशीको पीडा पनि पोखिएको पाइन्छ । जस्तै-

यसपालिको दशैंमा आउँदिन प्रिया, बिदाको लाममा छ ।

तितोमीठो जस्तो भए पनि खाउ, माया सबै खाममा छ ।

(श्रेष्ठ, २०७३ : १७)

त्यसैगरी उनको यस गजल सङ्ग्रहमा प्रकृति प्रेम एवम् प्रकृति चित्रण पनि पाइन्छ । जस्तै -

किसानलाई मात्र वर्षाको महत्त्व थाहा हुन्छ,

आषाढको वैशालु वर्षासँगै छल्क्यो जिन्दगी ।

(श्रेष्ठ, २०७३ : १२)

प्रस्तुत गजल सङ्ग्रहमा पीडा, दुःख जस्ता मानवीय अनुभूतिहरूको मार्मिक प्रस्तुति पनि पाइन्छ । जस्तै -

मनको उकुसमुकुस भावनाहरू लेखिन्छ क्रमशः

खोज्दै जाँदा हरेक पल पीडाहरू भेटिन्छ क्रमशः

(श्रेष्ठ, २०७३ : १५)

यस सङ्ग्रहमा मानवीयता हीन शहरप्रति विरोध एवम् ग्रामीण मोहको भाव पनि पाइन्छ । जस्तै -

शहरमा नक्कली र विवेकहीन माया बढी हुन्छ,

शून्य हृदयको घात लाग्छ, गाउँमा आऊ छोरा

(श्रेष्ठ, २०७३ : १८)

त्यस्तै उनका गजलमा वर्गीय एवम् जातीय विभेद जस्ता सामाजिक समस्याको प्रस्तुति पनि पाइन्छ । जस्तै-

बिहेको कुरा गरेर मात्र के गर्नु जात नमिले पछि

खुट्टा तान्ने धेरै हुन्छन् के गर्नु साथ नमिले पछि

(श्रेष्ठ, २०७३ : २८)

प्रस्तुत सङ्ग्रहमा शृङ्गारिक धाराका गजलहरू बढी भएको पाइए तापनि शृङ्गारिकता कै सेरोफेरोमा रहेर अनामणिले यावत् विषयवस्तु एवम् भावको उठान गरेको देखिन्छ ।

### ४.८.३ कल्पना

रत्नप्रसाद अनामणि श्रेष्ठको प्रस्तुत गजल सङ्ग्रहमा मुख्य विषय एवम् भावका रूपमा आएको शृङ्गारिकता वा प्रमेभावपूर्ण विषय तथा यसकै सेरोफेरोमा रहेर आएका जीवन एवम् समाजका यावत् पक्षहरूको प्रस्तुतिका लागि उनले आफ्नो कल्पनाशक्तिलाई जोडदार रूपमा प्रयोग गरेको देखिन्छ । कल्पना शक्तिकै सहाराले उनले भाव एवम् विषयवस्तुलाई मूर्त रूप दिएका छन् । उदाहरणका लागि उनका गजलका केही सेरहरूलाई यसरी देखाउन सकिन्छ ।

लिलाममा राखें थोत्रो जिन्दगी कसले लिन्छ हजुर

निरस यो वेसाहारालाई सस्तोमा कसले किन्छ हजुर ।

(श्रेष्ठ, २०७३ : २३)

कसले टिपी लग्यो कुन्नि मेरो बगैंचाको फूललाई

कसले च्यातिदियो कुन्नि मेरो मनको तुललाई

(श्रेष्ठ, २०७३ : ४२)

प्रस्तुत गजल सङ्ग्रहमा रहेका उनका गजलका सेरहरूको अध्ययन गर्दा अनामणिले विभिन्न विषयवस्तुहरूको प्रस्तुतिका लागि व्यापक रूपमा कल्पनाशक्तिको प्रयोग गरेको देखिन्छ ।

## ४.८.४ सङ्गीत एवम् लयविधान

रत्नप्रसाद अनामणिको प्रस्तुत सङ्ग्रहमा रहेका गजलहरूमा कुनै पनि छन्द एवम् बहरको प्रयोग भएको पाइँदैन । यस दृष्टिले हेर्दा उनका सम्पूर्ण गजलहरू मुक्त लयमा रहेको देखिन्छ तथापि विभिन्न अनुप्रास एवम् पद, पदावलीको आवृत्तिको कारणले गर्दा उनका गजलहरू श्रुतिमधुर एवम् लयात्मक बनेका देखिन्छन् । साथसाथै गजलमा प्रयोग भएका विभिन्न किसिमका काफिया एवम् रदिफहरूले गर्दा उनका गजल सुन्दर बनेका छन् । अन्तर्लयका कारण उनका गजल साङ्गीतिक बनेका छन् ।

उनका गजलमा प्रयोग भएको अनुप्रासलाई उदाहरणका रूपमा यसरी देखाउन सकिन्छ :

एउटै सुन्दर बगैँचामा जिउने रहर जिन्दगीको
एउटै सुन्दर फलैंचामा बस्ने शहर जिन्दगीको

(श्रेष्ठ, २०७३ : २२)

उपर्युक्त सेरमा पदावलीको आवृत्ति भएको पनि देखिन्छ । यसरी विभिन्न अनुप्रासको प्रयोग एवम् पद, पदावलीको आवृत्ति जस्ता कुराहरूले उनका गजल साङ्गीतिक एवम् लयात्मक बनेका देखिन्छन् ।

## ४.८.५ संरचना

रत्नप्रसाद अनामणिको प्रस्तुत गजल सङ्ग्रह भित्र समावेश भएका ३८ वटा गजलहरू मध्ये २३ वटा गजलहरू ५ सेरमा आबद्ध रहेका देखिन्छन् भने १५ वटा गजलहरू ४ सेरमा आबद्ध रहेका देखिन्छन् । काफिया एवम् रदिफ जस्ता गजलका संरचनागत तत्त्वहरूको समुचित प्रयोगले गर्दा उनका गजलहरू मुक्त लयमा रचिएको भए तापनि गेयात्मक एवम् श्रुतिमधुर लाग्दछन् । उदाहरणका रूपमा उनका गजलका केही सेरहरूलाई यसरी देखाउन सकिन्छ ।

म गाउँले हुँ मसँग झिलिमिली शहर नमाग
कठिन परिश्रम नै ठिक तर झुटो रहर नमाग ।
जीवनमा धेरै पल्ट सिउँडी काँडा फुलाइसकेँ
बाँझो खेत नै ठिक बरु दुर्गन्धित नहर नमाग ।

(श्रेष्ठ, २०७३ : २१)

उपर्युक्त गजलका सेरहरूमा शहर, रहर, नहर जस्ता काफियाको प्रयोग भएको देखिन्छ भने 'नमाग' रदिफको प्रयोग भएको देखिन्छ । यस सङ्ग्रहका उनका गजलहरूमा रदिफ एवम् काफियाको सुन्दर तालमेल पाइन्छ ।

त्यसैगरी प्रस्तुत सङ्ग्रहमा भएका गजलहरू मध्ये १६ वटा गजलहरूमा तखल्लुसको प्रयोग भएको देखिन्छ । जस्तै-

विश्वासको दियो निभेपछि उज्यालो हुन्न रे,
यो दुःखी 'अनामणि' लाई छल्न आँटेर कहाँ गयौ ।

(श्रेष्ठ, २०७३ : १५)

उपर्युक्त सेरमा उनले आफ्नो उपनाम अनामणिको प्रयोग गरेको देखिन्छ । त्यस्तै उनले एउटा गजलमा रदिफको रूपमा नै आफ्नो नामको प्रयोग गरेको पनि देखिन्छ ।

प्रस्तुत गजल सङ्ग्रह उनको पहिलो गजलसङ्ग्रहको तुलनामा संरचनात्मक दृष्टिले निकै नै उत्कृष्ट देखिन्छ । केही गजलहरू संरचनात्मक दृष्टिमा आलोचकीय रहेका देखिन्छन् । उदाहरणका रूपमा -

म हराइसकेको मान्छे हुँ, तिमी खोजी नगर ।
म रित्तिसकेको बोतल हुँ तिमी भर्ने नगर ।
चाप्लुसी र चाकडी म गर्दिन तिमी आफै सोच,
म फुटिसकेको ऐना हुँ टुक्रामा पनि हेर्ने गर ।

(श्रेष्ठ, २०७३ : ४४)

उपर्युक्त सेरहरूमा अनुप्रासयुक्त काफियाहरूको प्रयोग भएको देखिँदैन भने रदिफका रूपमा एउटै शब्दको आवृत्ति नभई 'नगर' र 'गर' जस्ता दुई विपरीत शब्दहरूको प्रयोग

भएको पाइन्छ । तसर्थ गजलको संरचनात्मक नियममा आबद्ध नरहेकाले उनका केही गजल आलोचकीय रहेका देखिन्छन् ।

## ४.८.६ भाषाशैली

रत्नप्रसाद अनामणिको प्रस्तुत गजल सङ्ग्रहमा सरल, सहज, सुकोमल एवम् आकर्षक भाषाशैलीको प्रयोग भएको पाइन्छ । उदाहरणका लागि-

कसैलाई दुःख दिनु हुन्न छोटो जिन्दगीमा

चोखो मायाभित्र अमृत फल्ने रहेछ ।

(श्रेष्ठ, २०७३ : ३२)

उनका गजलहरूमा वर्षा, स्वार्थी, विचित्र, प्रहर, अमृत, हृदय, वसन्त, जगत् आदि जस्ता संस्कृतका तत्सम शब्दहरूको प्रयोग भएको पाइन्छ भने क्यानभास, ग्यार्ष्टिक, लाइसेन्स, अदालत, रेकर्ड, जमाना आदि जस्ता आगन्तुक शब्दहरूको पनि प्रयोग भएको देखिन्छ । त्यस्तै उकाली-ओराली, काप्चा, सेपिलो, खोले सिस्नु आदि जस्ता झर्रा नेपाली शब्दहरूको पनि प्रयोग भएको पाइन्छ । त्यस्तै उनका यस सङ्ग्रहका गजलहरूमा व्यञ्जनात्मक एवम् प्रतीकात्मक भाषाको प्रयोग पनि पाइन्छ । जस्तै-

गोबर गोबरकै ठाउँमा र अमृत अमृतकै ठाउँमा ठिक

मल र जल एकै ठाउँमा कदापि जोख्नु हुन्न हजुर ।      (श्रेष्ठ, २०७३ : २०)

उनका गजलमा आलङ्कारिक भाषाको पनि प्रयोग भएको पाइन्छ । जस्तै-

म हराइसकेको मान्छे हुँ तिमी खोजी नगर ।

म रित्तिसकेको बोतल हुँ तिमी भर्ने नगर

(श्रेष्ठ, २०७३ : ४४)

यस सङ्ग्रहमा उनले नेवारी भाषामा लेखिएको गजल पनि समावेश गरेको देखिन्छ । जस्तै-

मिखा जिगु कनां च्वन खँगु ला मखु

जी छँत साव हेका च्वना योगु ला मखु

(श्रेष्ठ, २०७३ : ४६)

यस सङ्ग्रहमा अनामणिले प्रथम, द्वितीय एवम् तृतीय पुरुष कथन ढाँचाको प्रयोग गरेको देखिन्छ । उनले आफ्नो भाव प्रस्तुतिका लागि आत्मपरक, प्रश्नात्मक एवम् वर्णनात्मक शैलीको प्रयोग गरेको देखिन्छ । उदाहरणका लागि-

**आत्मपरक**

जो जुनसुकै बाटो लागे पनि छोडदेउ रत्न
आफ्नै दुःखी संसारमा बाँच मोड्देऊ रत्न

(श्रेष्ठ, २०७३ : ३८)

**प्रश्नात्मक**

छोटा लुगा लगाउनु नै थियो भने कुना काप्चा छोप्ने किन ?
भ्गवान्लाई नै थाहा होला अप्ठ्यारा ठाउँमा कोप्ने किन ?

(श्रेष्ठ, २०७३ : ३५)

**वर्णनात्मक**

देखावटी उधारोमा माया चल्ने रहेछ
सक्कली माया बीच बाटै बाटो छल्ने रहेछ ।

(श्रेष्ठ, २०७३ : ३२)

## ४.८.७ विम्ब, प्रतीक एवम् अलङ्कार

रत्नप्रसाद अनामणि श्रेष्ठले आफ्ना गजलहरूमा विभिन्न सामाजिक, सांस्कृतिक, राजनैतिक एवम् प्राकृतिक विम्बको प्रयोग गरेको देखिन्छ । उदाहरणका रूपमा सामाजिक विम्बलाई यसरी देखाउन सकिन्छ :

यसपालीको दशैंमा आउँदिन प्रिया, बिदाको लाममा छ ।
तितोमीठो जस्तो भए पनि खाउ, माया सबै खाममा छ ।

(श्रेष्ठ, २०७३ : १७)

त्यसैगरी अनामणिले प्रस्तुत गजल सङ्ग्रहमा विभिन्न किसिमका प्रतीकहरूको प्रयोग गरेको देखिन्छ । बगैंचा, फूल, काँडा, गोबर, अमृत, मुनामदन, राधाकृष्ण, डोरी, पानको पात, चुँडेको चङ्गा, लैला मज्नु, डुङ्गा, एउटै रथका दुई पाङ्ग्रा, नदी आदि जस्ता शब्दहरू उनले प्रतीकका रूपमा प्रयोग गरेको पाइन्छ ।

अनामणिका गजलहरूमा विभिन्न किसिमका शब्दालङ्कार एवम् अर्थालङ्कारको प्रयोग भएको पाइन्छ ।

उनका गजलमा छेकानुप्रास एवम् अन्त्यानुप्रास शब्दालङ्कारको प्रयोग भएको पाइन्छ । जस्तै -

एउटै सुन्दर बगैंचामा जिउने रहर जिन्दगीको

एउटै सुन्दर फलैंचामा बस्ने शहर जिन्दगीको ।

(श्रेष्ठ, २०७३ : २२)

उनले यस सङ्ग्रहमा उपमा अलङ्कारको पनि प्रयोग गरेको देखिन्छ । जस्तै -

हिउँ जस्तो दाँत भैकन हाँस्न नसक्ने मुख कस्तो,

भारी बादल भैकन पानी पर्न नसकेको दिन जस्तो ।

(श्रेष्ठ, २०७३ : ४५)

उनले रूपक अलङ्कारको पनि प्रयोग गरेको देखिन्छ । जस्तै-

म हराइसकेको मान्छे हुँ तिमी खोजी नगर ।

म रित्तिसकेको बोतल हुँ तिमी भर्ने नगर (श्रेष्ठ, २०७३ : ४४)

अनामणिका गजलहरूमा अर्थान्तरन्यास अलङ्कारको पनि प्रयोग भएको पाइन्छ । जस्तै-

आफ्नो ठाउँमै साथ लाग्छ, गाउँमा आऊ छोरा

झिलीमिली शहरमा मात लाग्छ, गाउँमा आऊ छोरा ।

(श्रेष्ठ, २०७३ : १८)

## ४.८.८ निष्कर्ष

रत्नप्रसाद अनामणि श्रेष्ठको प्रस्तुत गजल सङ्ग्रहमा ३८ वटा गजलहरू समाविष्ट छन् । प्रस्तुत सङ्ग्रहमा रहेका अधिकांश गजलहरू माया-प्रीति, मिलन-विछोड जस्ता शृङ्गारिक एवम् प्रेमभावपूर्ण विषयवस्तुमा आधारित रहेको देखिन्छन् । मायाप्रेमकै सेरोफेरोमा रहेर उनले मानवीय जीवनका यावत् कुराहरूलाई समेट्न खोजेको देखिन्छ । **दाउहरू फरक-फरक** गजल सङ्ग्रहमा रहेका ७, १४, १५ एवम् १७ नम्बरमा रहेका गजलहरूलाई टपक्क टिपेर एकादुई शब्दहरूलाई परिमार्जित गरेर यसै सङ्ग्रहमा पनि उनले राखेको देखिन्छ । पहिलो गजल सङ्ग्रहको तुलनामा उनको यो दोस्रो गजल सङ्ग्रह गजल

संरचनाका दृष्टिले निकै अगाडि रहेको देखिन्छ । भाषाशुद्धिका दृष्टिले हेर्दा भने प्रस्तुत कृति त्रुटिपूर्ण देखिन्छ ।

## ४.९ रत्नप्रसाद अनामणि श्रेष्ठका हाइकु सङ्ग्रहको अध्ययन

### ४.९.१ विषय प्रवेश

रत्नप्रसाद अनामणि श्रेष्ठ एक विशिष्ट हाइकुकार हुन् । वि.सं. २०५० सालमा प्रकाशित **स्पन्दन** साहित्यिक मासिक पत्रिकाको वर्ष १, अङ्क १ मा 'केही हाइकुहरू' शीर्षकमा ४ वटा हाइकुहरू प्रकाशित गरी औपचारिक रूपमा हाइकु लेखन यात्राको थालनी गरेका अनामणिका हालसम्म आइपुग्दा **दुखेको घाउ** (२०६१), **शब्द पथमा** (२०६९) एवम् नेवारी भाषाको हाइकु सङ्ग्रह **लँय् लुगु किपा** (२०७४) गरी तीनवटा हाइकु सङ्ग्रह प्रकाशित भएको देखिन्छ । नेवारी भाषाको हाइकु सङ्ग्रह **तिलीकता स्वाँ** बाट विशेष प्रभावित भएर हाइकु लेखनको थालनी गरेको उनी बताउँछन् ।

रत्नप्रसाद अनामणि श्रेष्ठको पहिलो हाइकु सङ्ग्रह **दुखेको घाउ** (२०६१) मा ३२ वटा हाइकुहरू समावेश गरिएको पाइन्छ । जसमा चित्रकार यादव श्रेष्ठद्वारा बनाइएका चित्रहरू समावेश गरिएको देखिन्छ । जुन चित्रहरू हाइकुको भावअनुसार रहेको देख्न सकिन्छ । त्यसैगरी उनको दोस्रो हाइकु सङ्ग्रह **शब्दपथमा** (२०६९) हो । १२० वटा हाइकुहरू समावेश गरिएको उक्त सङ्ग्रह तत्कालीन समयमा प्रकाशनमा आएका नेपाली हाइकु सङ्ग्रहहरूमध्ये सबैभन्दा सानो आकारको मानिएको थियो । जसको लम्बाइ २ इन्च र चौडाइ साढे १ इन्च रहेको देखिन्छ । त्यस्तै उनको तेस्रो हाइकु सङ्ग्रह वा नेवारी भाषामा लिखित प्रथम हाइकु सङ्ग्रह **लँय् लुगु किपा** (२०७४) मा ४४ वटा हाइकुहरू समावेश गरिएको देखिन्छ । उनका तीनवटै हाइकु सङ्ग्रह अनामणि प्रकाशन नालाबाट प्रकाशित भएको देखिन्छ । हाइकुकार अनामणिले आफ्ना हाइकुमार्फत् नेपाली परम्परागत संस्कार र नेपाली प्रकृति तथा त्यसको निश्चल र निर्मल रसास्वादनमा रमाइरहेको समाजको चित्रण मात्र गरेका छैनन्, बरु समाजमा रहेका विकृति तथा विसङ्गतिमाथि निर्मम प्रहार गरेका छन् (हमाल, २०७१ : २१) । उनको हाइकुमा पाइने सबैभन्दा महत्त्वपूर्ण कुरा भनेको आजको नेपाली समाजको कुरूप चित्रण हो । उनले संसदीय मार्क्सवादी पार्टी देखि लिएर माया प्रेममा भुलेको आजको आधुनिक पुस्तालाई समेत व्यङ्ग्य ठोकेका छन् । प्रायः हाइकुहरू पढ्दा पाठकहरूले नयाँ-नयाँ स्वाद पाउँदै जान्छन् (कवि, २०७१ : ३) । निष्कर्षमा भन्नुपर्दा उनका हाइकुहरूमा

भ्रष्टाचार, विकृति, विसङ्गति, अन्याय, अत्याचारको विरोध, बलात्कृत महिलाको पीडा, माया-प्रीति एवम् शृङ्गारिक भाव, प्रकृति प्रेम, प्रकृति चित्रण, देशप्रेम, आडम्बरी समाजको चित्रण, बेपत्ता परिवारको पीडा, क्रान्तिकारी विचार, जीवनको क्षणिकता, परदेशी नेपालीको पीडा, गरिबी, विश्वमा बढ्दै गएको अशान्ति आदिजस्ता भाव एवम् विषयवस्तु समावेश भएको पाइन्छ । अनामणिका बढीजसो हाइकुहरू व्यङ्ग्यात्मक एवम् विद्रोहात्मक भावले सुसज्जित रहेको देख्न सकिन्छ । समाजका यावत् विषयवस्तुहरूमा उनको व्यङ्ग्यात्मक भाव छचल्किएको देख्न सकिन्छ ।

## ४.९.२ हाइकुको सैद्धान्तिक परिचय

हाइकु जापानी भाषामा जन्मिएर विकसित भएको लोकप्रिय काव्यविधाको एउटा लघुतम रूप हो । भावको तीव्रता एवम् संरचनाका दृष्टिले नेपाली उखान र मुक्तकसँग निकट देखिने हाइकु विशेषतः विम्ब, प्रतीक, अलङ्कार र सौन्दर्यचेतनाका दृष्टिले कविताको स्वाद दिने साहित्यको एउटा स्वरूप हो । यसको लेखन परम्पराको इतिहास लगभग साढे तीन सय वर्षको छ तापनि बौद्धधर्म र हजारौँ वर्षदेखि कविकलाकारहरूलाई प्रभाव पारेर आएको ताओवादको संयुक्त प्रभावबाट हाइकुको धारणा जन्मेको हो । हाइकु शब्दको व्युत्पत्ति जापानी भाषा होक्कुबाट भएको हो (सुवेदी, २०४४ : क-ङ) । सामान्यतया होक्कु भनेको उठानांश हो । लामो कविता शृङ्खलाको उठान अर्थात् थालनी गर्ने मङ्गलाचरणझैँ पहिलो अंशका रूपमा यो रहन्छ । 'होक्कु' अर्थात् 'हाइकु' को अर्थ थालनी हो । ताङ्काको पहिलो तीन हरफलाई कविताको आरम्भ अर्थात् हाइकुको बीज भन्न सकिन्छ (अधिकारी, २०६४ : १) । आठौँ शताब्दीदेखि नै प्रसिद्धि पाएको वाका अर्थात् एकतीस अक्षरयुक्त जापानी लघुकविता ताङ्काको अघिल्लो तीन हरफलाई होक्कु भनिन्थ्यो । होक्कुको स्वतन्त्रत लेखनसँगै विषयगत विविधता र गम्भीरता सहित उही संरचनामा रहेर हाइकु कविताको जन्म भएको मानिन्छ ।

हाइकुको मुख्य विशेषता र पहिचान तीन हरफ र सत्र अक्षरको संरचना पक्ष हो । यसमा पालैसित पहिलो हरफमा पाँच अक्षर, दोस्रो हरफमा सात अक्षर र तेस्रो हरफमा पाँच अक्षर संख्या रहेका हुन्छन् । तीन हरफमध्ये जहाँ पनि एक ऋतुबोधक शब्द हुनुपर्ने मान्यता रहेको देखिन्छ । सो शब्दलाई जापानी भाषामा 'किगो' भनिन्छ । 'किगो' नभएका हाइकुहरू पनि हुन्छन् त्यस्ता हाइकुहरूलाई 'सैन्यू' भनिन्छ । तीन हरफमध्ये पहिलो हरफ जसमा पाँचवटा अक्षरहरू हुन्छन् । यसले हाइकुको पृष्ठभूमिलाई अगाडि सारेको हुन्छ भने

दोस्रो हरफ अथवा सातवटा अक्षरहरूले हाइकुकारको भाव, मर्म बुझाउँछ र त्यसैगरी अन्तिम हरफ जुन पाँच अक्षरको हुन्छ, त्यसले निचोड अथवा अन्तिम परिणाम एक निमेषमा च्याट्ट छिनाएको हुन्छ (श्रेष्ठ, २०७४ : ५-६) । हाइकुलाई अझ स्पष्ट रूपमा चिन्न केही विद्वानहरूको परिभाषाहरूलाई केलाउन सकिन्छ ।

साहित्यकार शङ्कर लामिछानेका अनुसार-"एक्कासी उम्रेको भावना नै हाइकुको आत्मा हो" (लामिछाने, २०२७ : २९-३०) । त्यसैगरी खगेन्द्रप्रसाद लुइटेलले तीन अतुकान्त पङ्क्तिहरूको एक पङ्क्ति पुञ्जमा रचित पद्यलाई हाइकु भनिन्छ (लुइटेल, २०६० : ३५) भनेर हाइकुलाई चिनाउने काम गरेका छन् । त्यस्तै रामकुमार पाँडेले सौन्दर्य चेतनाको उत्कृष्ट नमुना, भावनाको खँदिलो सार हाइकु एउटा चराको चक्षु दृश्य हो (पाँडे, २०६१ : ५-१०) भनेर चिनाएको पाइन्छ । उल्लिखित परिभाषाहरूको अध्ययनबाट समष्टिमा हाइकु भनेको विशिष्ट संरचनायुक्त, स्वयम्मा पूर्ण, भाव वा विषयवस्तु र भाषाशैलीय विन्यासले युक्त, अनुभूतिको भाषिक अभिव्यक्ति हो भन्ने बुझ्न सकिन्छ । त्यसैगरी हाइकु कविताकै एक लघुतम उपविधा भएकाले यसलाई पनि कविताकै तत्त्वहरूको समकक्षमा राखेर हेर्न सकिन्छ । यद्यपि संरचनात्मक दृष्टिले हेर्दा यसका केही तत्त्वहरू कविताका तत्त्वहरूसँग मेल खाँदैनन् ।

हाइकुको यिनै सैद्धान्तिक आधारहरूलाई मानेर यहाँ अनामणिका दुई हाइकु सङ्ग्रहहरू **दुखेको घाउ** (२०६१) एवम् **शब्द पथमा** (२०६९) मा रहेका हाइकुहरूको समष्टिमा व्याख्या एवम् विश्लेषण गर्ने जमर्को गरिएको छ ।

## ४.९.३ विषयवस्तु एवम् भाव

रत्नप्रसाद अनामणि श्रेष्ठका हाइकुहरूमा समाजका विविध विषयवस्तु एवम् भावको प्रस्तुति पाइन्छ । उनको हाइकुमा पाइने सबैभन्दा महत्त्वपूर्ण कुरा भनेको आजको नेपाली समाजको कुरूप चित्रण हो । उनले संसदीय मार्क्सवादी पार्टी देखि लिएर माया प्रेममा भुलेको आजको आधुनिक पुस्तालाई समेत व्यङ्ग्य ठोकेका छन् । प्रायः हाइकुहरू पढ्दा पाठकहरूले नयाँनयाँ स्वाद पाउँदै जान्छन् (कवि, २०७१ : ३) । उनका हाइकुहरूमा भ्रष्टाचार, विकृति, विसङ्गति, अन्याय, अत्याचारको विरोध एवम् व्यङ्ग्यात्मक भाव, बलात्कृत महिलाको पीडा, माया-प्रीति एवम् शृङ्गारिक भाव, प्रकृति प्रेम, प्रकृति चित्रण, देशप्रेम, आडम्बरी समाजको चित्रण, बेपत्ता परिवारको पीडा, क्रान्तिकारी विचार, जीवनको

क्षणिकता, परदेशी नेपालीको पीडा, गरिबी, विश्वमा बढ्दै गएको अशान्ति, आशावादी स्वर, मानवीय पीडा, असुरक्षा, वर्तमान समाजको यथार्थ चित्रण, महिला हिंसा, विज्ञानको चमत्कारी, शिक्षा प्रेम, धोका, देशको आन्तरिक किचलो, बेरोजगार, नेपालीहरू विदेश जानुपर्ने बाध्यात्मक परिस्थितिको चित्रण, संस्कृति प्रेम, परनिर्भरता आदिजस्ता विविध भाव एवम् विषयवस्तुको प्रस्तुति पाइन्छ । उदाहरणका रूपमा उनका केही हाइकुहरूलाई यसरी प्रस्तुत गर्न सकिन्छ ।

समाज एवम् राजनीतिक विकृति, विसङ्गति तथा भ्रष्टाचारको विरोध साथै विविध विषयको व्यङ्ग्यात्मक प्रस्तुति अनामणिका हाइकुहरूमा पाइन्छ । जस्तै-

त्यो बलात्कार
यी बन्द आँखाहरू
कानूनी राज्य
(श्रेष्ठ, २०६१ : ४)

टल्किने मोती
भाग्यशाली जनता
प्राडो सांसद
(श्रेष्ठ, २०६१ : ७)

चुँडेको चंगा
बिना धड्कन मुटु
त्यो सरकार
(श्रेष्ठ, २०६१ : १४)

घाँस दाउरा
यो छोरीलाई शिक्षा
आधा संसार
(श्रेष्ठ, २०६१ : २१)

सेतो हिमाल
देशको मानचित्र
घुस्याहा नेता !
(श्रेष्ठ, २०६९ : ८)

विमानस्थल
रित्तो प्राधिकरण
भ्रमण वर्ष
(श्रेष्ठ, २०६९ : १५)

गाँजा चुरोट
कलेजको पढाइ
उन्नत शिक्षा
(श्रेष्ठ, २०६९ : १०८)

बन्धनहरू
स्वतन्त्रताको खोज
नारी समाज !
(श्रेष्ठ, २०६९ : ११९)

अनामणिका हाइकुहरूमा बलात्कार, महिला हिंसा जस्ता समाजका जल्दोबल्दो विषयवस्तु एवम् भावको प्रस्तुति पनि पाइन्छ । जस्तै -

त्यो बलात्कार
यी बन्द आँखाहरू
कानूनी राज्य
(श्रेष्ठ, २०६१ : ४)

महिला हिंसा
विभत्स बलात्कार
तातो घटना
(श्रेष्ठ, २०६९ : ३६)

अनामणिका हाइकुहरूमा माया-प्रीति तथा शृङ्गारिक विषयवस्तु एवम् भाव पनि पाइन्छ । जस्तै -

चर्चा चलेको
घर छेउको सिँढी
तिम्रो र मेरो !
(श्रेष्ठ, २०६९ : २१)

चिसो सिरेटो
चुम्बन साटासाट
नगरकोट !
(श्रेष्ठ, २०६९ : ३१)

उनका हाइकुहरूमा प्रकृति प्रेम एवम् प्रकृति चित्रण पनि पाइन्छ । उदाहरणका लागि-

हावाको स्पर्श
मेरो अन्तस्करण
जङ्गली फूल
(श्रेष्ठ, २०६९ : १)

दिन फेरियो
समय आँगनको
वसन्त ऋतु
(श्रेष्ठ, २०६९ : ५०)

अनामणिका हाइकुहरूमा सामाजिक यथार्थको प्रस्तुति पनि पाइन्छ । जस्तै -

जोस जाँगर
विदेशमा लगानी
नेपाली छोरो
(श्रेष्ठ, २०६१ : १६)

माइक्रो बस
त्यो गोंगबुको रुट
ठेलम ठेल !
(श्रेष्ठ, २०६९ : २६)

अनामणिका हाइकुहरूमा देशप्रेमको भाव पनि छताछुल्ल छरिएर रहेको पाइन्छ । जस्तै-

फाटेको चोलो
नेपाली पहिरन
आफ्नै गौरव
(श्रेष्ठ, २०६१ : ६)

एउटा युद्ध
माटोलाई बचाऊ
पीडा भुलेर !
(श्रेष्ठ, २०६९ : ९६)

उनका हाइकुहरूमा बेपत्ता परिवारको पीडा पनि मुखरित भएको पाइन्छ । जस्तै -

छोरा हरायो
आमा तिमी नरोऊ
उज्यालो पर्खौं
(श्रेष्ठ, २०६१ : ८)

साहूको ऋण
बा तिर्न भनी गाको
फेरि फर्केन !
(श्रेष्ठ, २०६९ : ५९)

अनामणिका हाइकुहरूमा व्यञ्जनात्मक रूपमा क्रान्तिकारी विचार पनि प्रकट भएको देखिन्छ । जस्तै -

अँध्यारो बाटो
राँको बाल्नु बटुवा
शुभकामना
(श्रेष्ठ, २०६१ : २९)

छ ठूलो ढिस्को
आँधीलाई पर्खनु
छिट्टै पग्लिन्छ !
(श्रेष्ठ, २०६९ :९४)

उनका हाइकुहरूमा देशमा व्याप्त बेरोजगारी, विदेशिनु पर्ने बाध्यात्मक परिस्थिति एवम् परदेशी नेपालीका पीडा जस्ता विषयवस्तु पनि पोखिएको पाइन्छ । जस्तै-

हेरि ल्याउँदा
म पनि विदेशमा
बस साहिँली
(श्रेष्ठ, २०६९ : ६८)

लामो समय
जन्मभूमिको याद
अन्तरद्वन्द्व
(श्रेष्ठ, २०६९ : ११५)

उनका हाइकुहरूमा गरिबी एवम् नेपालीहरू परनिर्भर बन्नुपरेको वर्तमान स्थितिको चित्रण पनि पाइन्छ । जस्तै -

मागेको धोती
कतिञ्जेल टिक्ने हो
जिउँदो लाश
(श्रेष्ठ, २०६१ : २४)

दु:खीको घर
प्रकृतिको प्रयोग
भोका र नाङ्गा
(श्रेष्ठ, २०६९ : ७२)

उनका हाइकुहरूमा विश्वमा व्याप्त अशान्ति एवम् असुरक्षाको भाव पनि मुखरित भएको पाइन्छ ।

गोला बारुद
आँगन वरिपरि
बन्दुक न्याय
(श्रेष्ठ, २०६१ : २२)

मनको पीर
सधैँ रक्तको होली
बुद्ध कहाँ छ ?
(श्रेष्ठ, २०६९ : ९५)

त्यसैगरी अनामणिका हाइकुहरूमा आडम्बरी समाजको चित्रण, जीवनको क्षणिकता, आशावादी स्वर, मानवीय पीडा, विज्ञानको चमत्कारी, शिक्षाप्रेम, धोका, देशको आन्तरिक किचलो, संस्कृति प्रेम जस्ता अनेकन विषयवस्तुहरूको प्रस्तुति पनि पाइन्छ । समाजका यावत विषयवस्तुहरूको व्यङ्ग्यात्मक एवम् विद्रोहात्मक तवरले प्रस्तुत गर्नमा हाइकुकार अनामणि सफल भएका देखिन्छन् । विकृति एवम् विसङ्गतिको भण्डाफोरमै हाइकुमा उनको कलम चलेको देखिन्छ ।

### ४.९.४ संरचना

हाइकुलाई कविताका अन्य उपविधाबाट अलग्याउने प्रमुख तत्त्व भनेको संरचना हो । संरचना हाइकुको अत्यन्त महत्त्वपूर्ण तत्त्व हो । हाइकुको सिद्धान्तले तोकेबमोजिमको निश्चित संरचनामा आबद्ध नभएमा उक्त रचनालाई हाइकु मान्न नसकिने कठोर नियम रहिआएको पाइन्छ । तसर्थ यस नियमानुसार अनामणिका हाइकु सङ्ग्रहहरूमा रहेका सम्पूर्ण हाइकुहरू पाँच, सात, पाँचको १७ अक्षरीय स्वरूपको तीन हरफमा आबद्ध रहेको देखिन्छ । तीन हरफमध्ये पहिलो हरफमा रहेका पाँच अक्षरले हाइकुको पृष्ठभूमिलाई अगाडि सारेको देखिन्छ । त्यस्तै दोस्रो हरफमा रहेको सात अक्षरले हाइकुकारको भाव एवम् मर्मलाई बुझाएको देखिन्छ भने तेस्रो तथा अन्तिम हरफमा रहेको पाँच अक्षरले निचोड अथवा अन्तिम परिणाम एक निमेषमा च्याट्ट छिनाएको देखिन्छ । त्यसकारण अनामणिका हाइकुहरू संरचनात्मक दृष्टिले उत्कृष्ट रहेको देख्न सकिन्छ । उदाहरणका रूपमा उनका केही हाइकुहरूलाई यसरी देखाउन सकिन्छ -

कागजी बाघ
सार्कको सम्मेलन
ढुकुटी रित्तो
(श्रेष्ठ, २०६१ : १०)

तिम्रो र मेरो
अटल शान हो यो
सगरमाथा
(श्रेष्ठ, २०६९ : १०४)

रत्नप्रसाद अनामणि श्रेष्ठको पहिलो हाइकु सङ्ग्रह **दुखेको घाउ** (२०६१) मा ३२ वटा हाइकुहरू समावेश भएको देखिन्छ । सानो आकारमा रहेको प्रस्तुत कृतिमा चित्रकार यादव श्रेष्ठद्वारा बनाइएका भाव अनुसारका चित्रहरू समावेश गरिएको देखिन्छ । यसका साथै उनको दोस्रो हाइकु सङ्ग्रह **शब्द पथमा** (२०६९) मा १२० वटा हाइकुहरू समावेश गरिएको देखिन्छ । तत्कालीन समयमा प्रकाशित नेपाली हाइकु सङ्ग्रहहरूमध्ये सबैभन्दा सानो आकारको मानिएको उक्त हाइकु सङ्ग्रहको लम्बाई २ इन्च र चौडाइ साढे १ इन्च रहेको देखिन्छ । विभिन्न विम्ब, प्रतीक एवम् अलङ्कारको प्रयोगले उनका हाइकुहरू चोटिला देखिन्छन् ।

### ४.९.५ भाषाशैली

रत्नप्रसाद अनामणि श्रेष्ठका हाइकुहरूमा सरल, सहज, चोटिलो एवम् आकर्षक भाषाशैलीको प्रयोग भएको पाइन्छ । थोरै शब्दहरूको प्रयोग गरे तापनि थोरैमा धेरै भन्न

सक्ने शब्दहरूको छनौटमा हाइकुकार सक्षम देखिन्छन् । उनले आफ्ना हाइकुहरूमा व्यङ्ग्यात्मक शैलीको प्रयोग बढी गरेको देखिन्छ । उदाहरणका रूपमा उनका केही हाइकुहरूलाई यसरी देखाउन सकिन्छ -

भुलेको दाउ
नेपाली संस्कृति
नेपाली भाउ

(श्रेष्ठ, २०६१ : २०)

राजनैतिक
अधिकांश विद्यार्थी
प्रयोगशाला

(श्रेष्ठ, २०६९ : ४६)

समाजसेवा
आधुनिक शोषण
आदरपूर्ण !

(श्रेष्ठ, २०६९ : ११४)

त्यस्तै उनले आफ्ना हाइकुहरूमा संस्कृतका भूमि, मृदुल, स्पर्श, पृथ्वी, वैद्य, बीभत्स, श्रद्धा, क्षमा, व्यर्थ, ऋतु, सृष्टि, बुद्धि आदिजस्ता तत्सम शब्दहरूको उचित प्रयोग गरेको देखिन्छ भने आखिर, कानुन, ब्रेकफास्ट, भ्याट, वेबसाइट, पोलिटब्युरो, माइक्रोबस, लोडसेडिङ्ग, ट्युबबेबी, कसुर, बटमलाइन जस्ता आगन्तुक शब्दहरूको पनि व्यापक प्रयोग गरेको देखिन्छ । यसका साथै ठिटो, घुर्की, पैँचो, बिटो, ढिस्को, खन्चुवा आदि जस्ता झर्रा नेपाली शब्दहरूको पनि प्रयोग भएको देखिन्छ ।

त्यसैगरी अनामणिका हाइकुहरूमा व्यञ्जनात्मक एवम् प्रतीकात्मक भाषाको पनि प्रयोग भएको पाइन्छ । जस्तै -

अँध्यारो बाटो
राँको बाल्नु बटुवा
शुभकामना

(श्रेष्ठ, २०६१ : २९)

लागू औषधी
निस्सासिएका फूल
अँध्यारो बाटो

(श्रेष्ठ, २०६९ : २२)

प्रस्तुत हाइकुहरूमध्ये पहिलो हाइकुमा क्रान्तिको बाटो कहालीलाग्दो एवम् अँध्यारो छ भन्दै क्रान्तिमा होमिएका क्रान्तिकारीलाई बटुवाको संज्ञा दिँदै अँध्यारो बाटोमा राँको बाल्नु अर्थात् कठिनाइहरूलाई हटाउँदै आफ्नो लक्ष्यमा पुग्नु भनी शुभकामना दिएको व्यञ्जनात्मक

भाव छचल्किएको पाइन्छ । दोस्रो हाइकुमा निस्सासिएका फूललाई लागू औषध सेवनकर्ताको प्रतीक मान्दै उनीहरूको भविष्य अन्धकार बाटोमा लम्किरहेको तर्फ सङ्केत गरेको देखिन्छ ।

## ४.९.६ विम्ब, प्रतीक एवम् अलङ्कार

रत्नप्रसाद अनामणि श्रेष्ठका हाइकु सङ्ग्रहहरूमा यथेष्ट मात्रामा विम्ब, प्रतीक एवम् अलङ्कारको प्रयोग भएको देखिन्छ ।

प्रकृतिको दर्शन केन्द्रित ऋतुबोधक एवम् मौसमी विम्ब विधान नै हाइकुको आन्तरिक सुन्दरता हो (धमला, २०६९ : घ) । अनामणिका हाइकुहरूमा विभिन्न किसिमका सामाजिक, प्राकृतिक, राजनैतिक, सांस्कृतिक आदि विम्बहरूको प्रयोग भएको देखिन्छ । उनका हाइकुहरूमा प्रयोग गरिएको प्राकृतिक विम्बलाई उदाहरणका रूपमा यसरी देखाउन सकिन्छ-

डुबेको घाम
कमालको धुलाइ
भिजेको लुगा (श्रेष्ठ, २०६१ : ९)

हावाको स्पर्श
मेरो अन्तस्करण
जंगली फूल ! (श्रेष्ठ, २०६९ : १)

चिसो सिरेटो
चुम्बन साटासाट
नगरकोट ! (श्रेष्ठ, २०६९ : ३१)

त्यसैगरी रत्नप्रसाद अनामणिका हाइकुहरूमा विभिन्न प्रतीकहरूको पनि प्रयोग भएको पाइन्छ । उदाहरणका लागि -

अँध्यारो बाटो
राँको बाल्नु बटुवा
शुभकामना (श्रेष्ठ, २०६१ : २९)

प्रस्तुत हाइकुमा क्रान्तिको प्रतीकका रूपमा राँको शब्दको प्रयोग भएको देखिन्छ । त्यसैगरी उनका हाइकुहरूमा पानीको फोका, बारुद धुँवा, चुँडेको चंगा, अमृत, फूल, असारे पानी, ठूला महल, ढिस्को, आँधी, माटो आदि जस्ता शब्दहरू प्रतीकका रूपमा आएको देखिन्छ ।

अनामणिका हाइकुहरूमा विभिन्न किसिमका शब्दालङ्कार एवम् अर्थालङ्कारहरूको प्रयोग भएको देखिन्छ । उदाहरणका रूपमा उनका केही हाइकुहरूलाई यसरी प्रस्तुत गर्न सकिन्छ ।

उनका हाइकुमा यमक अलङ्कारको प्रगोग पाइन्छ । जस्तै :

मान्छे जन्मनु

घटना परिघटना

हजारौँ प्यास (श्रेष्ठ, २०६९ : ३९)

उनका हाइकुमा अन्त्यानुप्रास अलङ्कारको प्रयोग पनि पाइन्छ । जस्तै -

भुलेको दाउ

नेपाली संस्कृति

नेपाली भाउ (श्रेष्ठ, २०६१ : २०)

त्यस्तै उनका हाइकुमा रूपक अलङ्कारको प्रयोग पनि पाइन्छ । जस्तै -

बालबालिका

धर्तीको फूलबारी

खराबी माली (श्रेष्ठ, २०६१ : १८) ।

उनका हाइकुमा उत्प्रेक्षा अलङ्कारको प्रयोग पनि पाइन्छ । जस्तै -

तिम्रो मुहार

भेटमा छचल्किने

असारे पानी (श्रेष्ठ, २०६९ : ३५)

अनामणिका हाइकुमा लोकोक्ति अलङ्कारको प्रयोग पनि पाइन्छ । जस्तै -

दुखेको घाउ

हुस्सुभित्रको काग

अनन्त यात्रा (श्रेष्ठ, २०६१ : २३)

उनका हाइकुहरूमा विरोधाभास अलङ्कारको प्रयोग पनि भएको पाइन्छ। जस्तै -

बुद्ध स्मारक

महाबौद्धको मःमः

खरिदकर्ता (श्रेष्ठ, २०६९ : १६)

उनका हाइकुहरूमा दृष्टान्त अलङ्कारको प्रयोग पनि भएको देखिन्छ। जस्तै -

लिन्या र दिन्या

यी मुलुकका शत्रु

जनतासँग (श्रेष्ठ, २०६९ : ९७)

## ४.९.७ निष्कर्ष

रत्नप्रसाद अनामणि श्रेष्ठ एक सशक्त हाइकुकार हुन् । २०५० सालदेखि हाइकु लेखनको थालनी गरे तापनि करिव १ दशकपछि २०६१ सालमा **दुखेको घाउ** शीर्षकको हाइकु सङ्ग्रह प्रकाशित गरेको देखिन्छ । हालसम्म आइपुग्दा उनको **दुखेको घाउ** (२०६१), **शब्द पथमा** (२०६९) एवम् नेवारी भाषामा रचित हाइकु सङ्ग्रह **लँय् लुगु किपा** (२०७४) गरी ३ वटा हाइकु सङ्ग्रह प्रकाशित भएको देखिन्छ। उनको दोस्रो हाइकु सङ्ग्रह तत्कालीन समयमा प्रकाशित हाइकुहरू मध्येकै सानो आकारको मानिन्छ। उनका तीन वटै हाइकु सङ्ग्रह अनामणि प्रकाशन नाला काभ्रेबाट प्रकाशन भएको देखिन्छ। उनका तीनवटै हाइकु सङ्ग्रहहरूमध्ये पहिलो हाइकु सङ्ग्रहमा ३२ वटा, दोस्रोमा १२० वटा एवम् तेस्रोमा ४४ वटा हाइकुहरू समावेश भएको देखिन्छ । उनका हाइकुहरूमा विशेषतः सामाजिक, राजनैतिक विकृति विसङ्गतिहरूप्रति व्यङ्ग्य एवम् विद्रोह पाइन्छ । यसका साथै अन्याय अत्याचारको विरोध, बलात्कृत महिलाको पीडा, माया-प्रीति एवम् शृङ्गारिक भाव, प्रकृति प्रेम, प्रकृति चित्रण, देशप्रेम, आडम्बरी समाजको चित्रण, बेपत्ता परिवारको पीडा, क्रान्तिकारी विचार, जीवनको क्षणिकता, परदेशी नेपालीको पीडा, मानवीय पीडा, असुरक्षा, विज्ञानको चमत्कारी, शिक्षा प्रेम जस्ता विषयवस्तुको प्रस्तुति पनि पाइन्छ ।

## परिच्छेद पाँच

# उपसंहार तथा निष्कर्ष

### ५.१ पृष्ठभूमि

प्रस्तुत शोधपत्रको शीर्षक रत्नप्रसाद अनामणि श्रेष्ठको जीवनी, व्यक्तित्व र कृतित्व रहेको छ । प्रस्तुत शोधकार्यलाई पाँच परिच्छेदमा विभाजन गरिएको छ । शोधपरिचय, रत्नप्रसाद अनामणि श्रेष्ठको जीवनी, रत्नप्रसाद अनामणि श्रेष्ठको व्यक्तित्व, रत्नप्रसाद अनामणि श्रेष्ठको कृतित्व र उपसंहार गरी पाँच परिच्छेदमा विभाजन गरिएको छ । यस उपसंहार वा निष्कर्ष परिच्छेदमा समग्र शोधको निष्कर्ष प्रस्तुत गरिएको छ ।

### ५.२ परिच्छेदगत सारांश

प्रस्तुत शोधपत्रलाई पाँच परिच्छेदमा विभाजन गरिएको छ । ती मध्ये पहिलो परिच्छेदको शीर्षक 'शोध परिचय' राखिएको छ । यस परिच्छेदमा शोध शीर्षक, शोध प्रयोजन, विषय परिचय, समस्याकथन, उद्देश्यकथन, पूर्वकार्यको समीक्षा, शोधको औचित्य तथा महत्त्व, शोध सीमा, शोध विधि र शोधपत्रको रूपरेखा प्रस्तुत गरिएको छ ।

प्रस्तुत शोधपत्रको दोस्रो परिच्छेदमा रत्नप्रसाद अनामणि श्रेष्ठको जीवनी पक्षको चर्चा गरिएको छ । यस परिच्छेदमा रत्नप्रसाद अनामणि श्रेष्ठको जन्म तथा जन्मस्थान पुर्ख्यौली तथा पारिवारिक पृष्ठभूमि, बाल्यकाल, शिक्षा, वैवाहिक जीवन र सन्तान, आर्थिक अवस्था, दिनचर्या र अभिरुचि, स्वभाव, विचार, बसोबास, भ्रमण, शैक्षिक तथा साहित्यिक प्रेरणा र प्रभाव लेखन र प्रकाशनको थालनी, हालसम्म प्रकाशित कृतिहरू, संलग्न सङ्घ संस्थाहरू, सम्मान तथा पुरस्कार आदि विषयको चर्चा गरिएको छ ।

प्रस्तुत शोधपत्रको तेस्रो परिच्छेदमा रत्नप्रसाद अनामणि श्रेष्ठको व्यक्तित्व पक्षको चर्चा गरिएको छ । यसमा अनामणिको साहित्यिक, शारीरिक, अध्ययनशील, सामाजिक, सङ्घर्षशील, धार्मिक, उद्यमी, शिक्षक, स्वभावगत, चिन्तनशील, चित्रकार, खेलाडी, वाद्यवादक, पत्रकार, सम्पादक, राजनीतिक, लेखक, निर्देशक जस्ता व्यक्तित्वको चर्चा गरिएको छ ।

प्रस्तुत शोधपत्रको चौथो परिच्छेदमा रत्नप्रसाद अनामणि श्रेष्ठको कृतित्वको बारेमा चर्चा गरिएको छ । यस क्रममा उनको **लाज हराएका मान्छेहरू** कविता सङ्ग्रह, **फूलको माया लागेपछि, मेरो गोरेटोमा तिम्रो छायाँ** र **भो नखिच तस्बिर** जस्ता तीनवटा मुक्तक सङ्ग्रह, **दाउहरू फरक-फरक** र **ख्याल ख्यालमै सल्क्यो जिन्दगी** जस्ता दुईवटा गजल सङ्ग्रह, **दुखेको घाउ** र **शब्द पथमा** जस्ता दुईवटा हाइकु सङ्ग्रहको व्याख्या एवम् विश्लेषण गरिएको छ ।

प्रस्तुत शोधपत्रको पाँचौं परिच्छेदमा शोधपत्रको उपसंहार तथा निष्कर्ष दिइएको छ । यसका साथै मूल पाठका सन्दर्भग्रन्थ सूची राखिएको छ र अन्त्यमा परिशिष्ट खण्ड समेत राखिएको छ । उक्त खण्डमा शोधनायकको तस्बिर एवम् शोधार्थीको परिचय समावेश गरिएको छ ।

## ५.३ समष्टिगत निष्कर्ष

रत्नप्रसाद अनामणि श्रेष्ठको जीवनी, व्यक्तित्व र कृतित्वका विषयमा सम्बन्धित परिच्छेदहरूमा गरिएको अध्ययन एवम् विश्लेषणबाट उनी के-कस्ता व्यक्तित्व हुन् भन्ने प्रायः स्पष्ट भइसकेको छ । यसै आधारमा यस परिच्छेदमा निष्कर्ष प्रस्तुत गरिएको छ । अनामणिले दिएको योगदानका आधारमा उनको मूल्याङ्कन गर्ने जमर्को गरिएको छ ।

रत्नप्रसाद अनामणि श्रेष्ठको जन्म वि.सं. २०२६ साल अषाढ शुक्लपक्ष दशमी, ३८ घडा र २० पलाको समयमा पिता लालबहादुर श्रेष्ठ एवम् माता जनकमायाको कोखबाट तेस्रो सन्तानका रूपमा काभ्रे जिल्ला साविकको उग्रचण्डी गा.वि.स.नाला वार्ड नं. २ टुपिचा टोल, हालको बनेपा न.पा. वार्ड नं. ४ मा भएको थियो । यद्यपि उनका सम्पूर्ण कागजपत्रका अनुसार जन्ममिति भने २०२६ असोज ६ गते रहेको देखिन्छ । प्राकृतिक सौन्दर्य एवम् ऐतिहासिक नगरी नाला जस्तो पवित्र स्थलमा जन्मेर हुर्कन पाएका अनामणिमा कवित्वको भाव प्रस्फुटित हुनुमा आफ्नो बाल्यकालको वातावरणीय प्रभाव यथेष्ट रहेको ठम्याउन सकिन्छ । उनको बाल्यकाल आफ्नै आमाबुबा एवम् परिवारका साथमा हाँस्दै, खेल्दै बितेको देखिन्छ ।

रत्नप्रसाद अनामणि श्रेष्ठले आफ्ना बुबा लालबहादुरबाट साउँ अक्षर सिकेका थिए । पछि ६ वर्षको उमेर पुगेपछि नालाको आफ्नै गाउँमा रहेको चण्डेश्वरी मा.वि. बाट कक्षारम्भ गरी सोही स्कुलबाट एस.एल.सी. उत्तीर्ण गरेका थिए । सुरुमा पढाइमा साह्रै कमजोर रहेका

अनामणिको कक्षा ४ पछि सुधार हुँदै गएको थियो । २०४३ सालमा दोस्रो श्रेणीमा एस.एल.सी.उत्तीर्ण गरे पश्चात् भक्तपुर बहुमुखी क्याम्पसमा आइ.एस.सी. अध्ययन गर्न थाले । आफ्नो पाउरोटी उद्योग सञ्चालन गर्दै आइ.एस.सी. गरेका उनको कार्यव्यस्तताको कारण पढाई खासै राम्रो हुन सकेन । जसोतसो २०४६ सालमा आइ.एस.सी. उत्तीर्ण गरेपछि चण्डेश्वरी मा.वि.मा शिक्षकको रूपमा कार्य गरी चैतन्य बहुमुखी क्याम्पसबाट नेपाली र स्वास्थ्य तथा शारीरिक शिक्षा विषयमा क्याम्पस सेकन्ड भई बी.एड. उत्तीर्ण गरे । तत्पश्चात् त्रि.वि.मा प्राइभेट परीक्षा दिइ २०५३ सालमा नेपाली विषयबाट एम.ए. उत्तीर्ण गर्न सफल भए । हाल उनी विद्यावारिधी (पी.एच.डी.) का लागि **भक्तपुरको लोक साहित्य परम्परा** शीर्षकमा नेपाल संस्कृत विश्वविद्यालयबाट अनुसन्धानरत छन् । यसका साथै उनले थुप्रै धर्मशास्त्र, समाजशास्त्र, इतिहास, राजनीतिशास्त्र, दर्शन, साहित्य आदिको विशिष्ट अध्ययन गरी आफूलाई विशिष्ट बुद्धिजीविका रूपमा स्थापित गरेका छन् ।

रत्नप्रसाद अनामिण श्रेष्ठको विवाह २६ वर्षको उमेरमा २०५३ सालमा काभ्रे जिल्ला नासिका गा.वि.स. साँगा भैंसेपाटीकी शान्ति श्रेष्ठसँग भएको थियो । हाल उनका दुई छोरा रुजेन र सुजेन रहेका छन् ।

शारीरिक बनावटका दृष्टिले रत्नप्रसाद अनामणि श्रेष्ठको उचाई ४ फिट ९ इन्च र तौल ७६ के.जी. रहेको छ । गहुँगोरो वर्ण, गोलो मुखाकृति, होचो कदका मोटामोटा देखिने अनामणि प्रायजसो सर्ट र पाइन्ट लगाएर बस्ने गर्दछन् । नीलो सर्ट र पाइन्ट उनलाई मनपर्ने पोसाक हो । उनको शारीरिक व्यक्तित्व आकर्षक तथा हृष्टपुष्ट नै देखिन्छ । उनी सादा जीवन र उच्च विचार भएका व्यक्ति हुन् ।

रत्नप्रसाद अनामणि श्रेष्ठ साहित्य सेवामा जति सक्रिय देखिन्छन्, समाजसेवामा पनि उत्तिकै परिचित छन् । उनी विभिन्न सामाजिक एवम् साहित्यिक सङ्घ संस्थामा आबद्ध रही कार्य समेत गर्दै आएका छन् । सबैसँग मिल्न सक्ने एवम् बहिर्मुखी व्यक्तित्वका कारण उनी साथीभाइ, इष्टमित्र माभ्रमा प्रिय पात्र बनेका देखिन्छन् । सामाजिक एवम् साहित्यिक क्षेत्रमा निरन्तर सङ्घर्षशील रहेका उनको जीवनको अमूल्य समय सामाजिक एवम् साहित्यिक कार्यका लागि समर्पण गरेका हुनाले सङ्घ संस्थाबाट सम्मानित पनि भएका छन् । स्वदेशका विभिन्न रमणीय, धार्मिक, पयर्टकीय, ऐतिहासिक क्षेत्रको भ्रमण गरेका अनामणिले भारत तथा चीनका विभिन्न शहरहरूको भ्रमण समेत गरेका छन् । सादा जीवन उच्च

विचारमा आस्था राख्ने अनामणि खानामा साधारण दाल,भात, तरकारी, अचार एवम् नेवारी परिकारहरू मन पराउँदछन् ।

रत्नप्रसाद अनामणि श्रेष्ठको सानैदेखि साहित्यमा झुकाव रहेको थियो । खासगरी ६-७ कक्षा पढ्ने समयमा अनिवार्य नेपाली विषयमा पत्रपत्रिका शीर्षकको पाठ पढेपछि उनमा पढ्नुपर्छ भन्ने भावनाको विकास भएको थियो । यसरी पढाइमा मन जान थालेपछि साहित्यमा पनि क्रमिक झुकाव हुँदै गयो । उनले विद्यालयमा आयोजित विभिन्न साहित्यिक कार्यक्रमहरूमा भाग लिँदै जान थाले । यसरी उनको साहित्य तर्फको झुकाव देखेर गुरु दामोदर अधिकारीले साहित्यकार मोहन दुवालसँग भेट गराइदिए । मोहल दुवालसँगको भेटपछि उनको व्यक्तित्व एवम् कृतित्वबाट अनामणि निकै नै प्रभावित भएका थिए । अनामणिले आफ्नै टोलबाट प्रकाशित **भिन्तुना** भित्ते पत्रिकामा नेवारी भाषामा कविता लेखेर साहित्यिक यात्रा थालनी गरेको भनिएता पनि हाल सो कविता प्राप्त छैन । त्यसकारण उनको साहित्यमा औपचारिक शुरुवात भने २०४५ सालमा भक्तपुरबाट प्रकाशित हुने **पञ्चायत** मासिक पत्रिकाको वर्ष ६, अङ्क ८ मा 'नेपाल आमाको छातीमा शान्ति फिजाऊ' शीर्षकको कविता प्रकाशित गरेर भएको मानिन्छ । त्यसपछि उनका 'मान्छेहरू' (२०४७), 'यात्रा अझै बाँकी छ'(२०५१), शीर्षकका फुटकर रचनाहरू प्रकाशित भए । कविता, मुक्तक, गजल एवम् हाइकु जस्ता कविताका विभिन्न उपविधामा कलम चलाएका अनामणिका हालसम्म आइपुग्दा **फूलको माया लागेपछि** (मुक्तक सङ्ग्रह, २०४८), **दुखेको घाउ** (हाइकु सङ्ग्रह, २०६१), **दाउहरू फरक-फरक** (गजल सङ्ग्रह, २०६२), **शब्द पथमा** (हाइकु सङ्ग्रह, २०६९), **मेरो गोरेटोमा तिम्रो छायाँ** (मुक्तक सङ्ग्रह, २०७३), **ख्याल ख्यालमै सल्क्यो जिन्दगी** (गजल सङ्ग्रह, २०७३), **लाज हराएका मान्छेहरू** (कविता सङ्ग्रह, २०७३), **भो नखिच तस्बिर** (मुक्तक सङ्ग्रह, २०७४) र नेवारी भाषाको हाइकु सङ्ग्रह **लँय् लुगु किपा** (२०७४) जस्ता साहित्यिक कृतिहरू प्रकाशित भएको पाइन्छ ।

रत्नप्रसाद अनामणि श्रेष्ठले कविता एवम् यसका अन्य उपविधाहरूमा आफ्नो कलम जोडदार रूपले चलाएको देखिन्छ । उनका समग्र रचनाहरू मुक्तलयमा रचिएका देखिन्छन् । उनले समग्र कृतिहरूमा आफ्नो छुट्टाछुट्टै खालको विधागत विशेषता छोड्न सफल भएका छन् ।

रत्नप्रसाद अनामणि श्रेष्ठले रचना गरेको एकमात्र कविता सङ्ग्रह **लाज हराएका मान्छेहरू** (२०७३) हो । आफ्नो साहित्यिक यात्रा कविता लेखेर नै २०४५ बाट सुरु गरेको

भए तापनि सङ्ग्रहका रूपमा भने धेरै लामो समयपछि मात्र प्रकाशन गर्न सफल भएका देखिन्छन् । २० वटा कविताहरू रहेको प्रस्तुत कृति उनका अन्य कृतिको तुलनामा अब्बल देखिन्छ । यसमा समकालीन मानिसका पीडा, भ्रष्टाचार, बेथिति, अन्याय, अत्याचार, गरिबी, प्रकृति चित्रण, देशप्रेम, नेताका खोक्रा भाषण, शान्तिको चाहना, भातृत्व प्रेम, नाकावन्दी पछिको पीडा आदि जस्ता भाव एवम् विषयवस्तुहरू पाउन सकिन्छ । खासमा भन्नुपर्दा समकालीन समाजका कथा, व्यथा एवम् पीडाहरू यस सङ्ग्रहमा मुखरित भएको पाइन्छ ।

रत्नप्रसाद अनामणि श्रेष्ठले तीनवटा मुक्तक सङ्ग्रहहरू **फूलको माया लागेपछि** (२०४८), **मेरो गोरेटोमा तिम्रो छायाँ** (२०७३) एवम् **भो नखिच तस्बिर** (२०७४) प्रकाशित गरेको देखिन्छ । उनको पहिलो मुक्तक सङ्ग्रहमा ३२ वटा, दोस्रोमा ४० वटा एवम् तेस्रोमा ३७ वटा मुक्तकहरू समावेश रहेको देख्न सकिन्छ । उनको मुक्तक लेखनीको मूल प्रवृत्ति शृङ्गारिक भए पनि यसका अलावा जीवनको पीडादायिक भोगाइ, देश छोड्दाको पीडा, अभाव, देशप्रेम, इमान्दारीपन, कृषिप्रतिको मोह, क्रान्तिप्रेम, मानवीय दुष्प्रवृत्तिको विरोध आदिजस्ता भावहरू पनि व्यक्त भएका छन् ।

रत्नप्रसाद अनामणि श्रेष्ठका दुई वटा गजल सङ्ग्रह **दाउहरू फरक फरक** (२०६२) एवम् **ख्याल ख्यालमै सल्क्यो जिन्दगी** (२०७३) प्रकाशित भएको देखिन्छ । जस अन्तर्गत पहिलो सङ्ग्रह **दाउहरू फरक-फरक** मा २७ वटा एवम् दोस्रो सङ्ग्रह **ख्याल ख्यालमै सल्क्यो जिन्दगी**मा ३८ वटा गजलहरू समावेश गरिएको पाइन्छ । उनको पहिलो गजल सङ्ग्रहमा रहेका गजलहरूमा व्यङ्ग्य,विद्रोह, सामाजिक यथार्थको चित्रण, शोषण, गरिबी, अभावका साथै असन्तुष्टि, निराशा, पीडा, दुःख जस्ता मानवीय अनुभूतिहरूको प्रस्तुति पाइन्छ । साथै केही गजलहरू श्रृङ्गारिक भावले ओतप्रोत पनि रहेको देख्न सकिन्छ । त्यस्तै उनको दोस्रो गजल सङ्ग्रहमा माया-प्रीति, मिलन-विछोड जस्ता प्रेमभावयुक्त, शृङ्गारिक गजलको बाहुल्यता रहेको देखिन्छ । उनले विशेषगरी माया प्रीतिकै सेरोफेरोमा रहेर समाजका यावत् विषयहरू खोतल्ने प्रयास गरेको देखिन्छ । वर्गीय एवम् जातीय विभेद, परदेशीको पीडा, जीवनका पीडादायिक भोगाई, ग्रामीण मोह, भ्रष्टाचार एवम् वेथितिको विरोध, दुःख, पीडा, इमान्दारीपन, प्रकृतिवर्णन, आडम्बरको विरोध, स्वाभिमान जस्ता यावत् विषयवस्तु एवम् भाव माया-प्रीतिकै सेरोफेरोमा रहेर उनले आफ्नो दोस्रो गजल सङ्ग्रहमा प्रस्तुत गरेको देखिन्छ ।

रत्नप्रसाद अनामणि श्रेष्ठले तीन वटा हाइकु सङ्ग्रह **दुखेको घाउ** (२०६१), **शब्द पथमा** (२०६९) र नेवारी भाषामा लिखित हाइकु सङ्ग्रह **लँय् लुगु किपा** (२०७४) प्रकाशित गरेको देखिन्छ । उनको **दुखेको घाउ** एवम् **शब्द पथमा** हाइकु सङ्ग्रहहरूमा क्रमशः ३२ र १२० वटा हाइकुहरू समावेश भएको देखिन्छ । उनका हाइकुहरूमा विशेषतः सामाजिक, राजनैतिक विकृति विसङ्गतिहरूप्रति व्यङ्ग्य एवम् विद्रोहात्मक भाव पाइन्छ । यसका साथै शृङ्गारिक भाव, प्रकृति प्रेम, प्रकृति चित्रण, देशप्रेम, आडम्बरी समाजको चित्रण, बेपत्ता परिवारको पीडा, क्रान्तिकारी विचार, जीवनको क्षणिकता, परदेशी नेपालीको पीडा, मानवीय पीडा, असुरक्षा, विज्ञानको चमत्कारी, शिक्षाप्रेम आदि जस्ता विषयवस्तुको प्रस्तुति पनि पाइन्छ ।

उनका समग्र साहित्यिक कृतिहरूमध्ये **फूलको माया लागेपछि, दुखेको घाउ, दाउहरू फरक फरक, शब्द पथमा** एवम् नेवारी भाषामा लिखित हाइकु सङ्ग्रह **लँय् लुगु किपा** अनामणि प्रकाशन, काभ्रेबाट प्रकाशित भएको देखिन्छ भने **लाज हराएका मान्छेहरू, मेरो गोरेटोमा तिम्रो छायाँ, ख्याल ख्यालमै सल्क्यो जिन्दगी** एवम् **भो नखिच तस्बिर** जस्ता कृतिहरू गौरी पब्लिक रिलेसन एन पब्लिकेशन, काठमाडौँबाट प्रकाशित भएको देखिन्छ ।

रत्नप्रसाद अनामिण श्रेष्ठका समग्र साहित्यिक कृतिहरू सरल, सहज एवम् आकर्षक भाषाशैलीमा रचिएको पाइन्छ । उनले आवश्यकता अनुसार तत्सम, तद्भव, आगन्तुक एवम् झर्रा नेपाली शब्दहरूको प्रयोग गरेका छन् । विभिन्न विम्ब-प्रतीकहरूको प्रयोगले उनका सृजनाहरू कलात्मक भएका देखिन्छन् । उपमा, उत्प्रेक्षा, रूपक, लोकोक्ति, अर्थान्तरन्यास, दृष्टान्त, विरोधाभास जस्ता अर्थालङ्कार एवम् विभिन्न शब्दालङ्कारहरूद्वारा उनका रचनाहरू सुन्दर, मनमोहक एवम् आकर्षक देखिन्छन् । गद्य एवम् मुक्त लयमा रचे तापनि उनका रचनाहरू सुललित एवम् श्रुतिमधुर रहेका देखिन्छन् ।

यसरी समग्र साहित्य लेखनको मूल्याङ्कन गरेर उनको साहित्यिक प्रवृत्ति बारे भन्नुपर्दा गजल एवम् मुक्तक लेखनमा श्रृङ्गारिकता, हाइकु लेखनमा व्यङ्ग्य एवम् विद्रोहात्मकता र कविता लेखनमा यथार्थता रहेको देखिन्छ । वि.सं.२०४५ सालदेखि हालसम्म निरन्तर रूपमा साहित्य साधनामा प्रवृत्त रहेकाले नेपाली साहित्यमा उनको महत्त्वपूर्ण योगदान रहेको देख्न सकिन्छ ।

समग्रमा रत्नप्रसाद अनामणि श्रेष्ठ एक कुशल कवि, मुक्तककार, गजलकार एवम् हाइकुकार रहेको देखिन्छन् । विभिन्न सामाजिक तथा साहित्यिक सङ्घ संस्थामा आबद्ध अनामणि मूलतः साहित्यसेवीका रूपमा प्रतिष्ठित छन् । उनले नेपाली भाषा, साहित्य आदि क्षेत्रका सक्रिय एक कर्मशील योद्धाका रूपमा आफ्नो स्थान बनाएको देखिन्छ ।

## ५.४ रत्नप्रसाद अनामणि श्रेष्ठ सम्बन्धी सम्भावित शोधशीर्षकहरू

रत्नप्रसाद अनामणि श्रेष्ठबारे पुनः अध्ययन गर्न चाहने शोधार्थीहरूले निम्नलिखित शोध शीर्षकहरूमा शोधकार्य गर्नु उपयुक्त हुनेछ ।

क) **लाज हराएका मान्छेहरू** (२०७३) कविता सङ्ग्रहको कृतिपरक अध्ययन ।

ख) रत्नप्रसाद अनामणि श्रेष्ठका मुक्तक सङ्ग्रहहरूको अध्ययन ।

ग) रत्नप्रसाद अनामणि श्रेष्ठका गजल सङ्ग्रहहरूको अध्ययन ।

घ) रत्नप्रसाद अनामणि श्रेष्ठका हाइकु सङ्ग्रहहरूको अध्ययन ।

ङ) **ख्याल ख्यालमै सल्क्यो जिन्दगी** (२०७३) गजल सङ्ग्रहको कृतिपरक अध्ययन ।

# सन्दर्भसामग्री


अधिकारी, क्षेत्रप्रताप (२०६४), **हाइकु र हाइजिन**, भक्तपुर : अक्षर प्रकाशन ।

उपाध्याय, केशवप्रसाद (२०५५), **पूर्वीय साहित्य सिद्धान्त**, (ते.सं.) ललितपुर : साझा प्रकाशन ।

कवि, रसुवाली (२०७०), **नवरस,** वर्ष ३०, अङ्क २८, पृष्ठ ३ ।

......., ..........(२०७१), **नव जनता**, वर्ष ११, अङ्क २३, पृष्ठ ३ ।

गौतम, लक्ष्मणप्रसाद (२०६९), **कविताको सैद्धान्तिक विमर्श**, काठमाडौँ : पाठ्यसामाग्री पसल ।

ढकाल, दामोदर (दीपक) (२०७३), **लाज हराएका मान्छेहरू**, काठमाडौँ : गौरी पब्लिक रिलेशन एन पब्लिकेशन ।

त्रिपाठी, वासुदेव र अन्य (२०६०), **नेपाली कविता भाग-**४, (चौ.सं.), ललितपुर : साझा प्रकाशन ।

......., .......... (२०६५), **नेपाली कविता भाग-**४, (पाँ.सं.), ललितपुर : साझा प्रकाशन ।

थापा, मोहनहिमांशु (२०७३), **साहित्य परिचय** (छै.सं.), ललितपुर : साझा प्रकाशन ।

दुवाल, मोहन (२०४८), **फूलको माया लागेपछि**, आवरण पृष्ठ, काभ्रे : अनामणि प्रकाशन ।

......, ...........(२०५६), **काभ्रे टाइम्स,** वर्ष ३, अङ्क ६, पृष्ठ ३३ ।

......, ...........(२०५६), **काभ्रे टाइम्स,** वर्ष ३, अङ्क १५, पृष्ठ : ४ ।

दुवाल, सिर्जना (२०६२), **जनमत**, वर्ष २२, अङ्क ६ : पृष्ठ : ३३ ।

धमला, चेतनाथ (२०६९), **शब्द पथमा**, पृष्ठ : ग, काभ्रे : अनामणि प्रकाशन ।

......., ..........(२०७४), **भो नखिच तस्बिर**, पृष्ठ : ६, काठमाडौँ : गौरी पब्लिक रिलेशन एन पब्लिकेशन ।

नेपाल, शैलेन्दुप्रकाश (२०७३), **कवित्व विचरण**, पृष्ठ : ४१-४६, काठमाडौँ : युनिक एजुकेशन पब्लिसर्स प्रा.लि. ।

न्यौपाने, घनश्याम परिश्रमी (२०६२), **दाउहरू फरक-फरक**, भूमिका, काभ्रे : अनामणि प्रकाशन ।

पाँडे, रामकुमार (२०६१), **नेपाली हाइकु,** वर्ष २, अङ्क १, पूर्णाङ्क २, पृष्ठ : ५-१० ।

पाण्डे, उमेश (२०६३), **देशप्रेम**, वर्ष ६, अङ्क २६, पृष्ठ : ६ ।

पोखरेल, बालकृष्ण र अन्य (२०५८), **नेपाली बृहत् शब्दकोश**, (पाँ.सं.), काठमाडौँ : ने.रा.प्र.प्र. ।

बराल, कृष्णहरि (२०६८), **गजल सिद्धान्त र परम्परा** (दो.सं.), ललितपुर : साझा प्रकाशन ।

बानियाँ, तेजप्रकाश (२०७४), **संसाक**, वर्ष ५, अङ्क २, पृष्ठ : ९ ।

राई, प्रकाश (पुष्पक) (२०७३), **ख्याल ख्यालमै सल्क्यो जिन्दगी**, काठमाडौँ : गौरी पब्लिक रिलेशन एन पब्लिकेशन ।

रिमाल, नारायणाचार्य कौशिक (२०७४), **संसाक**, वर्ष ४, अङ्क १८, पृष्ठ : ४ ।

लामिछाने, शङ्कर (२०२७), **रूपरेखा**, वर्ष ११, अङ्क ५, पूर्णाङक ११३, पृष्ठ :२९-३० ।

लुइटेल, खगेन्द्रप्रसाद (२०६०), **कविता सिद्धान्त र नेपाली कविताको इतिहास,** काठमाडौँ : ने.रा.प्र.प्र. ।

श्रेष्ठ, रत्नप्रसाद अनामणि (२०४८), **फूलको माया लागेपछि**, काभ्रे : अनामणि प्रकाशन ।

......., ............... (२०६१), **दुखेको घाउ**, काभ्रे : अनामणि प्रकाशन ।

......., ................ (२०६२), **दाउहरू फरक-फरक**, काभ्रे : अनामणि प्रकाशन ।

......., ................. (२०६९), **शब्द पथमा**, काभ्रे : अनामणि प्रकाशन ।

......., ................. (२०७३), **मेरो गोरेटोमा तिम्रो छायाँ,** काठमाडौँ : गौरी पब्लिक रिलेसन एन पब्लिकेशन ।

……., …………… (२०७३), **ख्याल ख्यालमै सल्क्यो जिन्दगी,** काठमाडौँ : गौरी पब्लिक रिलेसन एन पब्लिकेशन ।

……., ………….. (२०७३), **लाज हराएका मान्छेहरू,** काठमाडौँ : गौरी पब्लिक रिलेसन एन पब्लिकेशन ।

……., ………………. (२०७४), **भो नखिच तस्बिर,** काठमाडौँ : गौरी पब्लिक रिलेसन एन पब्लिकेशन ।

……., ………………. (२०७४), **समय छाल,** काठमाडौँ : गौरी पब्लिक रिलेसन एन पब्लिकेशन ।

श्रेष्ठ, किरण (२०७४), **समाचार पत्र,** वर्ष २३, अङ्क १३७, पृष्ठ : ६ ।

शर्मा, मोहनराज र लुइटेल, खगेन्द्रप्रसाद (२०६३), **पूर्वीय र पाश्चात्य साहित्य सिद्धान्त**, ( दो.संस्क.), काठमाडौँ : विद्यार्थी पुस्तक भण्डार ।

सापकोटा, प्रभात (२०५५), **तादी**, वर्ष ४, अङ्क ५, पृष्ठ : १६-२० ।

सापकोटा, माधव (२०७३), **लाज हराएका मान्छेहरू,** काठमाडौँ : गौरी पब्लिक रिलेसन एन पब्लिकेशन ।

सिग्द्याल, सोमनाथ (२०४४), **आदर्श राघव**, ललितपुर : साझा प्रकाशन ।

सुवेदी, अभि (२०४४), **जापानी हाइकु हिजो र आज**, ललितपुर : साझा प्रकाशन ।

हमाल, जीवन (२०७१), **संकल्प यात्रा**, वर्ष १, अङ्क २, पृष्ठ : २१ ।

## परिशिष्ट- क

## शोधनायकको फोटो



**शोधनायक**

**रत्नप्रसाद अनामणि श्रेष्ठ**



## परिशिष्ट - ख

# शोधार्थीको परिचय

| | |
|---|---|
| नाम | : दीपेन्द्र पौडेल |
| जन्ममिति | : २०४५/०२/०८ |
| जन्मस्थान | : बाग्लुङ-१२, बाग्लुङ (हाल कालिका-१, चितवन) |
| पिता | : राधाकृष्ण पौडेल |
| माता | : देवी पौडेल |
| नागरिकता | : नेपाली |
| वैवाहिक अवस्था | : विवाहित |

## शैक्षिक विवरण

| | |
|---|---|
| प्रवेशिका | : बाबा बाटिका मा.वि., तिलगङ्गा, काठमाडौं । |
| आइ. ए. | : ब्रिलीयन्ट बहुमुखी क्याम्पस, सिफल, काठमाडौं । |
| बी. ए. | : कैलाशकुट बहुमुखी क्याम्पस, चाबहिल, काठमाडौं । |
| एम. ए. | : पशुपति बहुमुखी क्याम्पस, चाबहिल, काठमाडौं । |
| सम्पर्क नं. | : ९८४११६८२६१ |